**प्रकाशक**
सोसल साइन्स बहा:
हिमाल एसोसिएसन
पाटनढोका, ललितपुर

**मुद्रण**
जगदम्बा प्रकाशन
हरिसिद्धि, ललितपुर
फोन: ९७७ १ ५५७०१७

**सम्पर्क**
बहा: जर्नल
सोसल साइन्स बहा:
हिमाल एसोसिएसन
पाटनढोका, ललितपुर
इमेल: info@bahajournal.org
वेबसाइट: www.bahajournal.org

# बहा: जर्नल

वर्ष २ · अङ्क २ असार २०६२

## विषयसूची

हाम्रो जस्तो सामाजिक विविधता बोकेको मुलुकमा विकासका आन्तरिक तथा बाह्य बाधक र साधक पक्षहरूको खोजमा सैद्धान्तिक ज्ञानलाई फराकिलो बनाउने उद्देश्यअनुरूपको यस प्रयासले लेखकहरूको लेखकीय जाँगरलाई समाज तथा संस्कृतिको विश्लेषणतर्फ केन्द्रित गर्ने छ भन्ने अपेक्षा हामीले लिएका छौं। सामाजिक विज्ञानका क्षेत्रमा हुँदै आएका अध्ययन तथा अनुसन्धानका विषयहरू सीमित मात्रामा सार्वजनिक बहसको रूपमा अगाडि आएको पाइन्छ। यसै पृष्ठभूमिमा समय र सन्दर्भसँग मेल खाने गरी सामाजिक संरचना, सांस्कृतिक मूल्य-मान्यता र घटनाक्रमहरूको व्याख्या गर्ने प्रयासस्वरूप बहाः जर्नलले निरन्तरता पाएको छ।

पहिलो अङ्कका विषयवस्तु, भाषाशैली आदिका विषयमा विद्वान् पाठकहरूबाट प्राप्त सुझाउ, सल्लाह, विचार र आलोचनाहरू हाम्रा लागि पथ-प्रदर्शक बनेका छन्। यस अङ्कमा विधागत विविधतालाई समेट्दै ६ ओटा लेख र दुईओटा पुस्तक समीक्षाहरू समावेश गरिएको छ। सुजित कर्ण र जीवन शर्माद्वारा लेखिएको '*नागरिक समाज, भ्रष्टाचारसम्बन्धी सङ्कथन र प्रजातन्त्र*' शीर्षकको लेखमा नेपाली समाजमा नागरिक समाजको भूमिका, प्रजातन्त्र र भ्रष्टाचारसम्बन्धी विषयमाथि केन्द्रित छ। बैरागी काइँलाद्वारा लिखित '*आदिवासी जनजातिको परिप्रेक्ष्यमा पहिचानको राजनीति र भाषा* मा नेपाली समाजको भाषिक विविधता र असमान व्यवहारलाई चिरफार गर्ने प्रयास गरिएको छ। कुन्दन अर्यालद्वारा लिखित '*नयाँ दिशातर्फ उन्मुख नेपाली आमसञ्चार र केही सैद्धान्तिक चर्चा* लेखमा नेपालको माघ १९ पछि सञ्चार क्षेत्रमा देखिएका समस्या र चुनौतीहरूलाई नजिकबाट विश्लेषण गरिएको छ। थियोडर रिकार्डीको '*रिचार्ड वाग्नेरको काल्पनिक प्राची* मा वाग्नेरका प्राचीसम्बन्धी अवधारणा र सिद्धान्तहरू प्रस्तुत गरिएका छन्। क्षेत्रगत अध्ययनमा नभई कल्पनामा आधारित वाग्नेरका लेख र नाटकहरूमा व्यापक प्रयोग पाएको ब्राह्मणवाद र बौद्ध धर्मसम्बन्धी धारणाहरूको स्रोतको श्रेय नेपाललाई दिइएको पाइँदैन। यस तथ्यलाई लेखकले पश्चिमी मुलुकमा हुन सक्ने प्राचीसम्बन्धी सम्भावित गलत धारणाहरूको चिरफार गर्दै उदाङ्गो पार्ने प्रयत्न गरेका छन्।

सम्भ्रान्त राणाहरूको अनुसन्धनामा आधारित स्टेफनी लोट्टरको एन्थ्रोपोलोजी म्याटरस्मा प्रकाशित लेख *नेपालमा सम्भ्रान्त वर्गको रूपान्तरण: एक अध्ययन* लाई भावानुवाद गरी समावेश गरिएको छ। समाजको अध्ययन अनुसन्धानमा मानवशास्त्रीय अनुसन्धान विधिका बारेमा उक्त लेख सहयोगी हुने छ। आर्तुरो एस्कोबारको *कल्चरल एन्थ्रोपोलोजी* मा प्रकाशित लेख *पावर एण्ड भिजिबिलिटि: डेभलप्मेण्ट एण्ड दि इन्भेन्सन एण्ड म्यानेजमेण्ट अफ दि थर्ड वर्ल्ड* को भावानुवाद गरी प्रस्तुत गरिएको छ। यस लेखमा कोलम्बिया राष्ट्रको उदाहरणका साथमा तेस्रो विश्व र विकासका सम्बन्धमा विश्लेषण गरिएको छ। पुस्तक समीक्षाहरूमा डा. भवेश्वर पंगेनीद्वारा लिखित

*डा. के.आई. सिंह र नेपालको राजनीति (वि.सं. २००७-२०१७)* र जोन ह्वेल्पट्नद्वारा लिखित *अ हिस्ट्रि अफ नेपाल* पुस्तकको समीक्षा समावेश गरिएको छ। नियमित स्तम्भअन्तर्गतको पुरानो पातोमा शाहवंशीय चार राजाहरूको शाही सम्बोधनहरूलाई सङ्कलन गरी राखिएको छ जुन ऐतिहासिक विषयवस्तु खोज्ने पाठकहरूका लागि महत्त्वपूर्ण हुन सक्ने विश्वास लिएका छौं।

मूलतः नेपाली भाषामै लेखिएका लेखलाई प्राथमिकता दिने हाम्रो उद्देश्य यथावत् छ। यद्यपि नेपाली समाज सुहाउँदो र यस समाजको अध्ययन अनुसन्धान एवं नेपाली परिप्रेक्ष्यमा महत्त्वपूर्ण हुने बौद्धिक, मौलिक एवं अनुसन्धानपरक लेखरचनाहरू समावेश गर्ने क्रममा विदेशी विद्वान्हरूद्वारा अन्य भाषामा लेखिएका लेखहरूलाई भावानुवाद गर्ने क्रमलाई निरन्तरता दिएका छौं। अनुवादका क्रममा समाजविज्ञानसम्बन्धी उपयुक्त शब्दावलीको अभावले शैलीगत मिठास नआएको हुन सक्दछ। अनुवादसम्बन्धी मानकहरूको अभावमा अन्य भाषाबाट नेपालीमा अनुवाद गर्ने क्रममा आउने कतिपय शब्दले लेखकको खास आशयको प्रतिनिधित्व नगर्ने समस्याहरू व्याप्त छन्। मानकलगायत निश्चित शब्दावली विकासमा हाम्रा समाजशास्त्री, पाठक तथा अन्य शुभचिन्तकहरूका सुझाउ र सरसल्लाह गहन हुने कुरामा हामी विश्वस्त छौं।

# आदिवासी जनजातिको परिप्रेक्ष्यमा पहिचानको राजनीति र भाषा

**बैरागी काइँला**

विविधता र बहुलता आधुनिक नेपाल राष्ट्र र समाजको वास्तविकता हो र बहुलताको सोच, जातीय तथा सांस्कृतिक पहिचानको खोजी हो। आफ्ना-आफ्ना सांस्कृतिक मूल्य-मान्यता, आस्था र विश्वाश भएका आदिवासी जनजातिले आफ्नो अस्तित्व बचाउन अरूभन्दा भिन्न भएको बोध गर्न खोज्दछन्। अल्पसङ्ख्यक जातजाति र आदिवासी जनजातिको भाषा, संस्कृति तथा भौगोलिक क्षेत्रका आधारमा राजनैतिक, आर्थिक र सामाजिक-सांस्कृतिक अधिकारले सम्पन्न क्षेत्रीय स्वायत्तता र जातीय स्वशासन (स्वायत्तता) पुनर्संरचनाका ढाँचा हुन सक्दछन्। यसरी नेपालमा देखिएको आजको समस्या राजनैतिक र आर्थिक मात्र नभएर सामाजिक र सांस्कृतिक हो भन्ने मान्यताका साथ आदिवासी जनजातिले यस क्षेत्रमा भोगेका समस्या र वास्तविक अवस्थाको चित्रण यस अध्ययन लेखले गर्ने छ।

*भाषा हो सभ्यता हाम्रो सारा उदय उन्नति*
*बालकृष्ण सम (मुकुन्द-इन्दिरा)*

## एउटा अर्को हारेको लडाइँ

जनताको (ले), जनताका लागि, जनताद्वारा गरिने शासन पद्धति प्रजातन्त्र हो भन्ने पारम्परिक आदर्श कथन छ। प्रजातन्त्रमा नागरिकको अधिकारको समानताको परिकल्पना पनि उक्त आदर्श कथनमा अन्तर्निहित छ। वि.स. २००७ सालको जनक्रान्तिबाट नेपालमा प्रजातन्त्रको स्थापना भयो। उपनिवेशवादी अङ्ग्रेजहरूबाट प्राप्त बहुसङ्ख्यकको शासनमा अधिकार प्राप्त हुने खालको ढाँचा भएको प्रजातन्त्र नेपालजस्तो कुनै जातिको जातिगत वा भाषिक बहुमत नभएको बहुजातीय, बहुभाषिक, बहुसांस्कृतिक र बहुधार्मिक देशमा भने व्यावहारिक रूपमा आदर्श ढाँचा बन्न सकेन।

नेपालको एकीकरणपछिको राज्यको एकात्मक स्वरूप र खास धर्म, भाषा-जातिको वर्चश्व भएको सत्ता-संयन्त्र तथा शक्ति-संरचनाले विगत २३५ वर्षदेखि आजसम्म नै निरन्तरता पाएको छ। २००७ सालको जनक्रान्तिले राजनैतिक स्वरूपमा केही परिवर्तन ल्याए पनि प्रशासनिक, सामाजिक, सांस्कृतिक र राज्यको संरचनाको आधारभूत तहमा कुनै रूपान्तरणको जग हाल्न सकेन।

कुल जनसङ्ख्याको एकतिहाइभन्दा कम सङ्ख्या हुने उच्च जातिका व्यक्तिहरूले आज पनि राजनीति र शासनतन्त्रको ९१.२ प्रतिशत पदहरू ओगटेका छन्। यिनमा पनि कर्मचारीतन्त्र, न्यायसेवा र नागरिक समाजको ७६ देखि ७८ प्रतिशत स्थानमा पहाडे उच्च जाति (बाहुनछेत्री) को कब्जा छ। मधेसी समुदाय (३१ प्रतिशत) ले १२ प्रतिशत मात्र स्थान ओगट्न सकेका छन्। राजनीतिक प्रतिनिधित्वमा ५८.४ प्रतिशत यिनको कब्जामा छ। पहाडे जनजाति (२२ प्रतिशत) को प्रतिनिधित्व कर्मचारीतन्त्र, न्यायसेवा, नागरिक समाजमा नगन्य (२ प्रतिशत) छ। त्यसरी नै राजनीतिमा पनि तिनको प्रतिनिधित्व १३ प्रतिशत मात्र छ भने शासनतन्त्रमा ८ प्रतिशत

मात्र छ। माथिल्लो तहका शक्ति-संयन्त्रमा र शासनतन्त्रमा दलित (१२.२) को कुनै स्थान छैन (गुरुङ, २००३)। राजनीतिमा दलितको प्रतिनिधित्व (माथिल्लो सदनमा नाम मात्रको) छैन भन्दा पनि हुन्छ।

## शासनको एकीकृत जातिसूची

| संस्था | खस | मङ्गोल किरौंत | मधेसी | दलित | नेवार | अन्य | जम्मा |
|---|---|---|---|---|---|---|---|
| न्यायपालिका | १८१ | ४ | १८ | | ३२ | | २३५ |
| संवैधानिक अङ्ग र आयोग | १४ | २ | ३ | | ६ | | २५ |
| मन्त्रिपरिषद् | २० | ४ | ५ | | ३ | | ३२ |
| सार्वजनिक प्रशासन | १९० | ३ | ९ | | ४३ | | २४५ |
| व्यवस्थापिका | १५९ | ३६ | ४६ | ४ | २० | | २६५ |
| राजनीतिक पार्टीको नेतृत्व | ९७ | २५ | २६ | १८ | | | १६५ |
| जिविस सभापति, नगरपालिका मेयर/उपमेयर | १०६ | २३ | ३१ | ३० | | | १९१ |
| उद्योग, वाणिज्य क्षेत्रको नेतृत्व | ७ | | १५ | | २० | | ४२ |
| शैक्षिक क्षेत्रको प्राज्ञिक र पेसागत नेतृत्व | ७५ | २ | ७ | १ | ११ | १ | ९७ |
| सांस्कृतिक क्षेत्रको प्राज्ञिक र पेसागत नेतृत्व | ८५ | ६ | | | २२ | | ११३ |
| विज्ञान-प्रविधि | ३६ | २ | ६ | | १८ | | ६२ |
| नागरिक समाज क्षेत्रको नेतृत्व | ४१ | १ | ४ | | ८ | | ५४ |
| जम्मा | १०११ | १०८ | १७० | ५ | २३१ | | १५२० |
| प्रतिशत | ६६.५ | ७.१ | ११.२ | ०.३ | १५.२ | | १०० |
| नेपालको जनसङ्ख्या (प्रतिशत) | ३१.६ | २२.२ | ३०.९ | ८.७ | ५.६ | ०.१ | १०० |
| फरक प्रतिशत | +३४.९ | -१५.१ | -१९.७ | -८.४ | +९.६ | -१.० | |

स्रोतः गोविन्द न्यौपाने (२०००)।

नेपाल एकीकरणसँगै आदिवासी जनजातिकै भूमि र प्राकृतिक स्रोतमाथि अतिक्रमण र बलपूर्वक कब्जा गर्दै जागिरदार, भारदार र कुलिन तथा गुरुपुरोहितलाई वीरताका रूपमा दिएर विजितहरूलाई तिनको भूमिबाट विस्थापित गर्ने क्रमले आन्तरिक बसाइँसराइ र मुग्लान भासिने क्रम बढ्यो। यो सँगसँगै सांस्कृतिक दमन गरिएका र मुलुकी ऐनको श्रेणीकरणमा तल पारिएका, स्रोतसाधनबाट वञ्चित, भाषिक अल्पसङ्ख्यक (गैरनेपाली मातृभाषी हिन्दू र अन्य धर्मावलम्बीहरू), दलित समूह र आदिवासी जनजातिको आर्थिक अवस्था जर्जर बनाएर गरिबीको रेखामुनि धकेलेको तथ्य नेपाल मानव संसाधन विकासको प्रतिवेदन (NESAC, १९९८, पृ. १२९) ले देखाउँछ।

ठूलो माछाले सानो माछालाई खान्छ र अझ ठूलो हुन्छ। कुनै जातिलाई समाप्त गर्न उसको संस्कृति निमिट्यान्न पार्नै पर्दछ। त्यसैले भाषामाथि दमन र आक्रमण हुन्छ। एकीकरणपछि राज्य पूर्वाग्रही भएर प्रभुत्वशाली संस्कृतिको पृष्ठपोषक हुँदा एकात्मक राष्ट्र-राज्य र

एकल संस्कृतिमा जोड दिने एकात्मक मूल्य पद्धतिलाई जन्म दियो। यसरी एकीकरणपूर्व आफ्नै धर्म र संस्कृति भएका आदिवासी जनजातिमाथि राज्य व्यवस्थाबाट भाषा र संस्कृतिमा निरन्तर गरिएको भेदभावपूर्ण नीति र व्यवहारले आदिवासी जनजातिको जातीय पहिचानलाई नै सङ्कटग्रस्त बनायो।

**जातीयता र गरिबीको तुलनात्मक अध्ययन (प्रतिशतमा)**

| जातजाति/जनजाति समूह | गरिबीको रेखामुनिको अनुपात | परम्परागत पेसा |
|---|---|---|
| **क भाषिक समूह (जातजाति/जनजाति)** | | |
| १ नेवार | २५ | व्यापार, उद्योग |
| **ख जातजाति समूह** | | |
| २ बाहुन (उच्चजात) | ३४ | पुजारी, कर्मचारीतन्त्र, राजनीति |
| ३ छेत्री | ५० | कृषि, सैनिक सेवा |
| ४ यादव (मध्यतह) | ४० | कृषि, महाजनी |
| ५ सार्की (दलित) | ६५ | पेसागत (छाला) |
| ६ दमाई | ६७ | पेसागत (बाजा, सिलाइ) |
| ७ कामी (दलित) | ६८ | पेसागत (धातु कमाउने) |
| **ग धार्मिक समूह** | | |
| ८ मुसलमान | ३८ | विविध सीप र कौशल |
| **घ जनजाति समूह** | | |
| ९ गुरुङ | ४५ | कृषि विदेशी सैनिक सेवा |
| १० थारू | ४८ | कृषि, मत्स्यखेती |
| ११ राई | ५६ | कृषि विदेशी सैनिक सेवा |
| १२ मगर | ५८ | कृषि विदेशी सैनिक सेवा |
| १३ तामाङ | ५९ | कृषि, पशुपालन र चरण |
| १४ लिम्बू | ७१ | कृषि विदेशी सैनिक सेवा |
| **ङ अन्य (अति चर्चित तराई समूह)** | ३७ | |
| नेपाल | ४५ | |

स्रोतः डा. हर्क गुरुङ, नेसाक (NESAC), १९९८, टेवल ७.२४।

राज्य व्यवस्थामा उच्च जाति र तिनको भाषा, धर्म तथा संस्कृतिकै प्रभुत्व भएको सामाजिक सत्ता र शक्ति-संरचनाका कारणले जनक्रान्तिले स्थापना गरेको प्रजातन्त्र (२००७) र जनआन्दोलन (२०४६) ले पुनर्स्थापना गरेको बहुदलीय प्रजातन्त्रमा पनि विविधतापूर्ण नेपाली सामाजिक संरचनाको अस्वीकार गर्नेहरूको जित र आदिवासी तथा जनजातिका लागि एउटा अर्को हारेको लडाइँ सिद्ध भयो।

ऐतिहासिक रूपमा नै राज्यबाट उपेक्षित र बहिष्कृत, सामूहिक रूपमा नै सङ्कटमा परेका अल्पसङ्ख्यक भाषाभाषी, आदिवासी जनजाति, उत्पीडित र दलितहरूले शासन र राज्यसत्ताको

## नेपाली सामाजको संरचना

विविधता नेपाल अधिराज्यको यथार्थ र विशेषता हो। यस विशिष्टतालाई जनआन्दोलनपछि निर्माण भएको नेपाल अधिराज्यको संविधान २०४७ को भाग १ को प्रारम्भिकको ४(१) मा 'नेपाल बहुजातीय, बहुभाषिक, प्रजातान्त्रिक, संवैधानिक राजतन्त्रात्मक अधिराज्य' हो भनेर आंशिक रूपमा भए पनि प्रतिबिम्बित गरिएको छ। वर्तमान नेपाली समाजको बनोटलाई (१) जात-जाति, (२) धर्म-संस्कृति, र (३) भाषाका आधारमा सङ्क्षिप्तमा चित्रण गर्न सकिन्छ (काइँला, २०५८ क)।

### १. जातिगत आधारमा

नेपाल एकीकरणपछि विभिन्न जातजातिलाई स्थलरूपमा वर्णाश्रम व्यवस्थाको मान्यताअनुरूप (क) तागाधारी तथा (ख) मतवाली जाति भनेर सामाजिक स्तरमा विभाजन गरेको पाइन्छ। तागाधारीमा पनि (ग) उपल्लो जात, (घ) बीचको जात, (ङ) तल्लो जात तथा तल्लोमा पनि (च) पानी चल्ने र (छ) पानी नचल्ने, पानी नचल्नेमा (ज) छोइछिटो हाल्नु पर्ने र (झ) छोइछिटो हाल्नु नपर्ने जात भनेर विभाजित गरिएको पाइन्छ।

### २. धर्म-संस्कृतिको आधारमा

त्यसरी नै धर्म-संस्कृतिका आधारमा (क) हिन्दू धर्म र संस्कृति, (ख) गैरहिन्दू धर्म र संस्कृतिहरू– जसभित्र (अ) बुद्ध धर्म (आ) किराँत धर्म, (इ) पम्परागत लोक धर्म वा प्रकृति धर्म तथा (ग) जैन, सिख, मुस्लिम, इसाई, बहाई आदिलाई पछि प्रवेश पाएका धार्मिक समूहमा राखेर हेर्न सकिन्छ।

### ३. भाषाका आधारमा

त्यसरी नै भाषाका आधारमा पनि जातजाति र जनजातिलाई निम्नानुसार वर्गीकरण गर्न सकिन्छ।

(क) भारोपेली परिवारका भाषा बोल्ने (अ) जातजाति, र भारोपेली परिवारका भाषा बोल्ने (आ) जनजाति,

(ख) भोट-बर्मेली परिवारका भाषा बोल्ने जनजातिहरू,

(ग) द्रविड परिवारको भाषा बोल्ने जनजाति,

(घ) आग्नेय परिवारको भाषा बोल्ने जनजाति।

रोचक कुरा के देखिन्छ भने (क) तागाधारी भन्नाले बाहुन-छेत्री र मतवाली भन्नाले आदिवासी जनजाति बुझिन्छन्। तागाधारी जातिले हिन्दु धर्म-संस्कृति पालन गर्दछन् र भारोपेली परिवारका भाषा बोल्दछन्। (ख) नेपालका आदिवासी जनजाति (५९) अथवा मतवाली

जातिभित्रका अधिकांशले बौद्ध धर्म र लोक धर्म वा प्रकृति धर्म पालन गर्दछन् र भोट-बर्मेली परिवारका (थारू, राजवंशी, दनुवार, माझी, दरै, कुमालबाहेक) भाषा बोल्दछन्।

## आदिवासी जनजातिको जाति र भाषागत वितरण

जाति र भाषालाई अलग गरेर हेर्न सकिँदैन। मुलुकभित्रका कुन भाषा बोल्ने कुन जाति कुन क्षेत्रमा बस्दछन्, कुन जातिको पुख्यौंली थातथलो पहिले कहाँकहाँ थियो र अहिले छरिएर कहाँकहाँ आइपुगेका छन् भन्ने कुरा त्यो जाति र उसले बोल्ने भाषाहरूको भौगोलिक वितरणले देखाउँछ। नेपालको आदिवासी जनजातिको जातिगत वितरण र भाषाहरूको भौगोलिक वितरणमा एकरूपता पाइन्छ।

## जातिगत वितरण

राष्ट्रिय जनगणना (२०४८) ले नेपाललाई चार भौगोलिक क्षेत्रमा बाँडेर २२ आदिवासी जनजातिको तथ्य प्रस्तुत गरेको थियो। तर राष्ट्रिय जनजाति उत्थान प्रतिष्ठानको कार्यदलको प्रतिवेदन (२०५३) ले राष्ट्रिय जनगणना (२०४८) ले देखाएको भन्दा बढी सङ्ख्या (६१ जनजाति) देखाएको थियो जसका अनुसार नै श्री ५ को सरकारले ६१ आदिवासी जनजातिलाई सूचीकृत गरेको थियो। यो सङ्ख्या आदिवासी जनजाति उत्थान राष्ट्रिय प्रतिष्ठान (२०५८) स्थापित हुँदासम्म घटेर ५९ (नेपाल गजेट, ७ फेब्रुअरी, २००२) मा आयो। आदिवासी तथा जनजाति (५९) को जातिगत वितरणलाई चार भौगोलिक क्षेत्रमा राखेर हेर्न सकिन्छ।

| | | | | |
|---|---|---|---|---|
| **(क) हिमाली क्षेत्र (१८)** | | | | |
| १. भोटे | २. थकाली | ३. ल्होपा | ४. लार्के | ५. वालुङ |
| ६. मार्फाली | ७. छैरोतन | ८. ब्याँसी | ९. मुगाली | १०. थुदाम |
| ११. सियार | १२. तीनगाउँले थकाली | १३. सेर्पा | १४. डोल्पो | १५. ल्होमी |
| १६. ताङ्बे | १७. तोप्केगोला | १८. बाह्रगाउँले | | |
| **(ख) पहाडी क्षेत्र (२४)** | | | | |
| १९. चेपाङ | २०. गुरुङ | २१. जिरेल | २२. लेप्चा | २३. ह्यु |
| २४. राई | २५. सुनुवार | २६. तामाङ | २७. थामी | २८. कुसुण्डा |
| २९. पहरी | ३०. भुजेल/घर्ती | ३१. बरामो | ३२. सुरेल | ३३. मगर |
| ३४. बनकरिया | ३५. दुरा | ३६. याक्खा | ३७. लिम्बू | ३८. छन्त्याल |
| ३९. फ्रि | ४०. नेवार | ४१. ह्योल्मो | ४२. कुशवडिया | |
| **(ग) भित्री मधेस (७)** | | | | |
| ४३. बोटे | ४४. कुमाल | ४५. माझी | ४६. राउटे | ४७. दनुवार |
| ४८. दराई | ४९. राजी | | | |

## भाषापरिवार

जनगणना २००९-११ र २०१८ तथा २०२८, २०३८ र २०४८ समेत पाँचै जनगणनाका अनुसार नेपालमा बोलिने भाषाहरूमा चार भाषा परिवारका (१) भारोपेली परिवारको भाषा (१५), (२) भोट-बर्मेली परिवारको (१९), (३) आग्नेय परिवारको (१) र (४) द्रविड परिवारको (१) भाषा छन्।

पाँचै जनगणना तथा स्वदेशी तथा विदेशी विद्वान्हरूले गरेका अध्ययनसमेतको सारग्रहण गरेर राष्ट्रिय भाषा नीति सुझाव आयोग (रा.भा.सु.आ.) को प्रतिवेदन २०५०(परिशिष्ट चार) मा चार भाषा परिवारका लगभग ४० (जसभित्र ३२ राई समूहका भाषाहरू छन्) भाषाहरू दिइएका छन्।

त्रि.वि. भाषाविज्ञान विभागबाट नेपाली भाषाशास्त्रीहरूद्वारा भएको हालको स्थलगत अध्ययनले आग्नेय/आग्नेसियाली परिवारभित्र सतार/सन्थालीका साथमा खडिया थप भई यिनको सङ्ख्या अब दुईओटा (पोखरेल, २०५८) भएको छ। त्यसरी नै द्रविडेलीमा झाँगड/धाँगड का साथमा किसान थप भएको छ। यसै गरी अब नेपालमा बोलिने भाषा परिवार जम्मा ५ पुगेका (पोखरेल, २०५८, यादव, २०६१) छन्। हालसम्म परिवार अनिर्धारित भएको कुसुण्डा भाषालाई इन्डो-पैसिफिक भाषा (यादवसमेत, कात्तिक २६, २०६१) परिवारभित्रको पनि भनिएको छ। (५) अनिर्धारित/इन्डो-प्यासिफिक भाषा भनेर राखिएको एक मात्र भाषा कुसुण्डा भाषा हो । यीबाहेक नेपालको हिमाली क्षेत्रमा भोटे/लामा (तिब्बती) पनि (जनगणना २०५८) बोलिन्छ।

## जनजातिका भाषाहरूको सङ्ख्या र वर्तमान अवस्था

नेपालमा बोलिने चार (अब पाँच) परिवारका भाषाहरूमा अत्यधिक सङ्ख्या भोटबर्मेली परिवारको भाषाहरूको नै छ। नेपालका आदिवासी जनजातिले बोल्ने भाषाहरू प्रायः सबै नै भोटबर्मेली परिवारभित्र पर्दछन्। त्यसैले, भोटबर्मेली परिवारभित्रका भाषाहरूलाई जनजातीय भाषा भनेर सम्बोधन पनि गर्न थालिएको छ। यति नै हो भनेर किटान हुन नसके पनि विभिन्न विद्वानहरूले जनजातिका भाषाका सङ्ख्याबारे लेख्दा कसैले ४५(प्रा. मल्ल, १९८९), तिब्बती/भोटे लामासमेत ६४ (रा.भा.सु.आ., २०५०), ६५ (तोबा, १९९२), ७८ (मैतिसोफ, १९९६), ८० (ग्राइम्स, २०००), ७०(वैन्ड्रिम, २००१), ५६ (तोबासमेत, २००२), ३२(थरगुड, २००३) ६७ तथा जनगणना २०५८ मा उल्लेख नभएका ८ समेत ७५ (यादवसमेत, वि.स. २०६१) छन्।

सबै जनजातिले आफ्नो मातृभाषालाई बोलचालका रूपमा अझै जीवित राखेका छन् तर सबै मातृभाषाको अवस्था समान स्तरको भने छैन। जनआन्दोलन २०४६ लाई सीमारेखा मान्दा लेख्यपरम्परा भएका भाषाहरूमा मैथिली, भोजपुरी, अवधी, थारू, नेवार र लिम्बू (रा.भा.सु.आ., २०५०) हुन्। लेख्यपरम्परा उन्मुख भोटबर्मेली परिवारको भाषाहरूमा गत १० वर्षमा तामाङ, गुरुङ तथा मगर भाषाका साथै केही राई भाषाहरूमा उल्लेख्य विकास भएको छ।

## वक्ताका आधारमा मातृभाषाको वर्तमान अवस्था

भाषा-विचलन, भाषा-संरक्षण र प्रवर्द्धनको घनिष्ट सम्बन्ध त्यो भाषाको वक्ताका सङ्ख्यासँग हुन्छ। नेपालमा बोलिने ९२ (जनगणना २०५८) भन्दा बढी भाषाहरूमा एक लाखभन्दा बढी वक्ता भएका भाषाहरूमा कूल जनसङ्ख्यामा वक्ताको प्रतिशत निम्नानुसार छन् :

| | |
|---|---|
| (१) खस नेपाली | ४८.६१ (१,१०,५३,२५५) |
| (२) मैथिली | १२.३० (२७,९७,५८२) |
| (३) भोजपुरी | ७.५३ (१७,१२,५३६) |
| (४) थारू | ५.८६ (१३,३१,५४६) |
| (५) तामाङ | ५.१९ (११,७९,१४५) |
| (६) नेवार | ३. ६३ (८,२५,४५८) |
| (७) मगर | ३.३९ (७,७०,११६) |
| (८) अवधी | २.४७ (५,६०,७४४) |
| (९) बान्तावा राई | १.६३ (३,७१,०५६) |
| (१०) गुरुङ | १.४९ (३,३८,९२५) |
| (११) लिम्बू | १.४७ (३,३३,६३३) |
| (१२) बजिका | १.०५ (२,३७,९४७) |
| (१३) उर्दू | ०.७७ (१,७४,८४०) |
| (१४) राजवंशी | ०.५७ (१,२९,८२९) |
| (१५) सेर्पा | ०.५७ (१,२९,७७१) |
| (१६) हिन्दी | ०.४७ (१,०५,७६५) |

वक्ताहरूका जनसङ्ख्याका आधारमा भाषाको अवस्थाको सारसङ्क्षेप यसरी प्रस्तुत गर्न सकिन्छ-

(क) १० लाखभन्दा बढीले बोल्ने भाषा ५ मध्ये जनजातिको भाषा २ छन्,

(ख) १ लाखदेखि बढी र ९,९९,९९९ (१० लाखभन्दा कम सङ्ख्या) ले बोल्ने भाषा ११ छन्,

(ग) तर ५० हजारदेखि माथि र ९९ हजारसम्मकाले बोल्ने भाषा एउटै पनि छैनन्।

(घ) १० हजारदेखि बढी र ५० हजारभन्दा कमले बोल्ने भाषाहरू १८ छन्,

(ङ) ५ हजारभन्दा बढी र ९,९९९ ले बोल्ने भाषा ७ छन्।

(च) १ हजारभन्दा माथि र ४,९९९ ले बोल्ने भाषाहरू २३ छन्।

(छ) १ हजारभन्दा कमले बोल्ने भाषाहरू २८ छन् जसभित्र १०० भन्दा कम वक्ताले बोल्ने १७ भाषाहरू पनि पर्दछन्।

**सङ्कटमा परेका जीव : राष्ट्रिय भाषाहरू**

नेपाल टेलिभिजनको एउटा विज्ञापनमा हिँडिरहेको एक्लो गैंडा देखाइँदै भनिन्छ सङ्कटमा परेको जीव (काइँला, २०५८ ख)। नेपालमा बोलिने अधिकांश आदिवासी जनजातिका धर्म र संस्कृतिको संवाहक मातृभाषाहरू चितवनको गैंडाभन्दा पनि बढी सङ्कटमा परेका छन्।

राष्ट्रिय भाषा नीति सुझाव आयोग (२०५०) को प्रतिवेदन (परिशिष्ट चार) ले नेपालमा बोलिने भाषाहरूको अवस्था समान नभएको देखाउन तिनको लेख्यपरम्परागत स्थितिलाई ४ वर्गमा वर्गीकरण गरेर तिनको सङ्कटग्रस्त अवस्थाको परिदृश्यलाई १२ वर्षअघि नै स्पष्ट पारेको थियो। जस्तै :

**१. सुरक्षित कोटि**

लेख्यपरम्परा भएका भाषा ६ (नेपाली, नेवारी, मैथिली, लिम्बू, भोजपुरी, अवधी,) तथा ३ (हिन्दी, उर्दू तथा तिब्बती)

**२. असुरक्षित**

लेख्यपरम्परा भएका केही र लेख्यपरम्परा उन्मुख भाषा १३ (थारू, तामाङ, मगर, गुरुङ, थुलुङ, बान्तवा, चाम्लिङ, खालिङ, कुलुङ, थकाली, सेर्पा, राजवंशी, बाहिङ, यसभित्र राई समूहका ६ छन्।

**३. असुरक्षित र सङ्कटग्रस्त**

केही लेख्यपरम्परा उन्मुख र लेख्यपरम्परा नभएका भाषा ३० (सतार/सन्थाल, दनुवार, चेपाङ, मारवाडी, थामी, माझी, झाँगड, धिमाल, दरै, जिरेल, छन्त्याल, खाम, कागते, काइके, ह्योल्मो, राजी, कुमाल, बोटे, ब्यासी, नाछिरिङ, पूर्वी मेवाहाङ, पश्चिमी मेवाहाङ, साम्पाङ, याम्फु/याम्फे, उत्तरी लोहोरुङ, दक्षिणी लोहोरुङ, याक्खा, लुम्बायाक्खा, आठपहरिया/अठप्रे, उम्बुले, यसभित्र राई समूहका ११ छन्)।

**४. मरणोन्मुख**

लेख्यपरम्परा नभएका र सबै लोपवान भाषाहरू १९ (हायु, दुरा, कुसुन्डा, राउटे तथा राई समूहका कोयु, पुमा, जेरुङ, छुक्वा/चाक्वा, तिलुङ, दुमी, पोल्माचा, दुङ्माली, वालिङ, छिन्ताङ, लाम्बिछोङ, मुगाली, बेल्हारे, फाङ्दुवाली, छुलुङ, राई समूहका १५ छन्)।

त्यसरी नै डा. योगेन्द्रसमेत (२६ कात्तिक, २०६१) को अध्ययनअनुसार जम्मा ९३ (जनगणना २०५८) भाषाहरूमा

(क) मृतभाषा ११ छन्। (सबै राई समूहका भाषाहरू छन्)।

(ख) मृतप्रायः भाषा ७ छन्।

(ग) अत्यन्त लोपवान १२,

(घ) लोपवान २३, र

(ङ) लोप हुन सक्ने ८ छन् (कुमाल, थकाली, छन्त्याल, दुमी, जिरेल, अठप्रे, बेलहारे, मुगाली)।

(च) सुरक्षितप्रायः १३ (चाम्लिङ, संथाली, चेपाङ, दनुवार, झाँगड/धाँगड, थामी, कुलुङ, धिमाल, याक्खा, थुलुङ, साङपाङ, दरै, डोल्पी)।

(छ) सुरक्षित १३ भाषा छन् (नेवार, लिम्बू, मगर, थारू, तामाङ, बान्तावा, गुरुङ, राजवंशी, सेर्पा, तिब्बती, खालिङ, खाम, र साङ्केतिक भाषा)। यसबाट तिब्बती र साङ्केतिक भाषा निकाल्दा ११ मात्र हुन्छन्।

१० लाखभन्दा बढी वक्ताका जनसङ्ख्या भएका जातिले बोल्ने भाषालाई सुरक्षित भाषा मान्ने हो भने नेपालको आदिवासी जनजातिले बोल्ने भाषाहरूमध्ये थारू र तामाङ मात्र सुरक्षित छन् तर नेपालको सन्दर्भमा १ लाखभन्दा बढी जनसङ्ख्याले बोल्ने भाषालाई सुरक्षित भाषा मान्ने हो भने जनजातिले बोल्ने भाषाहरूमध्ये मगर, थारू, तामाङ, नेवार, गुरुङ, राई, लिम्बू (राष्ट्रिय जनगणना, २०५८) मात्र सुरक्षित भाषा (काइँला, २०५८ ग:२९२) हुन्।

डेविड क्रिष्टल (डेविड क्रिष्टल, २०००:५) को भनाइअनुसार त पृथ्वीमा बोलिने आधाभन्दा धेरै भाषाहरू सन् २०५० सम्ममा मरिसक्ने छन्। यो अड्कल यथार्थमा परिणत भएमा नेपालमा बोलिने सङ्कटग्रस्त सबै भाषाहरूसँगै तिनले वहन गरिल्याएका सभ्यता, संस्कृतिहरूको चिह्नसमेत आजको ५० वर्षपछि पृथ्वीमा भेटिने छैन।

## जाति र भाषाको सङ्कटग्रस्तता

थोरै जनसङ्ख्या भएका सङ्कटग्रस्त आदिवासी जनजातिको बसोबासको थलो दुर्गम (हिमाली क्षेत्र) र विकट (भित्री मधेस) क्षेत्र देखिन्छ। कुनै भाषाको सङ्कटग्रस्तता र सुरक्षित अवस्थाको अध्ययनका लागि भौगोलिक दुर्गमता र विकटताजस्तै त्यो भाषा बोल्ने जातिको सक्षमताको महत्त्वपूर्ण भूमिका देखिन्छ। तर जातिको स्रोतसाधनमा पहुँच र सक्षमता तथा उसको भाषाको सङ्कटग्रस्ततामा सधैं सन्तुलन भने देखिँदैन। पहुँच र सक्षमताको हिसाबमा नेपालका ५९ आदिवासी जनजातिलाई भौगोलिक हिसाबमा झैं नेपाल जनजाति महासङ्घले चार वर्गमा वर्गीकरण गरेको छ। जस्तैः

| | | | | |
|---|---|---|---|---|
| **(क) सङ्कटग्रस्त समूह (१०)** | | | | |
| १. कुसुण्डा | २. बनकरिया | ३. राउटे | ४. सुरेल | ५. हायु |
| ६. राजी | ७. किसान | ८. लेप्चा | ९. मेचे | १०. कुशवडिया |
| **(ख) अद्यावधिक सीमान्तकृत समूह (१२)** | | | | |
| ११. माझी | १२. सियार | १३. ल्होमी | १४. थुदाम | १५. धानुक |
| १६. चेपाङ | १७. सतार/सन्थाल | १८. झाँगड | १९. थामी | २०. बोटे |
| २१. दनुवार | २२. बरामु | | | |
| **(ग) सीमान्तकृत समूह (२०)** | | | | |
| २३. सुनुवार | २४. थारू | २५. तामाङ | २६. भुजेल | २७. कुमाल |
| २८. राजवंशी | २९. गनगाई | ३०. धिमाल | ३१. भोटे | ३२. दराई |
| ३३. ताजपुरिया | ३४. पहरी | ३५. तोप्केगोला | ३६. डोल्पो | ३७. फ्रि |
| ३८. मुगाल(ली) | ३९. लार्के | ४०. ल्होपा | ४१. दुरा | ४२. वालुङ |
| **(घ) सुविधावञ्चित (पछाडि पारिएका) समूह (१५)** | | | | |
| ४३. छैरोतन | ४४. ताङ्वे | ४५. तीनगाउँले | ४६. वाह्रगाउँले | ४७. मार्फाली |
| ४८. गुरुङ | ४९. मगर | ५०. राई | ५१. लिम्बू | ५२. सेर्पा |
| ५३. याक्खा | ५४. छन्त्याल | ५५. जिरेल | ५६. व्याँसी | ५७. योल्मो |
| **(ङ) सुविधायुक्त (विकसित) समूह (२)** | | | | |
| ५८. नेवार | ५९. थकाली | | | |

तर जनगणना, २०५८ का अनुसार आर्थिक सक्षमता भएका दुई जनजातिमध्ये थकालीको जातिगत सङ्ख्या १२,९७३ र मातृभाषागत सङ्ख्या ६,४४१ मात्र छ। त्यसरी नेवारको जातिगत सङ्ख्या १२,४५,२३२ र भाषागत सङ्ख्या ८,२५,४५८ छ भने पछाडि पारिएको समूहभित्र पर्ने मगरको जातिगत सङ्ख्या १६,२२,४२१ र भाषागत सङ्ख्या ७,४०,११६ देखिन्छ।

मगर र नेवार भाषाहरू पनि वक्ताका हिसाबमा १० लाखभन्दा कम वक्ताले बोल्ने भाषामा पर्दछन्। एक हजारभन्दा कम वक्ता भएका २८ भाषाहरूमध्येका निकै भाषाहरू (संस्कृतबाहेकका १८ भाषा) अस्थायी रूपमा आएका विदेशीहरूले लेखाएका भाषाहरू (उडिया, सिन्धी, हरियाणवी, मगही, साम, कुर्माली, जोङ्खा, कुकी, मिजो, नागामिज, आसामिज, सधानी आदि) प्रतीत हुन्छन्। कुल जनसङ्ख्याको १ प्रतिशतभन्दा कम सङ्ख्याले बोल्ने भाषाहरू सबैभन्दा धेरै छन्।

## भाषा र मानवअधिकार

मातृभाषा बोल्नु, संरक्षण र संवर्द्धन गर्नु प्रत्येक भाषाभाषीको नैसर्गिक अधिकार हो। भाषाको अधिकारको महत्त्व मानवअधिकारको रूपमा बहुभाषिक तर नेपालजस्तो एकल राष्ट्र-राज्यमा अझ टड्कारो भएर आउँछ। भाषाको प्रयोग, संरक्षण र संवर्द्धनमा वक्ता समुदायको भूमिका मात्र नभई राज्यको पनि ठूलो दायित्व हुन्छ। यस दिशामा सबैभन्दा महत्त्वपूर्ण भूमिका संयुक्त राष्ट्रसङ्घले निर्वाह गरिआएको छ। आदिवासी र जनजातिका भाषालगायतका सबै अधिकारका प्रत्याभूतिका

लागि संयुक्त राष्ट्रसङ्घका विभिन्न निकाय र विश्वस्तरमा विभिन्न महासन्धि, सन्धि, घोषणापत्रहरू जारी भएका छन्।

यस दिशामा (१) मानवअधिकारको विश्वव्यापी घोषणा, १९४८ (धारा २) ले तथा (२) आर्थिक, सामाजिक तथा सांस्कृतिक अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय महासन्धि, १९६६, (भाग २ को धारा २, भाग ३ को धारा २६ र २७) ले पनि नश्ल, वर्ण, लिङ्ग, भाषा, धर्म, राजनैतिक वा अन्य विचार-आस्था), राष्ट्रिय वा सामाजिक उत्पत्ति, सम्पत्ति जन्म वा अरू कुनै हैसियतका आधारमा बिनाभेदभाव सबैलाई त्यस घोषणामा उल्लेखित अधिकार र स्वतन्त्रता हुने प्रत्याभूति गरेको छ। त्यसरी नै (३) मातृभाषाका माध्यमबाट नै कुनै व्यक्तिले आफ्नोबारेमा र आफू बसेको संसारको बारेमा राम्ररी अभिव्यक्त गर्न सक्दछ भन्ने मान्यता बोकेको मातृभाषासम्बन्धी युनेस्कोको प्रतिवेदन (१९५३) तथा (४) अन्तर्राष्ट्रिय श्रम सम्मेलनको स्वतन्त्र देशहरूका आदिवासी तथा प्रजाति सम्बन्धित महासन्धि नं. १६९ (१९८९) तथा (५) बालबालिका निम्ति विश्वशिखर सम्मेलन (१९९०) र थाइल्याण्डमा भएको सबैका लागि शिक्षा विषयक विश्वसम्मेलन (१९९०) ले आदिवासी जनजातिका बालबालिकालाई शिक्षा दिने उत्तम माध्यम मातृभाषा नै हो र मातृभाषामा शिक्षा पाउने अधिकार हुन्छ भन्दै मातृभाषामा आधारित शिक्षामा विशेष जोड दिएको छ। त्यसरी नै (६) संयुक्त राष्ट्रसङ्घको बालअधिकार महासन्धि (१९८९) को धारा ३० ले आफ्नो संस्कृति अपनाउने, धर्म पालन गर्न पाउने र भाषा प्रयोग गर्न पाउने अधिकारबाट कसैलाई वञ्चित गरिने छैन भनेको छ भने (७) संयुक्त राष्ट्रसङ्घको साधारणसभा (डिसेम्बर १८, १९८९) ले जारी गरेको "राष्ट्रिय वा जातीय धार्मिक र भाषिक अल्पसङ्ख्यक समुदायसँग सम्बन्धित व्यक्तिहरूको अधिकारबारेको घोषणापत्र (४७/१३५) द्वारा तिनले बसोबास गरेको राज्यहरूमा राजनैतिक र सामाजिक स्थायित्व कायम गर्नमा भाषिक अधिकारको प्रत्याभूतिले योगदान गर्दछ भनेको छ। यति मात्र होइन (८) संयुक्त राष्ट्रसङ्घको आदिवासी जनजाति अधिकारसम्बन्धी मस्यौदाको घोषणापत्रको अनुच्छेद १२, १३, १४, १५, १६, १७ ले आदिवासीहरूको इतिहास, भाषा, मौखिक परम्परा, दर्शन, लिखित पद्धति र साहित्य पुनर्जीवित गर्ने, प्रयोग गर्ने, विकास गर्ने, भावि सन्ततिमा हस्तान्तरण गर्नेलगायत बालबालिकालाई मातृभाषामा शिक्षा हासिल गर्ने, आफ्नै भाषामा आफ्नै सञ्चारमाध्यम स्थापना गर्ने र राज्यको स्वामित्वमा रहेका सञ्चारमाध्यमहरूमा आदिवासीहरूको सांस्कृतिक विविधता प्रतिबिम्बित हुने कार्य सुनिश्चित गर्नेजस्ता कुरामा राज्यले प्रभावकारी भूमिका खेल्नु पर्नेमा जोड दिएको छ। (९) बार्सिलोनामा भएको 'भाषिक अधिकारसम्बन्धी विश्वसम्मेलन (१९९६)' ले भाषिक अधिकारसम्बन्धी जारी गरेको घोषणापत्रमा (क) सबै भाषिक समुदायको अधिकार समान हुन्छ (भाग १, धारा १०) (ख) सबै भाषिक समुदायलाई आफ्नो भाषामा

सम्बन्धित औपचारिक कागतपत्र प्राप्त गर्ने अधिकार हुने छ (भाग २, धारा १७/१) (ग) सबै भाषाभाषीलाई पठनपाठनको कुरामा पूर्वप्राथमिक, प्राथमिक, माध्यमिक, प्राविधिक र व्यावसायिक, विश्वविद्यालय र प्रौढ शिक्षा सबै तहमा आफ्नो भाषा माध्यमका रूपमा प्रयोग भन्नेबारेमा निर्णय गर्ने अधिकार हुने छ (भाग २ को धारा २४) भनेको छ भने (१०) विश्वमानवअधिकार सम्मेलनको घोषणापत्र, भियना (१९९३) ले सन् १९९३ लाई आदिवासी वर्ष र त्यसपछि १९९५ देखि २००४ सम्मलाई विश्वआदिवासी दशक तथा अगस्ट ९ लाई विश्वआदिवासी दिवस घोषणा गरेको छ। मातृभाषाको उच्च महत्त्वलाई ध्यानमा राखेर (११) फेब्रुअरी २१ (बाङ्लादेशमा सन् १९५३ को फेब्रुअरी २१ का दिन विद्यार्थीहरूले मातृभाषाका लागि सहादत दिएको दिन) लाई संयुक्त राष्ट्रसङ्घ, युनेस्कोले विश्वमातृभाषा दिवस घोषणा गरेको छ।

## भाषिक भेदभावको संवैधानिक व्यवस्था

संयुक्त राष्ट्रसङ्घले भाषाको अधिकारलाई मानवअधिकार मानेर नेपालको आदिवासी जनजातिका भाषालगायतका सबै अधिकारको प्रत्याभूतिका लागि जारी गरेको विभिन्न महासन्धि, सन्धि, घोषणापत्रहरूमध्ये राज्य पक्षले कतिपयमा हस्ताक्षर गरेर पनि र कतिमा अझसम्म हस्ताक्षर नगरेर उदासीनता देखाइआएको छ।

एकीकरणपछि अनुसरण गरिएको एकभाषिक नीतिका कारण नेपालमा बोलिने भाषाहरूको अवस्था सङ्कटग्रस्त हुँदै गएको तथ्यतिर यसअघि नै उल्लेख गरिएको छ। राज्यले भाषिक भेदभावलाई निरनतरता दिँदै आएको तथ्यहरू नेपालको संविधान तथा अन्य विशेष कानुनहरूमा भएका व्यवस्थाहरूले बताउँछन्।

### क. संवैधानिक व्यवस्था

१. जनक्रान्ति २००७ सालपछिको नेपाल अन्तरिम शासन विधान (२००७) मा जाति र भाषा विषयमा कुनै उल्लेख छैन।

२. नेपाल अधिराज्यको संविधान (२०१५) को परिच्छेद २ को विविध व्यवस्था धारा ७० मा पहिलोचोटि 'देवनागरी लिपिमा नेपाली भाषा नेपालको राष्ट्रभाषा हुने छ' भनियो।

३. नेपाल अधिराज्यको संविधान (२०१९) ले यसैलाई निरन्तरता दियो।

४. जनआन्दोलन (२०४६ साल) पछिको नेपाल अधिराज्यको संविधान (२०४७) को धारा (४-१) ले भने मुलुकलाई बहुजातीय, बहुसांस्कृतिक र बहुभाषिक भनेर पहिलोचोटि संवैधानिक मान्यता दियो तर नेपाल अधिराज्यको संविधान (२०४७) ले भाषिक भेदभावका लागि राज्य व्यवस्थालाई खेल्ने ठाउँहरू पनि निकै राखिदियो। जस्तै–

५. धारा ६(१) मा 'देवनागरी लिपिमा नेपाली भाषा नेपालको राष्ट्रभाषा हो र नेपाली भाषा सरकारी कामकाजको भाषा हुने छ' भन्यो भने

६. धारा ६(२) मा 'नेपालका विभिन्न भागमा मातृभाषाका रूपमा बोलिने सबै भाषाहरू नेपालका राष्ट्रिय भाषा हुन्' भनेर भाषामा ठूलो भाषा र सानो भाषाजस्तो भेदभावलाई संवैधानिक मान्यता फेरि प्रदान गऱ्यो।

७. धारा १८(२) मा प्राथमिक तहसम्म मातृभाषामा शिक्षा दिन सकिने छ भन्ने प्रावधानले राज्यलाई दायित्वबाट पन्छने ठाउँ दियो। त्यसरी नै –

**ख. आयोगहरूको गठन र तिनको सिफारिसहरू**

८. श्री ५ को सरकारले गठन गरेको राष्ट्रिय सांस्कृतिक नीति तथा कार्यक्रम तर्जुमा समितिद्वारा प्रस्तुत प्रतिवेदन (२०४९) ले राष्ट्रिय सांस्कृतिक नीतिका बुँदाहरू (१) मा विभिन्न जातजाति तथा समुदायलाई आफ्नो भाषा, लिपि र संस्कृतिको संरक्षण र संवर्द्धन गर्ने मौलिक हकको कदर गर्नु पर्ने सुझाउ दिएको,

९. श्री ५ को सरकारले गठन गरेको राष्ट्रिय भाषा नीति सुझाउ आयोग (२०५०) ले प्राथमिक शिक्षामा मातृभाषामा शिक्षा दिनु पर्ने सिफारिस गरेको,

१०. श्री ५ को सरकारले गठन गरेको नेपाल राष्ट्रिय शिक्षा आयोग (२०४७) ले मातृभाषामा शिक्षा दिनु पर्ने कुरा उठाएको,

११. श्री ५ को सरकारले गठन गरेको रेडियो नेपालबाट राष्ट्रिय भाषाहरूमा समाचार प्रसारण गर्नेबारे सुझाउ समितिको प्रतिवदेन (वि.सं. २०५१, वैशाख २५) का अनुसार तत्कालै ८ राष्ट्रिय भाषाहरूमा र क्रमिक रूपमा अरू राष्ट्रिय भाषाहरूमा प्रसारण गर्दै जाने सुझाउ दिएको,

१२. श्री ५ को सरकारले शिक्षा मन्त्रालयले राष्ट्रिय भाषामा प्राथमिक विषयमा पाठ्यक्रम विकास केन्द्रको महानिर्देशकको संयोजकत्वमा गठित समितिले दिएको राष्ट्रिय भाषामा शिक्षा प्रतिवेदन (२०५४) ले २०५४/२०५५ देखि २०५८/२०५९ सम्ममा मातृभाषामा प्राथमिक शिक्षा दिनु पर्ने सुझाउ दिएको,

१३. श्री ५ को सरकारले वि.स. २०५४ सालमा गठन गरेको उच्चस्तरीय राष्ट्रिय शिक्षा आयोगको प्रतिवेदन (२०५५) ले मातृभाषामा शिक्षा दिनु पर्ने आवश्यकतामा जोड दिएको, तथा

१४. श्री ५ को सरकारले जारी गरेको स्थानीय स्वायत्त शासन ऐन (२०५५) ले स्थानीय निकायहरूमा राष्ट्रिय भाषाहरूको प्रयोग गर्न सकिने प्रावधान गरेको थियो।

## भाषिक समस्याको जन्म

देशको बहुभाषिक स्थिति, देशको अविकसित स्थिति र देशको सामाजिक-सांस्कृतिक स्थिति आदि तीन परिस्थितिले गर्दा नेपालमा भाषिक समस्याको जन्म भएको छ। त्यसमाथि राज्यले विभिन्न भाषाभाषीको भावनाको कदर नगर्दा यो समस्या झन् चर्कँदै गएको छ (बन्धु, २०५०:८६)।

नेपाल एकीकरणपछि नेपाललाई चार जात छत्तीस वर्णको फूलबारी भनिए पनि एकात्मक समाज र राष्ट्रको निर्माण नै लक्ष्य रहेकाले एउटा राजा, एउटा भाषा र एउटा धर्म भन्ने मूलमन्त्र अङ्गीकार गरेर राज्य व्यवस्थाको संरचना र परिचालन सुरु भयो।

१. प्रयागराज शर्मा (फूलबारीलाई कसरी स्याहार्ने त?, हिमाल वर्ष ५, अङ्क ३, १९९२) का अनुसार पृथ्वीनारायण शाह र उनका उत्तराधिकारीहरूले मुलुकको एकीकरणलाई चार प्रमुख अवधारणामा खडा गरेका छन् र ती हुन् –

> गोरखाली हिन्दू राजाको असीमीत शक्ति र अधिकार,
> राष्ट्रिय जीवनमा हिन्दू मूल्य-मान्यताको सर्वोच्चता,
> जातीय विभाजनमा आधारित हिन्दू समाज व्यवस्थाका माध्यमबाट सामाजिक समायोजन र
> नेपालीलाई सरकारी, प्रशासनिक र पछिल्लो समयमा शिक्षाको भाषाको रूपमा मान्यता

२. एकीकरणपछिको एकल भाषा र संस्कृतिको हैकमको उत्कर्षका बेला राज्य व्यवस्थाबाट पालित र पोषित बौद्धिक वर्गले पनि विजित आदिवासी जनजातिका भाषाहरूलाई समाप्त गर्ने दिशामा घोर प्रयास गरिरहेको पाइन्छ। श्री कृष्णचन्द्र अर्याल व वैद्यनाथ जोशी (सेढाईं), गोर्खा भाषा, गोर्खा भाषा एजेन्सी कार्यालय नेपालबाट वि.स. १९७४ (इ. १९१७) मा प्रकाशित आलेखबाट उद्धरण यहाँ प्रस्तुत गरिन्छ (हर्क गुरुङ, २००२)।

"अझसम्म एक ही 'गोर्खा भाषा' को सर्वव्यापकता हुन सकेको छैन, किन्तु नेवार, भोटे, मगर, गुरुङ, लिम्बू, सुनुवार, दनुवार, थारू, प्रवृत्तिका जङ्गली भाषाहरूले पनि आफ्ना जन्मस्थानलाई एकदम छाड्न सकेका छैनन्। जहाँसम्म एक मात्र 'गोर्खा भाषा' ले अरू सबै जङ्गली भाषालाई अर्धचन्द्र (गलहती) लगाउन्न, त्यहाँसम्म 'गोर्खा भाषा' को उन्नति हुन्छ भन्नु र मुख्य भाषा कहिन योग्य छ भन्नु केवल मनोलड्डु मात्र हो।"

३. खस नेपाली भाषाबाहेकका अन्य भाषामा लेखिने व्यक्तिगत लेनदेनका तमसुक र अन्य कागतपत्रहरूलाई अड्डाअदालतमा कानुनी प्रमाणका रूपमा मान्यता नदिने इस्तिहार श्री ३ चन्द्रशमशेरबाट वि.स. १९७८ साउन २९ गते जारी भयो।

४. राज्य स्तरबाट भएको एकभाषा नीतिको निरन्तरताबाट हौसिएका प्रबुद्ध नागरिक वा बौद्धिक व्यक्तित्वहरूसमेतले सात सालको जनक्रान्तिपछि पनि जातीय र भाषिक असहिष्णुताको पराकाष्ठा देखाएका छन्। राममणि आ.दि.को कविता (भलोकुराको नमुना, काठमाडौं २०१०, पृ. १२८) को निम्न दुई उद्धरणले छर्लङ्ग (प्रधान, १९९१:२५३) पारेको छ।

(क) तिघ्रे र पर्वति स्वाँठे जुन हाम्रा दाज्यू-भाइ छन्।
ती तेही रही बाँचून्, हुनु पर्दैन सभ्य ती।।
अयोग्य, मतुवाली र पाखड्‌डी, नीच, निर्दयी।
पस्यो भने मण्डलमा राज्य उठ्ठा गराउँछ।

(ख) बाहुन-छेत्रीहरूबाटै मन्त्रिमण्डल जोडनू।
बाहुन-छेत्रीहरूमा पनि उच्चकुलका हुनू,
मन्त्रिमण्डल जोडदा कहीं कतै पनि
भूलले पनि मतवाली कतै नहुलनू।

५. एकीकरणकालदेखि नै यथावत रूपमा रहेको राज्य-संरचना र सरकारी निकाय र नीतिनिर्माताहरूले सात सालको जनक्रान्तिपछिको प्रजातान्त्रिक कालमा पनि नागरिकहरूको हक र अधिकारको रक्षा गर्नका सट्टा एक भाषिक नीतिको समर्थन र भाषिक असहिष्णुतलाई निरन्तरता दिएका छन्। नेपालमा शिक्षा, नेपाल राष्ट्रिय शिक्षा आयोगको विवरण, कलेज अफ एजुकेसन, (सन् १९५६, पृ. १०७-१०८) एउटा रिपोर्टको निम्नले जातीय अहंकार र भाषिक दमन तथा संश्लेषणवादी शैलीलाई निसङ्कोच प्रदर्शित (नेपालभाषा सङ्घर्ष समिति, २००१) गरेको छ। जस्तै,

"स्थानीय भाषाहरूको अध्ययनले नेपालीको विकासमा अवरोध खडा गर्ने छ, किनकि विद्यार्थीहरूले ती भाषाहरूमा आफ्नो घर र समाजमा नेपालीभन्दा बढी प्रयोग गर्ने छन्। त्यसो भएमा नेपाली भाषा विदेशी भाषाकै रूपमा रहने छ। नयाँ पुस्ताका विद्यार्थीहरूलाई नेपाली भाषा यिनीहरूको आधार भाषाको रूपमा सिकाए अरू भाषाहरूको क्रमशः लोप हुँदै जाने छ र यसले नेपालको राष्ट्रिय एकतालाई अझ बढी मजबुत बनाउने छ।"

यसरी भाषाहरूका बीच असमान र भेदभावपूर्ण व्यवहारलाई यथावत् कायम राख्दै सुरु भएको एकभाषा नीतिले पछि बनेका संविधान, ऐननियमहरूमा पनि निरन्तरता पाएर आयो।

६. नेपाल अधिराज्यको संविधान (२०१५) को परिच्छेद २ को विविध व्यवस्था धारा ७० मा पहिलोचोटि 'देवनागरी लिपिमा नेपाली भाषा नेपालको राष्ट्रभाषा हुने छ' भनेर शदियौंदेखिको भाषाविभेदलाई संवैधानिकता प्रदान गर्ने काम भयो। यसैलाई नेपाल अधिराज्यको संविधान (२०१९) ले पनि निरन्तरता दियो।

७. नेपाल अधिराज्यको संविधान (२०४७) को राज्यको निर्देशक सिद्धान्तअन्तर्गत 'विभिन्न धर्म, जातजाति, सम्प्रदाय र भाषाभाषीबीच स्वस्थ एवं सुमधुर सामाजिक सम्बन्ध विकसित गरी सबैको भाषा, साहित्य, लिपि, कला र संस्कृतिको विकासद्वारा देशको सांस्कृतिक विविधता कायमै राखी राष्ट्रिय एकता सुदृढ गर्ने नीति राज्यले अवलम्बन गर्ने छ' भने पनि धारा ६(१) र ६(२) ले भाषाभाषाबीच विभेदलाई संवैधानिकता दियो। त्यसरी नै –

८. धारा १८(२) मा मातृभाषाहरूमा प्राथमिक तहसम्म शिक्षा दिन सकिने छ भनेर राज्यले आफ्नो दायित्वबाट पन्छने काम त गर्‍यो नै र यसका साथैमा उच्च तहसम्मको शिक्षा मातृभाषामा पाउने अधिकारबाट पनि अलग राख्न सक्ने ठाउँ पायो।

९. नेपाल अधिराज्यको संविधान, २०४७ को भाग ३, धारा ११ मा 'राज्यले नागरिकहरूका बीच धर्म, वर्ण, लिङ्ग, जाति वा वैचारिक आस्था वा तीमध्ये कुनै कुराको आधारमा भेदभाव गर्ने छैन' भनेर भाषाको आधारमा भेदभाव गरिने छैन नभनेकाले प्रत्येक नागरिकले उपभोग गर्न पाउनु पर्ने समानताको अधिकारमा भाषाको सन्दर्भमा भेदभावलाई कायमै राखेको प्रस्ट पार्‍यो।

१०. काठमाडौं महानगरपालिका र जनकपुर नगरपालिकाका विरुद्ध सर्वोच्च अदालतको जेठ १८, २०५६ को फैसलाले भाषाप्रति भेदभावको नीतिलाई वैधानिकता दियो।

११. लोकसेवा आयोगसँग सम्बिन्धत फैसलाले भाषिक असहिष्णुतालाई प्रोत्साहित गर्‍यो।

१२. आदिवासी जनजातिलाई श्री ५ को सरकारले दिएको आरक्षण सम्बन्धमा अदालतको आदेश र

१३. पाँचथर जिल्लामा सशस्त्र सेनाहरूबाट त्यहाँका लिम्बूहरूलाई मातृभाषा बोल्नमा लगाएको प्रतिबन्ध (२०६०/६१ तिर) ले संविधान, विशेष कानुन, प्रशासन, सबै तहबाट चरम भाषिक भेदभावको पुष्टि गरेको देखायो।

१४. राष्ट्रभाषा नेपालीबाहेक कुनै पनि राष्ट्रिय भाषा जानेका आधारमा नागरिकता प्रदान नहुने।

१५. भाषाभाषीहरूले भाषाको आधारमा दलमा सङ्गठित हुन नपाउने प्रावधानले पनि चरम भाषिक भेदभाव देखायो।

१६. संविधानको भाग १ को प्रारम्भिकको ४(१) ले नेपाललाई हिन्दू अधिराज्य घोषित गरेर धर्मका नाममा विभेद सृजना गर्‍यो (जसको परिणामं छद्म रूपमा भदौ १६, २०६१ को काण्डमा देखा पर्‍यो)।

१७. राणकालमा त वि.स. १९९७ सालको पर्वमा पनि मातृभाषालाई निहुँ बनाएर जेलनेल दिने काम भएको कवि सिद्धिचरण श्रेष्ठलाई नेवारी/नेपालभाषामा 'क्रान्तिबिना थन दइ मखु सुख शान्ति' कविता लेख्दा जेल हालेर सुरु भएको भाषिक दमनको चरमोत्कर्ष थियो।

१८. निर्दलीय पञ्चायती प्रजातन्त्रको काल (२०२२) मा रेडियो नेपालबाट नेवार भाषामा भइरहेको समाचार प्रसारणलाई बन्द गर्ने कामबाट देखा पर्‍यो।

१९.यसरी नै श्री ५ को सरकारले आफैले गठन गरेका आयोगहरूका भाषासम्बन्धी सिफारिसलाई पनि सधैं लत्याउने काम गरी आयो। जस्तै-

२७. संयुक्त राष्ट्रसङ्घको युनेस्कोले फेब्रुअरी २१ लाई विश्वमातृभाषा दिवस मनाउने घोषणालाई पनि नेपालले पूर्णतया तिरस्कार गर्दै आएको छ।

## राज्य व्यवस्थाको मत्स्य न्याय नीति

सारसङ्क्षेपमा के भन्न सकिन्छ भने नेपालमा भाषा समस्याको जन्म हुनुमा राजनैतिक कारणहरू छन्। (क) मुलुकलाई सांस्कृतिक विलयनको भाँडो मान्नु, (ख) एकभाषिक नीति लाद्नु, (ग) खस नेपाली भाषाबाहेकका भाषाप्रति असहिष्णु हुनु, (घ) एक भाषिक नीतिका कारण शिक्षाको एक मात्र माध्यम खस भाषालाई बनाइनु, त्यसरी नै गाँडमाथि गलगाँड भने झैं काम र मामको खोजीमा बसाईंसराइले द्विभाषिक र बहुभाषिक हुँदै जानु पर्दा नेपालका अल्पसङ्ख्यक, आदिवासी र जनजातिमा भाषा विचलन बढ्नु, (ङ) अशिक्षित र पछाडि पारिएकाले चेतनाको कमी (घ) र ठूला र ठालू भाषाका प्रभावले सुविधा र सम्मानको लोभमा मातृभाषाप्रति हीनताबोधले वक्ताको सङ्ख्या न्यून हुँदै जानु, (च) सहरीकरणमा तीव्रता, सूचना र सञ्चार प्रविधिको विश्वव्यापी प्रभाव एवं (छ) भूमण्डलीकरणको चक्रव्यूहमा परेका कारण र आफूलाई भूमिपुत्र ठान्ने आदिवासी जनजाति र भाषिक अल्पसङ्ख्यकका भाषासँगै संस्कृति र परम्पराहरू लोपोन्मुख हुँदा तिनको जातीय पहिचान र अस्तित्व नै खतरामा परिसकेको छ।

## भाषा आन्दोलन : नेपालको सन्दर्भमा

नेपालमा प्रजातन्त्रको स्थापना (२००७) ले नागरिक अधिकार, अभिव्यक्ति र प्रकाशनको स्वतन्त्रताका साथै सङ्गठित हुने वातावरण दिएपछि अल्पसङ्ख्यक जातजाति, आदिवासी जनजाति, भाषाभाषी र धर्मावलम्बीहरूले जातीय र क्षेत्रीय आधारमा सामाजिक, भाषिक, सांस्कृतिक तथा राजनैतिक रूपले पनि सङ्गठित हुने प्रयास पटकपटक भएका छन्। प्रजातन्त्रको स्थापना (२००७) कालदेखि नै क्षेत्रीय र जातीय स्तरमा सामाजिक न्यायका आधारमा कुनै भूमिका र प्रतिनिधित्व नपाएका कारणले खुल्न पुगेका तराई काङ्ग्रेस र मतवाली काङ्ग्रेस यसका ज्वलन्त उदाहरण छन्। त्यसपछि पञ्चायतकालमा काठमाडौंमा मंखाःखलः (२०२२) स्थापित भयो जसले भाषिक आन्दोलनभित्र यही कुरालाई मुखरित गरेको थियो र गर्दै आएको छ। पञ्चायतकालमा सुषुप्त रूपमा यही चेतनाले मगुराली, सेतामगुराली आदि नामबाट अभिव्यक्ति पाएका थिए। बहुदलीय प्रजातान्त्रिक व्यवस्थाको पुनर्बहालीपछि राजनैतिक सङ्गठनका रूपमा खुलेका जनमुक्ति पार्टी र सद्भावना पार्टीले प्रकट रूपमा यिनै जातीय, भाषिक, सांस्कृतिक तथा क्षेत्रीय राजनीतिक आकाङ्क्षालाई निरन्तरता दिएका छन्। प्रजातन्त्रको पुनर्स्थापनापछिको समयमा धेरै सामाजिक र जातीय सङ्घसंस्थाहरूको पनि जाति, भाषा, धर्म र संस्कृतिको संरक्षण र संवर्द्धनको लक्ष्य लिएर स्थापना भएका छन्।

## नेपालमा क्रमागत भाषा आन्दोलन

यहाँ नेपालमा चलेको भाषाहरूमा असमानता विरुद्धको आन्दोलनको इतिहासमाथि विहङ्गम दृष्टिपात गरौं।

१. मातृभाषामा शिक्षा दिइयोस् तथा रेडियोमा समाचार प्रसारण गरियोस् भनेर सात सालपछि देखि नै जातीय सङ्घसंस्थाहरूले सङ्गठित भई लागिपरेको देखिन्छ (पल्लो किराँत लिम्बूवानका मागहरू, २०१३)।

२ निर्दलीय पञ्चायतीकाल (२०२२) मा रेडियो नेपालबाट नेवार भाषामा भइरहेको समाचार प्रसारणलाई बिनाकुनै कारण बन्द गरेपछि भाषाका लागि सङ्घर्ष गर्नका लागि नै नेपालभाषा मंकाःखलःको जन्म भयो।

३. जातीय हितको रक्षा र प्रवर्द्धनका लागि विभिन्न भाषिक र सामाजिक संस्थाहरू खुल्न थाले। २०४६ को जनआन्दोलनपछि त सीमान्तमा घचेटिएका आदिवासी जनजातिहरूको जातीय र भाषिक हित प्रवर्द्धनका लागि विभिन्न संस्थाहरू (५९?)स्थापना भए।

५. आदिवासी जनजातिहरूको जातीय र भाषिक हित प्रवर्द्धनका लागि खुलेका विभिन्न संस्थाहरूको छाता संस्थाको रूपमा आदिवासी जनजाति महासङ्घको पनि स्थापना भयो।

६. आदिवासी जनजातिहरूका दबाबका कारण नै राष्ट्रिय जनजाति उत्थान प्रतिष्ठान, कार्यदल (२०५२) गठन भयो।

७. नेपाल जनजाति महासङ्घले 'नेपालमा आदिवासी जनजातिहरूको अधिकार प्रवर्द्धन गर्ने रणनीति तयार गर्ने राष्ट्रिय परामर्श गोष्ठी (२०५६, माघ २-६, धुलिखेल)' सम्पन्न गर्‍यो। जसले नेपालको आदिवासी जनजाति र तिनका भाषाको संरक्षण र विकासमा राज्यले लिएको अनुदार र पक्षपातपूर्ण नीतिलाई नङ्ग्याउँदै (क) संविधानको २७ स्थानमा संशोधन गर्ने सिफारिस गरेको छ भने (ख) मुलुकी ऐनमा ९ ओटा संशोधनको सिफारिस गरेको छ। त्यसरी नै (ग) विशेष ऐनहरूमा ३६ ओटा संशोधनसम्बन्धी सिफारिस गरेको छ। यिनीहरूमध्ये

(क) संविधानमा प्रस्तावना र अनुसूचीमा साथै धारा ९(४), ११(३), १८(२), र १५ मा समेत गरी भाषासँग सम्बन्धित संशोधनका १० सिफारिसहरू तथा

(ख) विशेष ऐनहरूमध्ये (१) स्थानीय स्वायत्त ऐन, २०५५ को दफा ३ र २५, २८(१) तथा (झ) (२) एवं ९३ (२) निर्वाचन (अपराध र सजाय) ऐन, २०४७ को ६(ख),(३) नेपाल नागरिकता ऐन, २०२० को ६(१)(क), (४) शिक्षा ऐन, २०२८ को ७(१), (५) नेपाली भाषा प्रकाशन संस्था ऐन, २०२१ र (६) नागरिक अधिकार ऐन, २०१२ को दफा ४ मा भाषाका कारण भेदभावसँग सम्बन्धित संशोधनका १० सिफारिसहरू गरिएका छन्।

८. नेपाल जनजाति महासङ्घले संसदको बाइसौं अधिवेशनमा प्रस्तुत गर्ने गरी 'भाषा सम्बन्धमा व्यवस्था गर्न बनेको विधेयक, २०५८' (गैरसरकारी विधेयक) तयार पारेर राजनैतिक दलहरूमार्फत दर्ता गरायो।

९. भाषिक समानताको हकका लागि नेपाल जनजाति महासङ्घले पहिलोपटक ऐतिहासिक 'मातृभाषा राष्ट्रिय सम्मेलन (मार्च १६-१७, २०००, चैत ३-४ २०५६)' आयोजना गऱ्यो। यस सम्मेलनमा सहभागी हुने मानवअधिकारवादी सङ्घसंस्थाका ३ प्रतिनिधि तथा जातीय र भाषिक ७० सङ्घसंस्थाहरूले 'भाषिक अधिकारसम्बन्धी घोषणापत्र, २०००' पारित गरेर जारी गरे।

१०. नेपालभाषा सङ्घर्ष समितिले भाषिक समान अधिकारको प्रश्न र संविधान संशोधन, राष्ट्रिय गोष्ठीको आयोजना, १७ मार्च २००१ मा गऱ्यो त्यस्को प्रतिवेदन पनि प्रकाशित गऱ्यो।

११. 'सबैका लागि शिक्षा' भन्ने कार्यक्रममा आदिवासी जनजाति र भाषिक अल्पसङ्ख्यकका भाषा विषयक समिति (२००२) को छुट्टै गठन हुन पुग्यो।

१२. विभिन्न जातीय सङ्घसंस्थाहरूले वि.स. २०५६ जेठ १८ गतेको अदालतको फैसलापश्चात् देशव्यापी रूपमा सुरु भएका प्रदर्शन, धर्ना, चक्काजाम, कालोपट्टी आदि कार्यक्रम, दिएका गिरफ्तारी र .पर्चाबाजीले समान भाषिक अधिकारको अभियानलाई उचाइमा लगेको पाइन्छ।

१३. वि.सं. २०५६ जेठ १८ गतेका दिनलाई भाषिक असमानतामा पारिएका भाषाभाषीले प्रत्येक वर्ष कालो दिवसका रूपमा मनाई आएका छन्।

१४. भाषिक असमानताको नीतिको निरन्तरताको फलस्वरूप जनगणना २०५८ मा खस मातृभाषीहरूले हालसम्म भएको कुनै जनगणनामा कहिले पनि दोस्रो भाषा नलेखाएको तथ्य पनि देखिन आयो। यसका पछाडि साना भाषा बोल्नेहरूले द्वैभाषिक वा बहुभाषिक हुनु पर्ने बाध्यता र ठूलो भाषालाई त्यो बाध्यता नभएको स्पष्टीकरण सामु आयो।

१५. श्री तामाङ घेदुङका तर्फबाट यसका अध्यक्ष (परशुराम तामाङ, २०५८:२६-२७)) ले सार्वजनिक सुरक्षा नियमावली, २०५८ का विरुद्ध खारेज गरिपाउँ भन्ने अदालतमा रिट दायर (२०५८।३।३) गरे।

## पहिचानको व्यग्रता

पहिचान भनेको अरूभन्दा भिन्न हुँ भन्ने मूल्य एवं मान्यता हो। आफ्ना-आफ्ना सांस्कृतिक मूल्य-मान्यता, आस्था र विश्वाश भएका आदिवासी जनजातिले आफ्नो अस्तित्व बचाउन अरूभन्दा भिन्न भएको बोध गर्न खोज्दछन्। ठूला संस्कृति, भाषा र धर्मको प्रभुत्वभित्र टाक्सिन

बाध्य तिनको छटपटिले स्वपहिचानप्रतिको व्यग्रतालाई तिनको आफ्नो जाति, भाषा र धर्मप्रतिको प्रतिबद्धताले देखाउँछ।

राष्ट्रियता विश्वमा राजनैतिक शक्ति र राजनैतिक नाराका रूपमा देखा परेको छ। त्यसरी नै जातीयताको पहिचानको व्यग्रता पनि बढ्दो छ। राष्ट्रियता र भूमण्डलीकरणका बीच द्वन्द्व चले झैं राष्ट्रियता र जातीयताका बीच पनि द्वन्द्व हुन्छ नै। त्यसैले, नेपाल झैं बहुजातीय र बहुभाषिक देशमा नेपाली राष्ट्रियता भनेको भिन्नताको विरोध हो भन्ने सोच प्रतिगमनको द्योतक भएको छ।

नागरिक पहिचान वा स्थल पहिचानको कोठाभित्र थुनेर शोषित र शासित समूहलाई आफूभित्र समाहित गर्न सजिलोका लागि ठूलो समुदाय वा शासक समूहले एकल राष्ट्र-राज्य तथा राष्ट्रिय अखण्डताको नारा घन्काउँछन्। बहुराष्ट्र राज्यको धारणाले आफ्नो अस्तित्व सुरक्षित रहने हुनाले आदिवासी जनजातिहरू सूक्ष्म पहिचान वा जातीय पहिचानमा जोड दिँदै छन्। साना माछालाई ठूला माछाले खाएजस्तै ठूला वा ठालू परम्पराले साना परम्परालाई निल्न सजिलो होस् भनेर राष्ट्रलाई पगाल्ने भाँडो बनाउने खोज्दछन्। इन्द्रेणीको सातै रङलाई घोलेर गेरुवा रङ बनाउने प्रयत्न हैकमवादी प्रवृत्ति हो।

नेपालको आजका समस्या भनेको राजनैतिक, आर्थिक मात्र होइन सामाजिक-सांस्कृतिक पनि हो। राजनैतिक स्वतन्त्रता र आर्थिक सम्पन्नता मात्र होइन आदिवासी जनजातिले चाहेको सामाजिक र सांस्कृतिक भेदभावबाट मुक्ति पनि हो। नेपालमा चलेको आदिवासी जनजातिको भाषाको आन्दोलन व्यग्रतापूर्वक लडिँदै गरिएको यही सांस्कृतिक पहिचानको अर्को लडाइँ हो।

## भाषिक सहयात्रा अर्थात् समावेशी पद्धति

धेरै भाषा एउटा देशमा बोलिनु वा लेखिनु कुनै पनि देशका लागि (नेपालका लागि) समस्या हुँदैन। सिद्धान्ततः सम्प्रभुतामा कुनै भाषा ठूलो कुनै भाषा सानो हुँदैन। राजनीतिक र सामाजिक सन्दर्भमा यिनको भूमिका फरक हुन सक्छ। तर धेरै सङ्ख्याले बोल्ने भाषा ठूलो र ठूलै महत्त्वको अनि थोरै सङ्ख्याले बोल्ने भाषा सानो र कम महत्त्वको भन्ने हैकमवादी सोचले समस्याका रक्तबीजलाई जन्म दिन्छन्।

मुलुकभित्र द्वन्द्वको आगोलाई निभाउन र राष्ट्रको सम्पदाका रूपमा रहेका संस्कृतिका संवाहक भाषाहरूका संरक्षण र संवर्द्धन गर्न मुलुकले भाषिक असमानताको नीति अङ्गीकार गर्नु पर्दछ। यो उद्देश्य प्राप्तिका लागि सम्पर्क भाषाको रूपमा रहेको खस (राष्ट्र) भाषा र अन्य मातृ (राष्ट्रिय) भाषाहरूका बीच सहयात्रा हुनु पर्दछ (दाहाल, २०५८)। नेपालका भाषाहरूबीचको यो सहयात्रा समानतामा आधारित हुनु पर्दछ। घोडा चढेर हिंड्नेसँग कुम्लो बोकेर घोडाको पुच्छर

समाती हिँड्नेले बासमा सँगै पुगेको जस्तो सहयात्रा नभएर समान स्तरमा सहयात्रा भए अपेक्षा पूरा गर्ने मङ्गलमय त्यस्तो सहयात्रा हुन सक्दछ (राई, २०५८)।

विविधता र बहुलता आधुनिक नेपाल राष्ट्र र समाजको वास्तविकता हो। बहुलताको सोच जातीय र सांस्कृतिक पहिचानको खोजी हो। दोस्रोको उपस्थितिको स्वीकरणपछि चालेको कदम नै राष्ट्रिय हितमा हुन्छ। अर्काको अस्तित्वको स्वीकार भनेको समावेशी नीति र सहभागिताको दिशामा प्रस्थान हो। भाषा-संस्कृतिमा भेदभाव गरेर समाजमा शान्ति र सद्भाव सम्भव हुँदैन। बहुलवादी सामाजिक परिस्थितिमा सांस्कृतिक द्वन्द्व होइन सद्भावको आवश्यकता छ। सधैं सम्झनु पर्ने कुरा के हो भने सांस्कृतिक दमन विध्वंसपूर्ण हुन्छ तर विविधता र बहुलता स्वीकार शक्तिको स्रोत पनि हुन्छ।

### राज्यको पुनर्संरचना

पुनर्स्थापित बहुदलीय प्रजातन्त्रले दिएको देशको मूल कानुनका रूपमा रहेको नेपाल अधिराज्यको संविधान (२०४७) ले पनि ससाना संस्कृति, भाषा र जातीयतालाई घोलेर एउटै भाषा, धर्म र संस्कृति, एकल मूल्य र मान्यताको निर्माणमा जोड दिएकाले नै आज मुलुकले जातीय, सांस्कृतिक र भाषिक समस्या बेहोर्नु परेको हो।

मुलुकको सम्पूर्ण जनसङ्ख्याको लगभग ३७ प्रतिशत रहेका ५९ आदिवासी जनजातिको राज्य व्यवस्थामा सहभागिता र प्रतिनिधित्व नगन्य रहेको छ। उनीहरूको हैसियत दोस्रो दर्जाको नागरिकसरह मात्र छ। विगत एक दशकदेखि नेपालका आदिवासी जनजाति र भाषिक आन्दोलनकारीहरूले राज्य र आदिवासी जनजाति समाजबीचको विद्यमान असन्तुलित सम्बन्धलाई पुनर्परिभाषित गर्न आग्रह गर्दै आएको छ। जसका कारण शासक जाति र शोषित आदिवासी जनजातिका बीचको सत्ता-संयन्त्र, शक्ति-संरचना र राज्य व्यवस्थाभित्र असमान सम्बन्धलाई सामाजिक न्याय र समानताका आधारमा पुनर्निधारण गर्नका लागि भूसांस्कृतिक बनोट अर्थात् जातीय, भाषिक, सांस्कृतिक र जनसाङ्ख्यिक आधारमा राज्यको पुनर्संरचनाको बहस मुलुकमा प्रारम्भ भइसकेको छ।

नेपालको आजको समस्या राजनैतिक र आर्थिक मात्र नभएर सामाजिक र सांस्कृतिक पनि हुन्। राजनैतिक साझेदारी मात्र नभएर सांस्कृतिक समानता आजका मुद्दा हुन्। जाति, भाषा, धर्म, संस्कृति, राजनीति, सत्ता-संरचना, स्रोत-साधन तथा अवसरजस्ता सबै क्षेत्र र तहमा देखिएको असमानता र भेदभाव हटाउनका लागि विद्यमान संविधानको संशोधन मात्र पर्याप्त छैन। त्यसैले आदिवासी जनजाति र भाषिक आन्दोलनकारीहरूले संविधानको पुनर्लेखन अथवा नयाँ संविधानको निर्माणतिरै जोड दिँदै आएका हुन्। समानताको सिद्धान्तमा सबैलाई सबै क्षेत्रमा संलग्न र

सहभागिता गराउने, सत्तामा सबैको पहुँच र साझेदारीको प्रत्याभूति दिने सहमतिमूलक र समानतामा आधारित समावेशी प्रजातान्त्रिक पद्धति आजको आवश्यकता हो।

अल्पसङ्ख्यक जातजाति र आदिवासी जनजातिको भाषा र संस्कृति तथा भौगोलिक क्षेत्रका आधारमा राजनैतिक, आर्थिक र सामाजिक-सांस्कृतिक अधिकारले सम्पन्न क्षेत्रीय स्वायत्तता र जातीय स्वशासन (स्वायत्तता) पुनर्संरचनाका ढाँचा हुन सक्दछन्। जातिसँग जस्तै भूमि र भाषाको सम्बन्ध अन्योन्याश्रित हुन्छ। मातृभाषा र मातृभूमिको नारा त्यसैले घन्केको हो। राज्य व्यवस्थाको पुनर्संरचना गर्दा भाषा बलियो आधार हुन्छ। भारतमा भाषिक आधारमा भएको राज्यको पुनर्संरचनालाई एउटा उदाहरणका रूपमा लिन सकिन्छ।

## सन्दर्भसामग्री

गुरुङ, डा. हर्क, साक्षरता, भाषा र सामाजिक संलग्नता विषयक गोष्ठी, ५ सेप्टेम्बर सन् २००२।

गुरुङ, डा. हर्क, *एफर्मेटिभ एक्सन इन नेपालिज कन्टेक्स्ट* सगुनद्वारा आयोजित 'नेसनल डायलोग अन एफर्मेटिभ एक्सन एन्ड इलेक्टोरल सिस्टम इन नेपाल' नामक गोष्ठीमा प्रस्तुत कार्यपत्र, २७-२८ सेप्टेम्बर, सन् २००३।

गुरुङ, डा. हर्क, राष्ट्रसङ्घले आलिवासीलाई झमेला ठानेको छः प्रवचन, विश्वआदिवासी दशकः उपलब्धि, समस्या र समाधानका उपायहरू, आ.ज.उ.रा. प्रतिष्ठान, साँचल, सानेपा, ललितपुर, पृ. १३, साउन २६, २०६१।

ग्राइम्स, बारबारा, एफ्. (सं.), *इथ्नोलोगः ल्याङ्ग्वेजेज अफ् दि वर्ल्ड,* १३औं संस्करण, डलास, टि. एक्स. समर इन्स्टिच्युट अफ लिङ्ग्विष्टिक्स, सन् १९९६।

डा. तोबा, इन्गिर्ड तोबा एन्ड डा. नोबेलकिशोर राई, *युनेस्को ल्याङ्ग्वेज सर्भे रिपोर्ट* नेपाल, काठमाडौं, युनेस्को/नेपाल, सन् २००२।

डेविड, क्रिष्टल, *ल्याङ्ग्वेज डेथ,* क्याम्ब्रिज युनिवर्सिटी, प्रेस, लन्डन पृ. ५, १५१, १६५, सन् २०००।

दाहाल, प्रा.डा. बल्लभमणि र भीमनारायण, ने.रा.प्र.प्र.द्वारा २०५८।१०।१९ मा आयोजित भाषिक गोष्ठीमा 'राष्ट्रभाषा र राष्ट्रिय भाषाहरूको सहयात्रा एवं विकासका अपेक्षाहरू' (कार्यपत्र) प्रज्ञा, पूर्णाङ्क ९५, कार्त्तिक, २०५८।

नेपाल तामाङ घेदुङ र नेवाः राष्ट्रिय आन्दोलन, *भाषा बुलेटिन,* भाषा सम्बन्धमा व्यवस्था गर्न बनेको विधेयक २०५८ र आधारपत्र, नेपाल तामाङ घेदुङ र नेवाः राष्ट्रिय आन्दोलन, वर्ष १ अङ्क १, साउन २०५८।

नेपालभाषा सङ्घर्ष समिति, भाषिक समान अधिकारको प्रश्न र संविधान संशोधन, राष्ट्रिय विचार गोष्ठीको प्रतिवेदन, नेपालभाषा सङ्घर्ष समिति, बाङ्गेमुढा, काठमाडौं, १७ मार्च सन् २००१।

न्यौपाने, गोविन्द, *नेपालमा जातीय प्रश्नः सामाजिक बनोट र साझेदारीको सम्भावना,* काठमाडौं, पृ. ८२, सन् २०००।

पोखरेल, प्रा. डा. माधवप्रसाद, 'नेपालले अङ्गीकार गर्नु पर्ने भाषिक नीति र भाषिक योजना' *प्रज्ञा,* वर्ष २२, पूर्णाङ्क ७९:३१, २०५०।

पोखरेल, प्रा. डा. माधवप्रसाद, दसौं पञ्चवर्षीय योजनामा राष्ट्रिय भाषाको संरक्षण तथा विकाससम्बन्धी सुझाउ (कार्यपत्र), २०५८।

प्रधान, डा. कुमार, *द गोर्खा कङ्क्वेष्ट्स, त प्रोसेस एन्ड कन्सिक्वेन्सेस अफ द युनिफिकेसन अफ नेपाल, विथ पार्टिकुलर रेफरेन्स टु इस्टर्न नेपाल,* अक्सफोर्ड युनिभर्सिटी, सन् १९९१।

प्रा. डा. चुडामणि, 'नेपालको सन्दर्भमा भाषा-योजना' *प्रज्ञा,* वर्ष २२, पूर्णाङ्क ७९: ८६, २०५०।

बैरागी काइँला, *नेपाली समाजको संरचना र बदलिँदो समीकरण,* नेपाल समसामयिक अध्ययन केन्द्र, सानेपा, ललितपुर, साउन २०५८।

बैरागी काइँला, राष्ट्रिय भाषा अर्थात् मातृभाषामा चलचित्रः किन र कसका लागि? नेपाल चलचित्र विकास बोर्डद्वारा आयोजित गोष्ठीमा प्रस्तुत कार्यपत्र, २०५८।

बैरागी काइँला, *आदिवासी र जनजातिको भाषाको संरक्षण र विकास, छापामा जनजाति,* सम्पादक प्रत्यूष वन्त, कुमार यात्रु, भास्कर गौतम, एकता बुक्स, काठमाडौं, पृ. २९२, २०५८।

भाषिक समान अधिकारको प्रश्न र संविधान संशोधन, प्रतिवेदन, नेपालभाषा सङ्घर्ष समिति, पृ. ४, १७ मार्च, सन् २००१।

मल्ल, के.पी., ल्याङग्वेज एन्ड सोसाइटी इन् नेपाल, मल्लसम्पादित नेपाली पर्स्पेक्टिभस् ओन् कन्टिन्युइटी एन्ड चेन्ज, *सिनास,* कीर्तिपुर, पृ. ४४५-४६६, सन् १९८९।

यादव, प्रा. डा. योगेन्द्र प्रसाद, शारदा भद्रा, कृष्णप्रसाद पराजुली, "नेपालमा आदिवासी जनजातिका भाषाहरूको स्थितिः एक विशलेषण", आदिवासी जनजाति एत्थान राष्ट्रिय प्रतिष्ठानद्वारा आयोजित जनजातीय मातृभाषासम्बन्धी गोष्ठी, कार्तिक २६मा प्रस्तुत कार्यपत्र, २०६१।

यादव, प्रा. डा. योगेन्द्रप्रसाद, *'ल्याङ्ग्वेज' पपुलेसन मोनोग्राफ अफ नेपाल,* अङ्क १, काठमाडौं, सेन्ट्रल व्युरो अफ स्टाटिस्टिक्स, सन् २००३।

राई, प्रा. डा. नोवलकिशोर, राष्ट्रभाषा र राष्ट्रिय भाषाहरूको सहयात्रा एवं विकासका अपेक्षाहरू (कार्यपत्र), माथि लिखित टिप्पणी, प्रज्ञा, वर्ष ३२, पूणाङ्क, ९५, कात्तिक-चैत, ने.रा.प्र.प्र. काठमाडौं, २०५८।

राष्ट्रिय भाषा नीति सुझाउ आयोगको प्रतिवेदन, काठमाडौं, ने.रा.प्र.प्र., २०५०।

शर्मा, प्रयागराज, 'हाउ टु टेन्ड द गार्डेन', *हिमाल* वर्ष ५, अङ्क ३, काठमाडौं, सन् १९९२।

# नागरिक समाज, भ्रष्टाचारसम्बन्धी सङ्कथन र प्रजातन्त्र

जीवनराज शर्मा, सुजित कर्ण

यदि प्रजातन्त्रलाई बलियो बनाउने जिम्मेवारी नागरिक समाजको हो र स्थापित सैद्धान्तिक मान्यतालाई स्वीकार्ने हो भने प्रजातन्त्र कमजोर हुनु भनेको नागरिक समाज असफल हुनु हो भन्न सकिन्छ। यसै मान्यतामा आधारित यस लेखले जनवकालतका नाममा नागरिक समाजको तर्फबाट हुने गरेका विश्लेषण, क्रिया-प्रतिक्रिया तथा आवाज उठाउने प्रेस तथा नागरिक समाजका सङ्घसङ्गठनको उद्देश्य, काम, प्रकृति तथा मान्यतामाथि बहस गर्ने जमर्को गरेको छ।

यो लेखको प्रमुख उद्देश्य कुशासन तथा भ्रष्टाचारका विरुद्धमा नागरिक समाजले गर्ने गरेको आन्दोलनको चिरफार गर्नु रहेको छ। नेपालमा प्रजातन्त्रको पुनर्स्थापनापछि प्रेस तथा नागरिक समाजका विभिन्न सङ्घसंस्थाहरूले नेपाल अधिराज्यको संविधान २०४७ मा उल्लेखित विभिन्न मौलिक अधिकारहरूको उपयोग तथा 'उपभोग' गर्दै कुशासन तथा भ्रष्टाचारका बारेमा विभिन्न मुद्दाहरू प्राथमिकताका साथ जनमानसमा ल्याउन महत्त्वपूर्ण भूमिका खेलेका छन्। विगतका दिनमा भ्रष्टाचारसँग सम्बन्धित मुद्दाहरूले निकै ठूलो स्थान पाए भने नागरिक समाजको प्रतिनिधिको रूपमा वैदेशिक सहयोगको आड लिएर विभिन्न पेसा (पत्रकार, कानुनविद्, समाजशास्त्री, शिक्षक, प्राध्यापक, गैरसरकारी संस्थामा काम गर्ने (गैससकर्मी) तथा कतिपय अन्य पेसामा लागेकाहरू) मा लागेको यो मध्यम तथा केही हदसम्म महत्त्वाकाङ्क्षी वर्गले उनीहरूकै शब्दमा कुशासन तथा भ्रष्टाचारविरुद्ध 'आवाज उठाउने' कामहरू गरे।

तर, के नेपालको सन्दर्भमा हेर्दा प्रजातन्त्र आएयता भ्रष्टाचार तथा कुशासन बढेको हो? अथवा प्रेस तथा नागरिक समाजका सङ्घसङ्गठनका विभिन्न काम तथा क्रियाकलापले गर्दा साना-ठूला मुद्दा पनि खुला रूपमा प्रस्तुत भई ठूलो रूप लिएको हो? यो प्रश्नले लेखको पृष्ठभूमि तयार गरे तापनि प्रजातन्त्र आएपछि नेपालमा कुशासन तथा भ्रष्टाचार बढ्यो, बढेन वा घट्यो, घटेन भनेर नापतौल गर्ने वा विश्लेषण गर्ने काम यो लेखको निम्ति असान्दर्भिक हुन जान्छ।[१] यो लेखमा यस्ता जनवकालतका नाममा नागरिक समाजको तर्फबाट हुने गरेका विश्लेषण, क्रिया-प्रतिक्रिया तथा आवाज उठाउने विभिन्न प्रेस तथा नागरिक समाजका सङ्घसङ्गठनको उद्देश्य, काम, प्रकृति तथा मान्यतामाथि बहस गर्ने जमर्को गरिएको छ। यदि प्रजातन्त्रलाई बलियो बनाउने जिम्मेवारी नागरिक समाजको हो भन्ने स्थापित सैद्धान्तिक मान्यतालाई स्वीकार्ने हो भने प्रजातन्त्र कमजोर हुनु भनेको नागरिक समाज असफल हुनु हो भन्न सकिन्छ।

---

१ जानकारीका लागि हरिवहादुर थापाद्वारा लिखित *भ्रष्टाचारको शल्यक्रिया* नामको पुस्तक हेर्नुहोस्।

हाम्रो अध्ययनको अवधारणा के हो भने नागरिक समाजको आफ्नै किसिमको एउटा सङ्कथन हुने गर्छ जसले सुशासन र भ्रष्टाचारजस्ता मुद्दाको विषयमा चासो बढाउँदै एउटा विशेष किसिमको ज्ञानको संरचना बनाउँछ, जसअनुसार नागरिक समाजले आफूलाई 'समाजको पहरेदार' को रूपमा प्रतिबिम्बित गर्दछ। ज्ञानको यही संरचनामा आधारित रहेर नागरिक समाजले विभिन्न कार्यक्रमहरू सञ्चालन गर्दछ जुन आफैमा असफल कार्यक्रम हो तैपनि कतिपय विषयमा यसले एक किसिमको 'सफलता' हात प्राप्त गर्दछ। अर्को अर्थमा उसले प्राप्त गर्ने यस्ता सफलताका असरहरू भने निकै नै शक्तिशाली र गम्भीर प्रकृतिको देखिन्छ। यस प्रकारको सफलताले नागरिक समाजका प्रतिनिधिको प्रभावलाई उनीहरूको आर्थिक तथा राजनैतिक स्वार्थ बढाउँदै लाने तथा नेपालमा कुशासन तथा भ्रष्टाचारलाई बहुदलीय राजनैतिक पार्टीसँग जोडेर प्रजातान्त्रिक व्यवस्थाप्रति एउटा वितृष्णा उत्पन्न गराई प्रजातान्त्रिक मूल्य र मान्यतालाई कमजोर तुल्याएको वा कमजोर तुल्याउनतर्फ केन्द्रित भएको महसुस गर्न सकिन्छ।

यता हालको राजनैतिक गतिविधिलाई नजिकबाट हेर्दा, राजाद्वारा चालिएको आफ्नो पछिल्लो राजनैतिक कदम देशमा व्याप्त कुशासन तथा भ्रष्टाचारका कारण आएको बाध्यात्मक परिस्थिति हो भनिएको छ। शासन बागडोर आफ्नो हातमा लिने निर्णयलाई भ्रष्टाचार तथा कुशासनलाई निर्मूल गर्ने तथा देशमा शान्ति स्थापना गर्ने आश्वासनसँग जोडेर प्रस्तुत गरिएको छ। गत '२०६१ माघ १९'[२] का दिन राष्ट्रको नाममा जारी ३१ मिनेट लामो सम्बोधनमा राजाले पार्टीगत राजनीति तथा भ्रष्टाचार र सुशासनको मुद्दालाई यसरी प्रस्तुत गरिएको छ।

> "... हत्या हिंसा र विध्वंशले देशलाई विनाशको भिरालोमा पुऱ्याउँदा पनि, देश र जनताको नाममा राजनीति गर्नेहरूले देश र जनताको हितप्रति आँखा चिम्लिन छाडेनन्। सत्ताका लागि हानथाप, सत्ता पाएपछि राज्य संयन्त्रको दुरुपयोग तथा देश र जनताको मूल्यमा व्यक्तिगत तथा समूहगत स्वार्थ पूरा गर्ने प्रतिस्पर्धाले परिस्थिति निरन्तर बिग्रने क्रम चलि नै रह्यो। राजनीतिको नाममा कानुनी राज्यको सर्वमान्य मर्यादा पनि भङ्ग गर्ने प्रयासहरू भए। ... प्रजातन्त्र र प्रगति एकअर्काका परिपूरक हुन्। तर नेपालको विगत केही वर्षको तीतो अनुभवले यसलाई असङ्गति साबित गर्ने चेष्टा गऱ्यो। सत्ताका लागि केन्द्रित राजनीतिमा नै अलमल्याएर बहुदलीय प्रजातन्त्रलाई अवमूल्यन गरियो। सरकार टिकाउने र फाल्ने होडमा संसद्मा विकृतिहरू भित्र्याइयो। कुनै पनि प्रतिनिधिसभालाई आफ्नो अवधि पूरा गर्न दिइएन। प्रजातान्त्रिक प्रक्रिया बेथितिको निरन्तरताले अवरुद्ध हुन थाल्यो। जनताको आशा भङ्ग गर्ने, भरोसा भत्काउने र प्रजातन्त्रमा नै वितृष्णा फैलाउने काम बढ्दै गयो ..."[३]

---

२ २०६१ साल माघ १९ मा राजाबाट शाही घोषणामार्फत शासन आफ्नो हातमा लिइएको घोषणा गरिएको थियो. यो घटना नेपालमा 'माघ १९' का नामले प्रख्यात छ।

३ श्री ५ महाराजाधिराज ज्ञानेन्द्रवीरविक्रम शाहदेवबाट राष्ट्रको नाममा दिएको शाही घोषणा २०६१ साल माघ २० गतेको गोरखापत्रमा प्रकाशित छ।

त्यस्तै, '२०५९, असोज १८'[४] पछि व्यक्त राजाका अभिव्यक्तिहरू राजनैतिक दलहरूप्रति निकै नै नकारात्मक रहेको पाइन्छ।[५] माघ १९ पछिको सरकारी क्रियाकलापहरूलाई हेर्दा यसका क्रियाकलापहरू बढी मात्रामा राजनैतिक दलहरू तथा बहुदलीय राजनैतिक पद्धतिलाई अलोकप्रिय बनाउनतर्फ केन्द्रित भएको पाइन्छ। यसरी नागरिक समाज तथा राजाको भ्रष्टाचार तथा सुशासनसम्बन्धी सङ्कथनमा एउटा समानता देख्न पाइन्छ जुन बहुदलीय राजनैतिक पद्धतिको आलोचनामा केन्द्रित छ। यस्तो सङ्कथनले प्रजातन्त्र र नागरिक समाजको सम्बन्धमा स्थापित सैद्धान्तिक पक्षलाई भने चुनौती दिन्छ।

यसरी बहसलाई अगाडि लै जानका निम्ति हामीले प्रेस तथा नागरिक समाजको कुशासन तथा भ्रष्टाचार विरोधी आन्दोलनको सङ्कथन तथा यसले प्रजातन्त्र, भ्रष्टाचार अनि सुशासनलाई कसरी चित्रण गर्‍यो भन्ने अध्ययन, विश्लेशण गर्नु जरुरी हुन्छ। यस्तो चित्रणले प्रजातन्त्रमाथि किन र कसरी प्रहार गर्न प्रेरित गर्‍यो भन्नेबारेमा बहस गर्नु अपरिहार्य हुन जान्छ। प्रजातन्त्रलाई संवर्द्धन गर्नुपर्ने अङ्गहरू नै यसलाई कमजोर पार्न किन र कसरी सफल भए भन्ने प्रश्न जति जटिल छ, त्यसको उत्तर खोज्न त्यत्तिकै कठिन छ। नागरिक समाजको अवधारणा र क्रियाकलाप प्रस्ट नभइसकेको बेला, यसले प्रजातन्त्रलाई बलियो पार्छ भन्ने सैद्धान्तिक मान्यतामाथि नै प्रश्न गर्नुपर्ने देखिन्छ। नागरिक समाजको अवधारणाको प्रयोग जुनसुकै क्षेत्रमा अति व्यापक रूपमा भइरहेको छ जसको बारेमा बहस गर्न नागरिक समाजकै वास्तविक अवधारणा तथा सैद्धान्तिक पक्षहरूमाथि व्यापक छलफलको आवश्यकता छ। वास्तवमा नागरिक समाजको पनि एक चरित्र हुन्छ, जुन कतिपय परिवेशमा यस समाजको प्रतिनिधित्व गर्नेहरूको वर्गीय संरचनामा आधारित हुने गर्छ। तसर्थ नागरिक समाजले गर्ने गरेका केही प्रयासहरूलाई विश्लेषण गर्दा हामीले यिनै संरचनागत आधारहरूलाई ध्यान दिनु पर्छ। यहाँ हामीले यस्तो सङ्कथनले कसलाई फाइदा पुग्यो? यो क्रममा नागरिक समाज र प्रजातन्त्र कसरी परिचालित हुन पुगे? भन्ने विषयबाट छलफलको थालनी गर्नु पर्दछ। यो लेखको निम्ति सङ्कथन विधिको प्रयोग गरिएको छ जसको उद्देश्य वास्तविकतालाई भिन्नभिन्न तरिकाले प्रस्तुत गर्न सकिन्छ भन्ने मात्रै रहेको छ।

---

४ २०५९ साल असोज १८ मा राजाद्वारा वहालमा रहेका प्रधानमन्त्री शेरवहादुर देउवालाई वर्खास्त गरिएको थियो, यो घटना नेपालमा 'असोज १८' का नामले प्रख्यात छ।

५ विस्तृत जानकारीका लागि *टाइम* (२६ जनवरी, सन् २००४), *टाइम* (२५ अप्रिल सन् २००५) हेर्न सकिन्छ। त्यस्तै १७ मे सन् २००४का दिन गोकर्णमा राजाबाट ३०० जति नागरिक समाजका प्रतिनिधिलाई दर्शन दिइएको थियो। उक्त समारोहमा गएका *हिमाल साउथ एसियाका* सम्पादक कनकमणि दीक्षितसँगको भेटमा राजाबाट राजनैतिक पार्टीहरूप्रति नकारात्मक धारणा व्यक्त भएको समाचार १७ मेपछि प्रकाशित भएका पत्रपत्रिकामा छापिएका थिए।

## सङ्कथन विधिको प्रयोग

यहाँनेर सङ्कथन विधिको बारेमा छोटो चर्चा गर्नु सान्दर्भिक हुन जान्छ। हालैको दिनहरूमा सामाजिक विज्ञानको क्षेत्रमा स्थापित सैद्धान्तिक अवधारणालाई विनिर्माण गर्नको निम्ति यो विधि प्रयोगमा आएको छ।[६] साधारण तरिकाले व्याख्या गर्दा, सङ्कथन भन्नाले कुनै पनि विषयको बारेमा प्रस्तुत हुने कथन हो जसले उक्त विषयको एउटा पाटोलाई मात्र प्रतिबिम्बित गर्दछ भने अर्को पाटोलाई बेवास्ता गर्दछ। सङ्कथन एउटा यस्तो ठाँउ हो जहाँ कुनै पनि कुरा भन्न, सोच्न, कल्पना गर्न वा काम गर्न सकिन्छ। कुनै पनि विषयमा अन्तरनिहित सैद्धान्तिक पक्षलाई उजागर गर्दै उक्त विषयमा सर्वमान्य हुँदै आएको यथार्थलाई सङ्कथन विधिको प्रयोगद्वारा विनिर्माण गर्न सकिन्छ। सङ्कथन को असर निकै नै गहिरो हुने भएकाले यसको विश्लेषणले हामीलाई उक्त विषयलाई भिन्नभिन्न दृष्टिकोणबाट हेर्न प्रेरित गर्दछ। यो विधिको प्रयोगबाट हामीले कुनै पनि विषयवस्तुलाई चिरफार गरी वास्तविकतालाई भिन्न तरिकाले प्रस्तुत गर्न सक्छौं। यसरी चिरफार गर्नको निम्ति तीनओटा पुनरावृत्तिपूर्ण प्रक्रियाबाट जानु पर्दछ।

(क) *विषयवस्तुलाई पाठको रूपमा हेर्ने :* दस्तावेज, प्रतिवेदन, समाचार, टिप्पणी, भाषण, नीति, कार्यक्रम, क्रियाकलाप, संस्था इत्यादिलाई पाठको रूपमा पढ्ने।

हाम्रो अध्ययनको सम्बन्धमा कुशासन/भ्रष्टाचार तथा प्रजातन्त्रको सम्बन्धको बारेमा बहस गर्दा यसको पाठ भ्रष्टाचारको परिणाम मात्र नभई कुशासन/भ्रष्टाचारका नाममा नागरिक समाजले गर्ने गरेको आन्दोलन हुनुपर्छ भन्ने हो। नागरिक समाजको परिभाषामा भष्ट्राचार वा कुशासन भनेको के हो? नागरिक समाजको बुझाइमा तथा व्यावहारमा भष्ट्राचार तथा कुशासन हुने कारण तथा क्षेत्रहरू कुन-कुन हुन्? भन्ने जस्ता प्रश्नहरू तथा भष्ट्राचार निर्मुल पार्ने उद्देश्यले चलाइएका विभिन्न कार्यक्रमहरू केलाइनु पर्दछ।

---

६ 'विनिर्माण' भन्ने अवधारणा उत्तरआधुनिकतावाट प्रेरित भएको पाइन्छ. यसको प्रयोग सर्वप्रथम ज्याक डेरिडाले गरेका हुन्। उत्तरआधुनिकताका बारेमा नेपालीमा लेखिएको परिचयात्मक लेखका निम्ति थापा (२००४) हेर्न सकिन्छ। दार्शनिक मिसेल फुको सङ्कथन विधिको गुरु मानिन्छन्। उनको प्रभावशाली प्रकाशन *डिसिप्लिन एन्ड पनिः द वर्थ अफ प्रिजन (सन्* १९७९) मा अपराधशास्त्रको तथा यससँग सम्वन्धित विशेषज्ञको चिरफार गर्दै, अपराधीहरूलाई सुधार्ने उद्देश्यले खोलिएको जेलले यसको उद्देश्यअनुरूप अपराधीलाई सुधार्ने भन्दा पनि अपराध तथा अपराधीलाई औपचारिक दायराभित्र ल्याउँदै सामान्य अवस्थामा फर्कनसमेत असम्भव बनाउँछ भन्ने तर्क छ। उनले मनोविज्ञान तथा यससँग सम्वन्धित विशेषज्ञताको चिरफार गर्दै, *म्याडनेस एन्ड सिभिलाइजेसन* भन्ने प्रभावशाली प्रकाशनमा 'पागल' भन्ने वर्गको विकास कसरी भयो भन्नेवारे विश्लेषण गरेका छन्। त्यस्तै गरी जेम्स फर्गुसन (सन् १९९४), आर्तुरो एस्कोवार (सन् १९९५), स्टेसी पिग (सन् १९९२, १९९६), जोन ह्यारिस (सन् २००२) लगायतले विकासलाई विनिर्माण गर्नका निम्ति सङ्कथन विधिको प्रयोग गरेका छन्।

(ख) *विषयवस्तुमा के समावेश गरिएको छ, के छैन? हेर्ने :* यसरी पाठ पढ्ने क्रममा, त्यसमा के के समाबेश गरिएको छ, के के छैन? भन्ने बारेमा बिस्तृत रूपले सूचना संकलन गर्दै जाने। यसरी हेर्दा विषयवस्तुलाई कसरी प्रतिबिम्बित गरिएको छ भन्ने बारेको अध्ययन गर्ने।

हाम्रो अध्ययनको सम्बन्धमा हेर्दा कुशासन/भ्रष्टाचारका नाममा नागरिक समाजले गर्ने गरेको आन्दोलनले कुनकुन कुरालाई समावेश गरेको छ वा छैन भनेर सूक्ष्म विश्लेषण गर्नु पर्दछ।

(ग) *विषयवस्तुको प्रतिनिधित्वको कारकतत्त्वको खोजी गर्ने :* विषयवस्तु प्रतिबिम्बित गर्नुको कारकतत्त्वको खोजी गर्ने। यसरी हेर्दा व्यक्तिगत तथा संस्थागत विविध स्वार्थलाई पहिचान गर्दै, यस क्रममा प्रतिबिम्बत हुने प्रणालीबद्ध वास्तविकतालाई उजागर गर्नु एउटा महत्त्वपूर्ण उद्देश्य हुन जान्छ। यहाँनेर देखा पर्ने चुनौती भनेको योजनाको आशय र यसको उपजको जटिलता हो। बुझ्नु पर्ने कुरा के हुन जान्छ भने योजना र नीति योजनाविद् तथा नीतिनिर्माताले सोचेको भन्दा फरक किसिमले महत्त्वपूर्ण हुन जान्छ। तसर्थ, कुनै पनि योजना, नीति तथा कार्यक्रमलाई विश्लेषण गर्दा योजनाको आशयको दृष्टिकोणबाट भन्दा पनि यसको असरबाट सुरु गर्नु पर्दछ।

हाम्रो अध्ययनको सम्बन्धमा हेर्दा कुशासन/भ्रष्टाचारका नाममा नागरिक समाजले गर्ने गरेको आन्दोलनको असरबाट विश्लेषण सुरु गरिनु पर्दछ, जसले यसमा निहित राजनैतिक-आर्थिक स्वार्थलाई बुझ्न मदत गर्दछ। दोस्रो, यो मुद्दामा नागरिक समाजको सक्रिय संलग्नतालाई हेर्दै, नागरिक समाजको अवधारणा, यसको सक्रियता, पहिचान, पृष्ठभूमि तथा निर्भरतालाई केलाउनु पर्ने हुन्छ।

## नागरिक समाजको बारेमा समाजशास्त्रीय बहस

राजनैतिक विश्लेषकहरूका बीच नागरिक समाजको अवधारणा निकै पुरानो भए तापनि यसका बारेमा प्राज्ञिक, नीतिगत तथा सार्वजनिक बहस सन् १९८० यता मात्रै चर्चामा आएको हो। कविराज तथा खिलनानी (सन् २००२) का अनुसार नागरिक समाजसँग सम्बन्धित बहस, यसको कमी, आश्वासन तथा सम्भावनामा केन्द्रित रहेको पाइन्छ। बहस अत्यन्तै आर्कषक हुँदाहुदै पनि यो अवधारणालाई सामाजिक तथा राजनैतिक विश्लेषकहरूले आ-आफ्नै ढङ्गले व्याख्या गर्ने गरेका छन्। तसर्थ सामाजिक विज्ञानका अरू अवधारणाजस्तै यसको परिभाषाको विषयमा मतैक्यता भएको पाइँदैन। यो अवधारणाको बारेमा के मात्रै भन्न सकिन्छ भने यो समाज र राज्यको बीचमा रहेको हुन्छ जसलाई उदारवादी विश्लेषकहरूले समाज र राज्यबीचको खाडल जोड्नका लागि समाजको तर्फबाट हुने गरेको सामूहिक कार्य भनी व्याख्या गरेका छन्। तर नवमार्क्सवादी विश्लेषकहरूका अनुसार यो समाजमाथि प्रभुत्व राख्नका निम्ति राज्यको अगुवाइमा बनाइएको एउटा समूह हो। समग्रमा हेर्दा

उदारवादी विश्लेषकहरू यसको सम्बन्धमा निकै आशावादी देखिन्छन् भने नवमार्क्सवादीहरू बढी नै निराशाजनक।[७]

हावर्ड विश्वविद्यालयका प्राध्यापक रर्बट पुटन्यामले उनको प्रभावशाली प्रकाशन *मेकिङ डेमोक्रेसी वर्क* मा नागरिक समाजको उपस्थितिलाई प्रजातन्त्र तथा विकासको सफलतासँग जोडेर हेरेका छन्। उत्तरी तथा दक्षिणी इटालीको तुलनात्मक अध्ययनमार्फत उनले नागरिक समाजलाई प्रजातन्त्र र विकासको पूर्वाधारको रूपमा प्रस्तुत गरेका छन् (पुटन्याम, सन् १९९३)। उनको पछिल्लो प्रकाशन *बाउलिङ अलोन* मा अमेरिकी समाजको अध्ययन गरेर नागरिक समाजका सङ्घसङ्गठनहरूको उपस्थितिलाई सामाजिक पुँजी, विकास तथा प्रजातन्त्रसँग जोडेर हेरेका छन् (पुटन्याम, सन् १९९५)।

यता लन्डन स्कुल अफ इकोनोमिक्सका प्राध्यापक जोन ह्यारिसले रबर्ट पुटन्यामको अवधारणाको खरो आलोचना गरेका छन्। उनको विश्लेषणले कसरी पुटन्यामले नागरिक समाज भन्ने अवधारणालाई सरलीकरण गरी विकासे प्रयोजनको निम्ति सजिलो पारिदिए? भन्नेबारेमा चाखलाग्दो विश्लेषण गरेका छन्। उनका अनुसार विश्वब्याङ्कले सामाजिक पुँजी तथा नागरिक समाजको अवधारणालाई आफ्नो अनुकूल व्याख्या गरेर, आफैमा एक राजनैतिक अर्थ बोकेको विकासलाई कसरी सामान्यीकरण गरियो? भनेर व्याख्या गरेका छन् (ह्यारिस, सन् २००२)। आफैमा अस्पष्ट भईकन पनि नागरिक समाजको अवधारणाले गैससहरूको पुँजीवादीहरूसँगको सहकार्यलाई सहज बनाएको पाइन्छ। यिनै पुँजीवादी सङ्घसंस्थाहरूले आफ्नो स्वार्थ पूर्तिका निम्ति गैससहरूलाई माध्यम बनाएका हुन्छन् (पत्रास र भेलमेयर, सन् २००१)। त्यसै गरी (तामाङ, सन् २००२) ले नेपालको परिप्रेक्ष्यमा विकासे सङ्कथनले नागरिक समाजलाई कसरी चित्रण गरेको छ भन्ने बारेमा विश्लेषण गरेकी छन्।

यसरी नागरिक समाजको अवधारणा प्रस्ट नभएको अवस्थामा पनि अन्तर्राष्ट्रिय विकासे सङ्कथनले आफ्नै ढङ्गले सरलीकरण गरी प्रजातान्त्रिक पद्धतिसँग जोडेर विकासको मूल मन्त्रको रूपमा प्रस्तुत गर्दै आएको छ। अर्को अर्थमा भन्नु पर्दा यसलाई विकासोन्मुख देशहरूमा विद्यमान समस्याहरूको समाधानका रूपमा अगाडि सारिएको छ। यसरी आफैमा एक राजनैतिक अर्थ बोकेको नागरिक समाजको अवधारणालाई विकासे सङ्कथन ले सामान्यीकरण गर्ने गरेको छ।

हाम्रो विश्लेषणमा नेपालजस्तो वैदेशिक सहयोगमा निर्भर विकासोन्मुख देशहरूमा यस्ता सङ्कथन का असरहरू निकै नै प्रभावशाली हुन्छन्। पहिलो, यसले विकासोन्मुख देशहरूमा नागरिक समाज हुँदैनन् तसर्थ यो बनाइनु पर्छ भन्ने चित्रण गर्दछ। नेपालमा नागरिक समाज बनाउन तथा यसलाई बलियो पार्ने नाममा अन्तर्राष्ट्रिय विकासे संस्थाहरूले ल्याउने गरेको कार्यक्रम र त्यसैका निम्ति खन्याउने गरेको पैसा यसैको उपज हो भनी मान्न सकिन्छ। दोस्रो, यसले विकासोन्मुख देशहरू शासन गर्न आफै सक्षम हुँदैनन्

---

७ यस वहसमा इच्छा राख्ने पाठकले प्रारम्भिक पाठ्यसामग्रीको निम्ति कविराज र खिलनानी (सन् २००२) तथा तामाङ (सन् २००२) पढ्न सक्नुहुन्छ।

तसर्थ सुशासनसम्बन्धी कार्यक्रमहरू चलाउनु पर्दछ भन्ने चित्रण गर्दछ, फलस्वरूप यसले आन्तरिक शासन प्रणालीलाई दातृ संस्थामुखी बनाउँछ। नेपालमा सन् १९९० यता दातृ संस्थाहरूको अगुवाइमा सुशासनसम्बन्धी बहस र कार्यक्रमहरूमा भएको वृद्धिलाई यसैसँग जोडेर हेर्न सकिन्छ। विभिन्न अन्तर्राष्ट्रिय संस्थाहरूले सुधारको नाममा सरकारमाथि विभिन्न नीतिगत दबाब दिने गरेको परिपाटीलाई यसैको उपज हो भन्न सकिन्छ। यसको तेस्रो प्रभावको रूपमा यिनै प्रक्रियाबाट जन्मिएको आफ्नो जयजयकार गर्ने, अङ्ग्रेजीमा बोल्ने, लेख्ने तथा त्यस्ता संस्थामा पूर्ण आश्रित हुने अति महत्त्वकाङ्क्षी नवमध्यम वर्गको विकास गर्दछ। यहीं नवमध्यम वर्गमध्येकै केहीले आफूलाई नेपालको स्वघोषित नागरिक समाजको प्रतिनिधिको रूपमा अगाडि सारेका छन्।

## नेपालमा नागरिक समाजको सक्रियता : ऐतिहासिक पृष्ठभूमि

नेपालमा नागरिक समाजको सक्रियताको ऐतिहासिक पृष्ठभूमिको कुरा उठाउँदा यस अवधारणाका बारेमा कम्तीमा पनि एउटा समझदारी बनाउनु पर्ने हुन्छ। नागरिक समाजका बारेमा जति सजिलो तरिकाले चर्चा तथा बहस हुने गरेको छ यसको परिभाषामा देखिएका अस्पष्टताले गर्दा यसका बारेमा सटिक विश्लेषण गर्नु त्यतिकै गाह्रो हुन जान्छ। यो लेखको निम्ति हामीले नागरिक समाजलाई राज्य र समाजको बीचमा रहेको एउटा 'सामाजिक संरचना, सामाजिक व्यवहार वा राजनीतिक आदर्श' भनी निकै नै खुकुलो पाराले व्याख्या गरेका छौं। तसर्थ, विश्लेषणका निम्ति हामीले नेपालको सन्दर्भमा प्रेस तथा नागरिक समाजका सङ्घसङ्गठन भनाउँदा, पेसागत सङ्घसङ्गठन, सामुदायिक सङ्गठनहरू, दबाब समूह तथा गैससहरूलाई लिन सक्छौं।

नेपालमा नागरिक समाजको उपस्थिति धेरै पहिलेदेखि नै रहेको आभास पाइन्छ। यसरी सामाजिक इतिहासलाई हेर्दा विभिन्न समुदायमा मानिसहरू निस्वार्थ भावनाबाट प्रेरित भई सामाजिक क्रियाकलापहरूमा संलग्न हुँदै आएको देखिन्छ।[८] २००७ सालको प्रजातन्त्र ल्याउनमा पनि नागरिक समाजको ठूलो भूमिका रहेको पाइन्छ। उप्रेती, (सन् १९९२) का अनुसार माधवराज जोशी, जयपृथ्वीबहादुर सिंह, कृष्णलाल अधिकारी, शुक्रराज शास्त्री जस्ता नागरिक समाजका प्रतिनिधि तथा आर्य समाज, नेपाल नागरिक अधिकार समिति जस्ता सङ्घसंस्थाले प्रजातन्त्र ल्याउनका निम्ति खेलेका विविध भूमिकाको बारेमा विश्लेषण तथा व्याख्या गरेका छन्। त्यस्तै गरी ०४६ मा प्रजातन्त्रको पुनर्स्थापनाका निम्ति नागरिक समाजका प्रतिनिधि, विभिन्न सङ्घसङ्गठन तथा प्रेसले प्रत्यक्ष सङ्घर्ष गरेका हुन्।[९] यसरी नेपालमा नागरिक समाजको उपस्थिति पहिलेदेखि नै रहिआएको पाइए तापनि यसको

---

८ विभिन्न समुदायहरूमा रहिआएको परम्परागत सङ्गठनहरूका बारेमा भट्टचन )१९९७), मास्के )१९९८(, चन्द )१९९१) लगायतका पुस्तकमा चर्चा गरिएको छ।

९ यस विषयमा प्रेसको भूमिकाका बारेमा बन्त )२००२), साहित्यकारहरूको भूमिकाका बारेमा हट )२००१( तथा चिकित्सकहरूको भूमिकाका बारेमा एडम्स (१९९८) मा चर्चा गरिएको छ।

सक्रियता २०४६ पछिको प्रजातान्त्रिक संरचना तथा अन्तर्राष्ट्रिय विकासे सङ्कथन बाट सीधै प्रभावित भएको पाइन्छ।

नेपालमा प्रजातन्त्रको पुनर्स्थापनापछि नागरिक समाजको प्रतिनिधित्व गर्ने गरी देखा परेका समुदायहरूको उल्लेखनीय वृद्धि भएको छ। प्रजातान्त्रिक शासन व्यवस्थाले प्रदान गरेको संरचनाको कुरा गर्दा नेपाल अधिराज्यको संविधान र यसले प्रदान गरेको मौलिक अधिकारका बारेमा उल्लेख गर्नु उपयुक्त हुन्छ। नेपाल अधिराज्यको संविधान २०४७ को धारा १२ मा उल्लेखित स्वतन्त्रताको हकले सबै नागरिकलाई विचार तथा अभिव्यक्तिको स्वतन्त्रता, सङ्घसंस्था खोल्ने स्वतन्त्रता, कुनै पेसा, रोजगार र व्यापार गर्ने स्वतन्त्रता आदि प्रदान गरेको छ। त्यसै गरी धारा १३ ले छापाखाना र पत्रपत्रिकासम्बन्धी हकको व्यवस्था गरेको छ। जसले स्वतन्त्र प्रेसको अवधारणालाई स्पष्ट पारेको छ। प्रेसको सन्दर्भमा हेर्दा 'छापाखाना तथा प्रकाशन सम्बन्धी ऐन २०४९ तथा राष्ट्रिय प्रसारण ऐन २०४९ जस्ता कानुनले निजी क्षेत्रलाई छापा तथा विद्युतीय संचारको क्षेत्रमा प्रवेश गर्ने कानुनी पूर्वाधार तयार गऱ्यो।

२०४६ सालयता सङ्ख्यात्मक तथा गुणात्मक रूपमा नेपालमा प्रकाशनसम्बन्धी कामको वृद्धि भएको छ। यो वृद्धिको महसुस २०४६ सालअघि र पछिको प्रकाशनहरूको तुलनाबाट प्रस्ट हुन्छ। छापा पत्रकारिताको क्षेत्रमा २०४६ सालअघि सरकारी स्वामित्वमा रहेका नेपालीमा प्रकाशित हुने *गोरखापत्र* र अङ्ग्रेजीमा प्रकाशित हुने *द राइजिङ नेपाल* ले महत्त्वपूर्ण भूमिका खेलेका थिए भने निजी स्तरबाट केही साप्ताहिक पत्रपत्रिकाहरूले महत्त्वपूर्ण भूमिका निर्वाह गरेका थिए। विद्युतीय सञ्चारको क्षेत्रमा रेडियो नेपाल र नेपाल टेलिभिजन पूर्णतः सरकारी स्वामित्वमा सञ्चालित थिए। २०४६ सालपछि दैनिक पत्रिकाको क्षेत्रमा *गोरखापत्र* र *द राइजिङ* नेपाललाई चुनौती दिँदै कान्तिपुर तथा *द काठमाडौं पोष्ट* लगायत *नेपाल समाचारपत्र, स्पेसटाइम दैनिक, राजधानी, द हिमालयन टाइम्स, हिमालयन टाइम्स, अन्नपूर्ण पोष्ट* आदि प्रकाशित हुन थाले भने अर्कोतर्फ राजनैतिक पार्टीसँग नजिकको सम्बन्ध राखेर प्रकाशित हुने गरेका साप्ताहिक पत्रपत्रिकाहरूले पनि निरन्तरता पाइरहे। यसका साथै *हिमाल खबरपत्रिका, नेपाल, समय, स्पट लाइट* जस्ता म्यागजिनहरूको प्रकाशन पनि सुरु भयो। विद्युतीय सञ्चारको क्षेत्रमा पनि उल्लेखनीय परिवर्तन देखा पऱ्यो।[१०] राष्ट्रिय प्रसारण ऐन २०४९ सँगै नेपाल टेलिभिजन र रेडियो नेपालको एकाधिकारलाई तोड्दै थुप्रै एफएम स्टेसन तथा टेलिभिजन च्यानलहरू सञ्चालनमा आए।[११]

यता २०४६ सालपछि नेपालमा गैससहरूको वृद्धिलाई धेरैले च्याउवृद्धिसँग दाजेको पाइन्छ।[१२] समाज कल्याण परिषद्सँग दर्ता भएका गैससहरूको सङ्ख्या करिब १२,००० रहेको छ, जुन २०४६

१० नेपालमा मिडियाको वृद्धि र यसका कारणहरूसम्बन्धी जानकारीका निम्ति वन्त (सन् २००२) हेर्नुहोस्।

११ २०६१ साल माघ १९ यता सङ्कटकालीन अवस्थाको सृजना भएकाले सञ्चारमाध्यममाथि केही रोक लगाइएको छ।

१२ खड्का (सन्१९९७), शर्मा (सन् १९९८)।

आधुनिक शिक्षा, अङ्ग्रेजीको बढ्दो प्रयोग, अन्तर्राष्ट्रिय चासोको मुद्दामा संलग्नता, निरन्तर विदेश भ्रमण तथा आधुनिक सूचना/सञ्चार प्रविधिसँगको सामिप्यताका कारणले गर्दा, यिनीहरूको पहिचान तथा संलग्नता अन्तर्राष्ट्रिय रूपमा पनि त्यत्तिकै बलियो रहेको पाइन्छ। विशेषतः मानवअधिकार, प्रजातन्त्र, शान्ति, सुशासन, विकास, भ्रष्टाचारजस्ता मुद्दाहरूमा नागरिक समाजले आफूलाई अन्तर्राष्ट्रिय आन्दोलनको एउटा बलियो भाग बनाउने प्रयत्न गरेको पाइन्छ।

सूचनाको मुद्दाको सवालमा नागरिक समाजको दोहोरो चरित्र देख्न पाइन्छ। यो समूह एकापट्टि सूचनाको हकको मुद्दा जोडदार तरिकाले उठाउने गर्छन् भने अर्कोतर्फ आफ्नो जीविकोपार्जनको मुख्य स्रोत सूचना र सम्पर्कको सन्जाल भएको कारणले गर्दा यिनीहरूमा आफूसँग भएको सूचना भने लुकाउने प्रवृत्ति देख्न पाइन्छ। सामाजिक प्रयोजनको निम्ति तथा सार्वजानिक स्रोतको प्रयोगबाट सङ्कलन गरिएको सूचना आफूलगायत आफ्ना मान्छेको आर्थिक तथा सामाजिक फाइदाका निम्ति प्रयोग गरिनु नैतिक दृष्टिकोणले स्वीकार्य हुन सक्दैन। त्यस्तै जनसहभागिता नागरिक समाजको आधार हो भनिए तापनि यो अवधारणा निजी स्वार्थलाई जायज तुल्याउनका निम्ति हतियारको रूपमा प्रयोग गर्ने गरिएको हो कि भनेर सवाल उठाउनु पर्ने देखिन्छ। जनसहभागिता भनेर कसको सहभागिता खोजिएको हो? जति नै दाबी गरे पनि सर्वप्रथम भाषा, पहिरन, खाना वा अन्य कुनै जीवनपद्धतिको हिसाबले उनीहरू जनसाधारणको पहुँचमा छैनन्। त्यसै गरी अतिव्यस्तताको कारणले गर्दा उनीहरूसँग जनसाधारणले भेट्न निकै कष्ट गर्नु पर्दछ। तसर्थ जनसहभागिता र जनसम्पर्कलाई पनि सङ्कथन कै एउटा भागको रूपमा हेरिनु पर्दछ।

नागरिक समाजमा प्रतिनिधित्वको मुद्दालाई हेर्दा बाहुन, छेत्री, नेवार तथा ठकुरीको बाहुल्यता रहेको आभाष पाइए तापनि २०४७ को संविधानले दिएको अधिकारहरूका कारण विभिन्न जनजाति तथा महिलाहरूको उपस्थिति पनि बाक्लै रहेको देख्न पाइन्छ। नागरिक समाजको अगुवाइमा हुने गरेका आन्दोलनहरूमा लैङ्गिक हक तथा जनजातिका मुद्दाहरूका सम्बन्धमा, विशेषतः महिला तथा जनजाति भित्रकै उच्च वर्गले नेतृत्व दिएको देख्न पाइन्छ।[१७] तसर्थ काठमाडौं केन्द्रित स्वघोषित नागरिक समाजलाई हेर्नका निम्ति लैङ्गिक तथा जातीय दृष्टिकोणभन्दा पनि वर्गीय दृष्टिकोण महत्त्वपूर्ण हुन्छ।

अर्को प्रमुख चरित्र भनेको नागरिक समाजको परियोजनामुखी संस्कृति हो। नेपाली नागरिक समाजले उठाउने गरेका मुद्दाहरू नेपालको आवश्यकताभन्दा पनि अन्तर्राष्ट्रिय विकासे सङ्कथन बाट सीधै प्रभावित भएको देख्न सकिन्छ, जसको प्रमुख कारण भनेको अन्तर्राष्ट्रिय आर्थिक सहयोग हो। उदाहरणका निम्ति नेपालमा बालअधिकार, लैङ्गिक समानता/समता, महिला अधिकार, मानव अधिकार, शान्ति,

१७ यस वहसका वारेमा वढी जानकारीका लागि गेल्नर (सम्पा) (सन् १९९७), भट्टचन(सन् १९९८), गेल्नर (सम्पा) (सन् २००२) इत्यादि पढ्न सक्नु हुने छ।

वातावरण, विकास, जनजाति तथा दलित उत्थान इत्यादिका मुद्दाहरूलाई हेर्न सकिन्छ।[१८] नेपालमा एउटा पनि त्यस्तो मुद्दा छैन जुन परियोजनामुखी संस्कृति तथा अन्तर्राष्ट्रिय विकास सङ्कथन बाट प्रभावित नभएको होस्। नागरिक समाजहरूको क्रियाकलाप समाजमा भइरहेका गतिविधिहरूलाई समस्याकरण गर्ने, त्यसलाई प्रयोगात्मक अनुसन्धानको माध्यमबाट अन्तर्राष्ट्रिय दातृ संस्थाका बीच 'बिक्ने' मुद्दा बनाउने अनि परियोजना सञ्चालन गर्ने मात्र त होइन भनेर प्रश्न उठाउने ठाउँ प्रशस्त छन्। गजबको कुरा त त्यसपछि देख्न पाइयो जब नागरिक समाजका केही प्रतिनिधिका लागि देशमा व्याप्त द्वन्द्व एउटा गतिलो उद्योग बन्न पुग्यो। द्वन्द्व तथा शान्ति स्थापनाका नाममा नागरिक समाजका प्रतिनिधिहरू संस्थागत रूपमा दातृ संस्थासँग पैसा माग्दै हिँडेको दृश्य देख्न सकिन्छ। यो लेख लेख्ने सिलसिलामा नाम चलेका केही गैससहरू शान्ति स्थापनाका नाममा परियोजनाको प्रस्ताव तयार गर्न व्यस्त रहेको हामी आफैंले देख्न पायौं।[१९] शान्ति स्थापनाका निम्ति आज नेपालको नागरिक समाजलाई दातृ संस्थाबाट पैसा चाहिने भयो, यो वाक्य निकै नै अशोभनीय लाग्दैन र?

पैसाको खेतीको मुद्दालाई एकछिनलाई छेउमा राखेर हेर्दा, नागरिक समाजको अर्को चरित्र त झनै डरलाग्दो देखिन्छ जसअन्तर्गत यिनका क्रियाकलापहरूले विभिन्न सामाजिक तथा राजनीतिक मुद्दाहरूलाई अराजनीतिकरण[२०] गरेको छ। नागरिक समाजको परियोजनामुखी चरित्रका कारण यिनले छोएका हरेक मुद्दाहरू अराजनीतिकरण भए।

यो प्रक्रिया उत्कर्षमा पुगेको अनुभव तब भयो जब नागरिक समाजले शान्ति र द्वन्द्वलाई परियोजना बनाई मैनबत्ती बाल्ने, जुलुस निकाल्ने, विभिन्न प्रदर्शन गर्ने तथा वक्तव्यबाजी गर्नेजस्ता क्रियाकलापहरू गरेर शान्ति ल्याउने प्रयास गर्न थाले।[२१] यिनीहरूले के बुझेनन् वा बुझेर पनि नबुझेजस्तो गरे भने राजनैतिक प्रक्रिया तथा पार्टीहरूलाई एक्लो पारेर देशमा द्वन्द्व समाधान तथा शान्ति स्थापना गर्न सकिँदैन। यस्तै प्रक्रिया भ्रष्टाचार र सुशासनको मुद्दामा पनि देख्न पाइयो। सुशासन तथा भ्रष्टाचारजस्ता मुद्दाहरूलाई राजनैतिक प्रक्रियाभन्दा पनि विभिन्न परियोजनामार्फत समाधान गर्न सकिन्छ भन्ने आभास

---

१८ बाल्यकाल र बालअधिकार सम्बन्धि सङ्कथनको लागि बन्त (सन् २००१), महिला अधिकार सम्बन्धि सङ्कथनका लागि तामाङ (सन् २००२), चेतना र विकाससम्बन्धी सङ्कथनका लागि फुजिकुरा (सन् २००१), जनस्वास्थ्य र भिटामिन 'ए' कार्यक्रमसम्बन्धी सङ्कथनका लागि हार्पर (सन् २००१) हेर्न सक्नु हुने छ। शाह (सन् २००२) मा नेपालको नागरिक समाजका बारेमा चर्चा गरिएको छ।

१९ विगतका केही वर्षहरूमा नेपालमा शान्ति स्थापनाका लागि परियोजनाहरू कार्यान्वयन हुन थालेको देखिन्छ। यस्ता परियोजनाहरूका केही उदाहरणहरू जस्तै, शान्तिका लागि साझा अभियान (कोकेप)लाई लिन सकिन्छ र यसका लागि मिसेरियोर (misereor) ले आर्थिक रूपले सघाएको देखिन्छ। यस कार्यमा लागेका अन्य सङ्घसंस्थाहरूमा फेडरेसन अफ नेपालिज जर्नलिष्ट, नेपाल फोरम फर इन्भाइरोन्मेन्ट जर्नलिष्ट, नेपाल साउथ एसिया केन्द्र, प्रेस चौतारी, सेन्टर फर स्टडिज अन डेमोक्रेसी र गुड गभर्नेन्स र सेन्टर फर कन्सोलिडेसन अफ डेमोक्रेसी आदि कार्यक्रम र उसका दातृ संस्था र सहयोगलाई हेर्न सकिन्छ।

२० विकास र अराजनीतिकरणको बहसका लागि फर्गुसन (सन् १९९४) तथा ह्यारिस (सन् २००२) हेर्नुहोस्।

२१ हेर्नुहोस् सीके लाल, *हिमाल खबरपत्रिका* (१६-२९) माघ २०६१

दिइयो। आफ्नो राजनैतिक भूमिकालाई उनीहरूले स्वतन्त्र भूमिकाका रूपमा प्रस्तुत गरे भने राजनैतिक दलहरूलाई बलियो पार्नुको सट्टा अलोकप्रिय गराउनेतर्फ नै यिनीहरूको समय बित्यो।

अर्को महत्त्वपूर्ण चरित्र भनेको यिनीहरूको आफ्नै पहिचानको मुद्दा हो जुन उनीहरूले राजनीतिक दल तथा राजनीतिक कार्यकर्तासँग आफूलाई तुलना गरेर बनाउने गरेको पाइन्छ। जब नागरिक समाजले 'हामी' भन्छन् उनीहरूले राजनैतिक दल र कार्यकर्तालाई 'उनीहरू' भन्ने गर्दछन्। गैससको बारेमा चर्चा गर्दा उनीहरूको नामबाट नै उनीहरूको पहिचान 'वी आर सिभिल एन्ड सोसल, दे आर पोलिटिकल, वी आर फर पिपुल, दे आर फर देमसेल्फस्' भन्ने मनोविज्ञानबाट प्रेरित रहेको पाइन्छ। सामाजिक भन्नेबित्तिकै निस्वार्थ अनि राजनीति भन्नेबित्तिकै स्वार्थ भन्ने प्रचलित अवधारणालाई नागरिक समाजले आफ्नो अनुकूल प्रयोग गर्दै गएको पाइन्छ। यसरी राजनैतिक दल तथा राजनीतिक प्रक्रियाप्रति तिनीहरूको इर्ष्या प्रतिबिम्बित हुन्छ। भ्रष्टाचारको शल्यक्रिया नामक पुस्तकमा धेरै राजनीतिक व्यक्तित्वहरूको पदमा रहनुअघि तथा पदमा रहिसकेपछिको सम्पत्ति विवरण तुलनात्मक रूपले प्रस्तुत गरिएको छ। 'न एक आना जग्गा थियो, न ब्याङ्क ब्यालेन्स', 'एघार वर्षको अवधिमा धेरैजसोको विशाल भवन र प्राडो/पजेरो रहेका' जस्ता अभिव्यक्तिहरू प्रस्तुत गरिएका छन्। (थापा, सन् २००२, पृष्ठ ४३) त्यस्तै (ध्रुवकुमार, सन् २०००) द्वारा सम्पादित पुस्तकमा राजनीतिक नेता तथा दलहरूलाई मात्रै नेपालमा प्रजातन्त्रको सङ्कटसँग जोडेर विश्लेषण गरिएको छ। जसमा नागरिक समाजको भूमिकाका बारेमा कुनै विश्लेषण गरिएको छैन। यस्ता अभिव्यक्तिहरूले राजनीतिक दलहरूप्रति नकारात्मक धारणा प्रतिबिम्बित गर्ने गरेको अनुभव गर्न सकिन्छ।

## नागरिक समाज र प्रजातन्त्रमाथिको प्रहार

२०४६ सालअघि पञ्चायती व्यवस्था टिकाउनका निम्ति त्यस बेलाको सरकारले प्रेसलाई आफ्नो स्वार्थअनुरूप प्रयोग गर्ने गर्दथ्यो भने त्यसपछि आधुनिक राज्यको अवधारणाअनुरूप प्रेसलाई राज्यको चौथो अङ्गको रूपमा स्वतन्त्र छाडियो। यसरी प्रेस र सरकारको सम्बन्धमा २०४६ सालअघि र पछि उल्लेखनीय परिवर्तन देखा पऱ्यो। यही स्वतन्त्रताको फाइदा उठाउँदै नेपाली प्रेस तुलनात्मक रूपमा सरकारप्रति बढी नै आक्रामक देखिए। मानिसहरूको जीवनमा प्रत्यक्ष प्रभाव पार्ने तथा अत्यन्त सनसनीखेज अर्थ बोकेको भ्रष्टाचार तथा कुशासनलगायतका विषय नेपाली प्रेसको प्राथमिकतामा पर्न गए। तुलनात्मक रूपमा नेपाली पाठकले २०४६ पछि सरकारको बारेमा भ्रष्टाचार तथा कुशासनको विषयमा केन्द्रित समाचारहरू बढी पढ्न पाउँछन् तर यस्ता समाचारहरूको उद्देश्य जनतामाझ प्रेसको लोकप्रियता स्थापित गर्नु मात्र रहेको हो कि भनेर प्रश्न उठाउन सकिने ठाउँ भने छ। विगतमा प्रेसमा आएका यस्ता रिपोर्टहरूले जनतामा राज्य र प्रशासनप्रति नकारात्मक धारणालाई बढावा दिँदै गएको महसुस गर्न सकिन्छ।

यो लेख लेख्ने सिलसिलामा हामीले विगतका पत्रपत्रिकाहरूमा प्रकाशित समाचार, कार्टुन तथा टिप्पणीलाई हेर्दा, 'भ्रष्टाचार, सुशासन र राजनैतिक दल' सँग सरोकार राख्ने विषयहरूले ठूलो स्थान

ओगटेको देख्यौं।[२२] त्यस्तै पछिल्लो समयमा आएर प्रेसले राज्यलाई शान्ति स्थापनामा सहयोग नगरेको गुनासो प्रशस्त सुनिँदै आएको हो। तसर्थ नेपाली प्रेसलाई हेर्दा र यसको भूमिकालाई अध्ययन गर्दा यसको 'नैतिक' भन्दा पनि 'भौतिक' पक्षलाई महत्त्व दिइनु पर्दछ। प्रेसको चरित्रलाई बुझ्न यसलाई हालको समयमा भएको फाइदासँग जोडेर हेर्नु स्वाभाविक हुन जान्छ। प्रेसमा आउने भ्रष्टाचार, सुशासन तथा द्वन्द्वलगायतका सनसनीखेज मुद्दाहरूले गर्दा प्रेसको लोकप्रियता नेपालमा ह्वात्तै बढेको हो भनेर अड्कल काट्न सकिन्छ। यो लोकप्रियताको प्रत्यक्ष असर पत्रपत्रिकाको बिक्री र यसको आकासिँदो व्यापार अनि प्रेस जगत्को बढ्दो शक्ति र प्रभावमा देख्न सकिन्छ। प्रेस जगतमा भ्रष्टाचार यति ठूलो मुद्दा बन्यो कि कतिपय पत्रकारहरूले आफ्नो धेरै समय भ्रष्टाचारसम्बन्धी खोज पत्रकारितामा बिताउन थाले। खोज पत्रकारिता केन्द्रजस्ता संस्थाहरूले पनि पत्रकारहरूलाई यस क्षेत्रमा लाग्न प्रेरित गरे। एउटा राष्ट्रिय दैनिकसँग सम्बन्धित पत्रकारले लेखेर प्रकाशित गरेको 'भ्रष्टाचारको शल्यक्रिया' नामक पुस्तकले राम्रो चर्चा पायो।[२३]

त्यस्तै सामुदायिक विकास, शिक्षा, स्वास्थ्य, जनवकालत, सुशासन, शान्ति स्थापना, महिला जनजाति तथा दलित उत्थान, मानव अधिकार इत्यादिको नाममा खुलेका विभिन्न गैससहरूको उपस्थितिले यो लेखको निम्ति कम्तीमा पनि तीनओटा अर्थ राख्दछ। पहिलो— कतिपय गैससहरूले आफूलाई सरकारको विकल्पको रूपमा प्रस्तुत गरेको पाइन्छ। विभिन्न आधारभूत सेवा प्रदान गर्दै आएको क्षेत्रहरूमा यिनले समानान्तर रूपले कार्यक्रमहरू सञ्चालन गर्न थाले। गैसस तथा यिनलाई आर्थिक सहयोग गर्ने दातृ संस्थाहरूको बुझाइमा राज्यले दिँदै आएका सेवाहरू प्रभावकारी नहुने भएकाले, आफ्ना प्रयासलाई एउटा गतिलो विकल्पको रूपमा प्रतिविम्बित गर्ने गरेको पाइन्छ। राज्यको तुलनामा गैससको कार्यक्रम क्षेत्र निकै सानो हुने, कर्मचारीलाई तलब भत्ताको सुविधा राम्रो हुने तथा कार्यक्रमको लामो समयसम्मको प्रतिबद्धता दिनु नपर्ने भएकोले यिनीहरूले प्रदान गर्ने सेवाहरू, सरकारी सेवाको तुलनामा बढी लोकप्रिय रहेको पाइन्छ। यस कारणले गर्दा पनि जनतामा राज्यद्वारा सञ्चालित आधारभूत सेवा तथा विभिन्न कार्यक्रमप्रति नकारात्मक धारणा बढ्ने मौका मिल्यो जसले फलतः बहुदलीय राजनैतिक पार्टीहरूलाई अझ बढी अलोकप्रिय बनाउन मदत पुग्यो। दोस्रो— कतिपय गैससले सरकारलाई चुनौती दिने कार्यक्रम चलाएका छन्। एकातर्फ जनतालाई आधारभूत सेवा दिने काम सरकारको हो भनेर सरकारलाई दबाब दिने अनि अर्कोतर्फ दातृ संस्थाबाट स्रोत पाएको खण्डमा आफैंले सरकारको कार्यक्रमसँग समानान्तर हुने गरी सेवामूलक कामहरू सञ्चालन गर्नाले, नागरिक समाजको चरित्रमाथि प्रश्न उठाउनु पर्ने देखिन्छ। (हाक्काराईनेन्, सन् २००३) आजको विश्वव्यापीकरणको

२२ यसको बारेमा छुट्टै अध्ययन हुन जरुरी छ।

२३ उक्त पुस्तकको अत्यधिक लोकप्रियताका कारण, अङ्ग्रेजी बोल्ने तथा लेख्ने समुदायलाई लक्षित गरी लेखकले उक्त पुस्तक अङ्ग्रेजीमा पनि निकालेका छन् जसको शीर्षक *एनाटोमी अफ करप्सन* रहेको छ।

युगमा अन्तर्राष्ट्रिय सहयोगको कारणले गर्दा नेपालजस्तो मुलुकमा गैससहरूको भूमिका निकै प्रभावशाली रहेको पाइन्छ। मानव अधिकार, बाल अधिकार, महिला अधिकार, सुशासन, जनवकालत, दबाब समूह, शान्ति इत्यादि मुद्दा अन्तर्राष्ट्रिय सङ्कथनबाट प्रभावित मुद्दाहरूमा यिनीहरूको मुख्य भूमिका सरकारलाई चुनौती दिनेमा सीमित रहेका छन्। अन्तर्राष्ट्रिय दातृ संस्थाहरूले आफ्ना स्वार्थहरू पूरा गर्नका निम्ति गैससलाई अगाडि सार्ने गरेको तथ्य पनि लुकेको छैन।[२४] सामाजिक आन्दोलन तथा जनवकालतका नाममा राज्यलाई नीतिगत दबाब दिने र राज्यका कार्यक्रमहरूलाई अलोकप्रिय बनाउनमा गैससहरूको ठूलो योगदान रहेको आभाष पाइन्छ। स्वघोषित 'प्रो पब्लिक' तथा समाज सेवा वा सामाजिक विकासका निम्ति निस्वार्थ लागिपरेको भनेर आफ्नो भूमिकालाई सुरक्षित तथा सन्तुलित छ भन्ने दाबी यिनीहरूको छ। अर्कोतर्फ कतिपय गैससहरूको कामका प्रकृति हेर्दा, त्यस्ता कार्यक्रमहरूले प्रत्यक्ष रूपमा बहुदलीय राजनैतिक पद्धतिलाई अलोकप्रिय बनाएको देख्न पाइन्छ।[२५] सुशासन तथा भ्रष्टाचारजस्ता विषयमा केन्द्रित यस्ता कार्यक्रमहरू टेलिभिजनबाट प्रसारण गरिँदा, यसले नागरिकहरूमा चेतनाको वृद्धि तथा राज्यका अङ्गहरूलाई दबाब त दिन्छ तर यस्ता कार्यक्रमहरूका दुईओटा शक्तिशाली प्रभावको बारेमा सार्वजनिक तथा प्राज्ञिक बहस हुनु पर्ने देखिन्छ। पहिलो, यसले सरकारप्रति नकारात्मक धारणा बढाएको तथा दोस्रो, उक्त संस्था त्यसमा कार्यरत व्यक्तिहरूकै साङ्गठनिक आर्थिक, सामाजिक तथा राजनैतिक प्रभाव तथा प्रतिष्ठा वृद्धि।[२६] नागरिक समाजको भ्रष्टाचारसम्बन्धी सङ्कथन मा नागरिक समाजमा हुने गरेको अपारदर्शिताका बारेमा त्यति छलफल हुने गरेको पाइँदैन। यस्तो अवस्थालाई बुझ्न नेपालमा प्रचलित उखान 'आफ्नो आङको भैँसी

---

२४ पत्रास र भेल्मेयर (सन् २००१), भट्टचन(सन् १९९८), तामाङ (सन् २००२)

२५ उदाहरणका निम्ति जनहित संरक्षण मञ्च नामक संस्थाहरूले गर्ने गरेका कार्यक्रमहरूले राजनैतिक पार्टी तथा प्रशासनप्रति जनताको नकारात्मक धारणा वढाएको देख्न सकिन्छ। उक्त संस्थाद्वारा असल शासन तथा पक्ष-प्रतिपक्ष भन्नेजस्ता विद्युतीय संचारवाट सम्प्रेषण गर्ने गरिएका कार्यक्रमहरूको प्रभाव राज्यको संरचनालाई वलियो पार्ने भन्दा पनि राज्य प्रशासनप्रति जनताको अलोकप्रियतालाई वढावा दिएको छ। हाम्रो विश्लेषणमा नेपाल टेलिभिजनवाट प्रस्तुत गरिने पक्ष-प्रतिपक्ष कार्यक्रम आफैमा अत्यन्तै उपयुक्त, रोचक तथा लोकप्रिय रहेको भए पनि यसको प्रभावका वारेमा केही अध्ययन हुनु पर्ने देखिन्छ। हाम्रो अनुभवमा उक्त कार्यक्रम एउटा रङ्गमञ्च हो जहाँ जनहित संरक्षण मञ्चको अगुवाइमा केही नागरिकहरू तथा जनसरोकारका विभिन्न सरकारी कार्यालय प्रमुखहरूलाई टेलिभिजनको क्यामेराको अगाडि भेट गराइन्छ। कार्यक्रम सञ्चालन, जो आफै उक्त संस्थाको एउटा प्रभावशाली व्यक्ति हुन्, उनि विभिन्न चाखलाग्दा विकासे शव्दहरू तथा आकर्षक हाउभाउका साथ कार्यक्रमलाई निकै रोचक वनाउन उक्त रङ्गमञ्चमा कार्यालयका प्रतिनिधिवीच आफूलाई घुमाइरहन्छन्।

२६ आफूलाई प्रो पव्लिक भनेर चिनाउने उक्त संस्थाका कार्यक्रमहरू विदेशी दातृ संस्थाको आर्थिक सहयोगमा चल्ने तथा संस्थामा (नागरिक हकका निम्ति) कार्यरत व्यक्तिहरू पनि संस्थाका जागिरे हुन् कुनै स्वंयसेवी होइनन्। त्यस्तै यो संस्थाले नेपाली काङ्ग्रेसका सभापति गिरिजाप्रसाद कोइरालाले दिएको अभिव्यक्तिले सर्वोच्च अदालतको मानहानि भयो भन्ने दावीका साथ रिट निवेदन दिएको समाचार पनि प्रकाशमा आएको थियो। सर्वोच्च अदालतको मानहानि भएको भन्ने उक्त रिट निवेदन आफैमा उपयुक्त भए पनि वहुदलीय प्रजातान्त्रिक व्यवस्था जोखिममा परेको अनुभव सवैले गरिरहेकै वेला उक्त रिटको प्रभाव वहुदलीय राजनैतिक परिपाटीलाई अझै वढी अलोकप्रिय वनाउन सहायकसिद्ध भएको मान्न सकिन्छ।

नदेखे, अर्काको आङको जुम्रा देखे' सँग दाँजेर हेर्न सकिन्छ। तेस्रो, झन्डै सबैजसो गैससहरू महत्त्वाकाङ्क्षी नवमध्यम वर्गले चलाएको पाइन्छ[२७] जसको निम्ति विदेशी सहयोग एक मात्र उत्प्रेरणा हो। यस वर्गको बारेमा हामीले माथि छलफल गरिसकेका छौं।

## नागरिक समाज र बदलिँदो राजनैतिक परिवेश

२०४६ सालपछि हुर्कंदै गएको प्रजातान्त्रिक मूल्य तथा मान्यता विगतका दिनमा लगातार कमजोर हुँदै आएको छ। राजाले 'असोज १८' मा असक्षम भन्दै बहालमा रहेका प्रधानमन्त्री शेरबहादुर देउवालाई पदच्युत गरेको तथा 'माघ १९' को घोषणामार्फत सम्पूर्ण शासन बागडोर आफ्नो हातमा लिने निर्णय गरेयता प्रजातान्त्रिक पद्धतिमाथि केही समयका निम्ति पूर्णविराम लागेको हो कि भन्ने आशङ्का व्याप्त छ।[२८] यो लेखमा हामीले नेपालमा प्रजातन्त्रमाथिको प्रहारलाई बुझ्नका निम्ति नागरिक समाज र यसको सङ्कथनलाई केलाउनु पर्दछ भन्ने प्रस्ताव पेस गऱ्यौं। नेपालमा प्रजातान्त्रिक मूल्य र मान्यता हुर्कन नपाउनुमा नागरिक समाजको (यसका प्रतिनिधि, चरित्र र सङ्कथन) ठूलो हात छ। तर यसको अर्थ सबै दोष नागरिक समाजमाथि थुपार्नु पर्छ भन्ने पक्कै पनि होइन। नेपालमा हालको अवस्था सृजना हुनुमा नागरिक समाजले आफ्नो संलग्नता तथा जिम्मेवारी अस्वीकार गर्दै आउनु निकै नै डरलाग्दो स्थिति हो।

जसरी राजनीतिक दलहरूलाई मात्रै आजको अवस्थाको निम्ति जिम्मेवार ठहऱ्याइएको छ त्यो न्यायोचित होइन। राजनैतिक दलहरू तथा यसका नेता तथा कार्यकर्ता नेपाली समाजको प्रतिबिम्ब हुन् भन्ने कुरामा दुईमत हुन सक्दैन तसर्थ राजनीतिक दलमाथि मात्रै अनावश्यक दोष थुपार्ने प्रवृत्तिले समस्याको समाधानतिर भन्दा पनि समस्यालाई अझै जटिल बनाउन मदत पुऱ्याउँदछ। अर्को महत्त्वपूर्ण कुरा के हो भने नागरिक समाजलाई निस्वार्थ र 'तेस्रो विकल्प' को रूपमा प्रजातन्त्रलाई बलियो पार्ने शक्तिको रूपमा सजिलै स्वीकार गर्न सकिँदैन। नवमार्क्सवादीहरूले भन्ने गरे झैं नागरिक समाजले आम जनताको नभई एउटा वर्गविशेष र त्यसमा पनि परम्परागत शक्तिलाई बलियो बनाउने भूमिका खेल्न सक्दो रहेछ भन्ने देखिन्छ। त्यस्तै नागरिक समाज, वैदेशिक हस्तक्षेप तथा उच्च वर्ग अनि परम्परागत शक्तिका बीच अघोषित सम्बन्ध हुन सक्ने अवस्थालाई पनि नकार्न सकिँदैन। तसर्थ यी सबै प्रक्रियालाई नागरिक समाजको स्वार्थका साथसाथै यस्तो प्रक्रियाबाट प्रतिबिम्बित हुने प्रणालीबद्ध वास्तविकता सँग जोडेर विश्लेषण गरिनु पर्दछ।

---

२७ उक्त कुरा कुनै सर्वेक्षणबाट प्रमाणित भएको नपाइए तापनि हाम्रो अनुभवमा यस्ता संस्थाहरू विशेष गरी महत्त्वकाङ्क्षी नवमध्यम वर्गले चलाएको पाउँछौं। भट्टचन (सन् १९९८) मा पनि यसको बारेमा केही चर्चा गरिएको छ।

२८ यद्यपि राजा ज्ञानेन्द्रबाट पटकपटक प्रजातान्त्रिक पद्धतिप्रति प्रतिबद्धता जाहेर गरिबक्सेको छ।

नेपालको समकालीन राजनीतिलाई हेर्दा नागरिक समाजले खेलेको भूमिकाले राजा ज्ञानेन्द्रलाई शासन बागडोर आफ्नो हातमा लिन सजिलो बनाइदिएको आभास मिल्दछ। त्यसै गरी राजाको नीति आउने दिनहरूमा पनि नागरिक समाजका केही व्यक्ति तथा सङ्गसङ्गठनहरूकै सहयोगमा अगाडि बढ्ने देखिन्छ।[२९] झट्ट हेर्दा नागरिक समाजले हालका दिनमा प्रजातन्त्रको नाममा जति नै आवाज उठाएजस्तो देखिए तापनि शान्ति स्थापना तथा भ्रष्टाचारजस्ता मुद्दाहरूको अगाडि बहुदलीय राजनैतिक पद्दतिको पुनर्स्थापनाको मुद्दाले प्राथमिकता पाउने देखिँदैन। नागरिक समाजले आगामी दिनमा शान्ति स्थापना तथा भ्रष्टाचारजस्ता मुद्दाहरूलाई बहुदलीय राजनैतिक पद्दतिभन्दा टाढा राखेर विश्लेषण गर्ने तथा आफ्ना कार्यक्रमहरूलाई अगाडि लैजाने हो भने त्यस्ता प्रयोगका असरहरू नेपालमा बहुदलीय प्रजातन्त्रिक पद्दतिको विकासका निम्ति सहयोगी हुने पनि देखिँदैन। बदलिँदो राजनैतिक परिस्थितिमा (आफ्नो राजनैतिक तथा आर्थिक स्वार्थलाई सुरक्षित राख्न) नागरिक समाजका प्रतिनिधि तथा सङ्गठनहरूले मूलतः दुई किसिमको रणनीति अपनाउँदै जाने देखिन्छ। पहिलो, बदलिँदो संरचनासँग सामीप्यता बढाउँदै यिनीहरूले आफ्ना आवाजहरूलाई शान्ति, सुशासन तथा प्रजातन्त्रको नाममा चर्काउने तथा बहुदलीय प्रजातान्त्रिक पद्दतिको पुनर्स्थापनाको मुद्दाका सवालमा मधुरो पार्दै जाने अनुमान लगाउन सकिन्छ। दोस्रो, हालको परिवर्तनलाई कारण बनाई अझ बढी 'गैससकरण' गरी परियोजना सञ्चालन गर्ने सोचाइ हुन सक्छ। देश सङ्कटमा रहेको बेला समस्यासँग जुध्नेभन्दा आफ्नो सुरक्षाको कारण नेपाल बाहिर पलायन हुने प्रवृत्ति रहेको पाइन्छ। अहिले सक्रिय नागरिक समाज विकासे तथा नवउदारवादी सोचबाट प्रभावित भएको अवस्थामा यिनीहरूले २००७ सालमा तथा २०४६ सालमा जस्तो पर्दा पछाडि/अगाडि बहुदलीय प्रजातन्त्रको निम्ति सङ्घर्ष गर्लान् भन्ने अपेक्षा गर्न सकिँदैन। तर यी सबै प्रक्रियालाई सजिलो वा स्वाभाविक दृष्टिकोणबाट भन्दा पनि सङ्कथन को दृष्टिकोणबाट अध्ययन गर्दा प्रस्ट हुन्छ भन्ने हाम्रो बुझाइ रहेको छ।

२९ 'असोज १८' पछि राजाबाट वहालमा रहेका जननिर्वाचित प्रधानमन्त्री शेरबहादुर देउवालाई असक्षम भनी हटाएपछि लोकेन्द्रबहादुर चन्दको अध्यक्षतामा नयाँ मन्त्रिमण्डलको गठन गरी उक्त सरकारमा स्वच्छ छवि भएका व्यक्तिहरू भन्दै न्युरो सर्जन उपेन्द्र देवकोटा, समाजसेवी अनुराधा कोइराला (माइती नेपाल), इन्जिनियर तथा स्रोत अर्थविद् दीपक ज्ञवाली जस्ता नागरिक समाजका प्रतिनिधिहरूलाई समावेश गराइएको थियो।

Centre for Development and Governance, Kathmandu, 1998

Onta, L., 'Childhood Constructed, Childhood Lived: Law and Social History in Nepal', *Studies of Nepalese History and Society*, Vol.6, No.2, 2001.

Onta, P. 'Criticizing the Media Boom' in the *State of Nepal* (eds). K. M. Dixit and Ramachandran, S. Himal Books, Kathmandu, 2002

Petras, J. & Veltmeyer, H. *Globalization Unmasked*, New Delhi, Madhyam Books, 2001.

Pigg, S. L.: Inventing Social Categories through Place: Social Representations and Development in Nepal, *Comparative Studies in History and Society*, Vol.34, No.3, 1992

Pigg, S. L.: The Credible and the Credulous: The Question of "Villager's Beliefs" in Nepal, *Cultural Anthropology*, Vol. 11, No.2, 1996

Putnam, R., 'Bowling Alone: Americas Declining Social Capital'. *Journal of Democracy*, 6:1, .pp 65-78.

Putnam, R., *Making Democracy Work: Civic Tradition in Modern Italy*. Princeton, N. J Princeton University Press, 1993.

Shah S. From Evil State to Civil Society, in the *State of Nepal* (eds). Dixit K. M and Ramachandran, S. Himal Books, Kathmandu, 2002,

Tamang, S. 'The Politics of Developing Nepali Women' in the *State of Nepal* (eds). Dixit K. M and Ramachandran, S. Himal Books, Kathmandu, 2002, pp. 161-175

Tamang, S. 'Civilizing Civil Society: Donors and Democratic Space', *Studies of Nepalese History and Society*, Vol. 7, No. 2, 2002.

थापा हरिबहादुर, *भ्रष्टाचारको शल्यक्रिया*, काठमाडौं, सङ्गीता थापा (प्रकाशक), सन् २००२.

भट्टचन, के बी, नेपालमा एनजिओ र आइनजिओः यथार्थ र भ्रम, *विकास*, वर्ष ७, भोल्युम ११, काठमाडौं, आत्म निर्भर विकास मन्च, सन् १९९८

वन्त, प्रत्युष, के विकास उद्योगमा अंग्रेजीको प्रयोग घटाउनु पर्छ, *विकास*, वर्ष ७ भोल्युम ११, काठमाडौं, आत्म निर्भर विकास मञ्च, सन् १९८८

# नयाँ दिशातर्फ उन्मुख नेपाली आमसञ्चार र केही सैद्धान्तिक चर्चा

कुन्दन अर्याल

यस लेखले सहभागितामूलक सहभागितामा आधारित रही २०६१ साल माघ १९ गतेको शाही घोषणापछि नेपाली आमसञ्चारका माध्यममा देखिएका अन्यौलहरूको विषयमा चर्चा गर्ने छ। लेखमा शाही कदमले नेपाली आमसञ्चार प्रणालीमा प्रेसका चार सिद्धान्तमध्येको एक 'पुरानो अधिनायकवादी-अनुदार सिद्धान्त' लागू गर्ने प्रयास गरेको छ भन्ने तर्क राखिएको छ।

## विषय प्रवेश

'सर्वसत्तावादी सामाजिक संरचनाको स्थापनाले आमसञ्चारमाध्यमद्वारा उत्पन्न गरिएका अव्यवस्थाहरूलाई अवश्य समाधान गर्ने छ'[1] भन्ने सिद्धान्त पश्चिमी मुलुकमा उन्नाइसौं शताब्दीमा विस्तारित थियो। आमसञ्चारका माध्यमले सर्वसाधारणको बुद्धि भुट्ने काम गर्छ भन्ने अवधारणा २०६१ साल माघ १९ गतेको शाही घोषणा[2] सँगै एक्काइसौं शताब्दीको नेपालमा पनि थोपर्न खोजिएको छ। आमसञ्चारको माध्यमको प्रभावकारिता स्वीकार गर्दै नकारात्मक भूमिकाका बारेमा अति बढी सशङ्कित हुने सिद्धान्तलाई नेपालमा बिउँताउन खोजिएको निष्कर्ष यसबीचका घटनाक्रम र गतिविधिहरूका आधारमा निकाल्न सकिन्छ। प्रस्तुत अध्ययनमा माघ १९ गतेको शाही कदमपश्चात् नेपाली आमसञ्चारमाथिको दमनको प्रकृति र त्यसको असर चित्रण गर्दै त्यस्तो दमनकारी गतिविधिको सैद्धान्तिक धरातलको समीक्षा गर्ने जमर्को गरिएको छ भने नेपाली प्रेसमाथि थोपरिएको अधिनायकवादी सिद्धान्तलाई संस्थागत गर्न राज्य पक्षले गरेका प्रयत्नहरूका सम्बन्धमा चर्चा गरिएको छ।

शाही घोषणासँगै पत्रपत्रिकालाई कुनै लिखित कानुनी निर्देशन नदिई नेपाली प्रेसमाथि सैन्य बलका आधारमा विभिन्न बन्देजहरू लगाइयो। शाही घोषणाको भोलिपल्टै नेपाली पत्रकारहरूको छाता सङ्गठन नेपाल पत्रकार महासङ्घले राजाको कदमलाई प्रजातन्त्र र नागरिक अधिकारविरुद्धको कू ठहऱ्याउँदै उक्त अवस्थाको आकलन यसरी गरेको थियो – "नेपाली जनताको अथक सङ्घर्ष र बलिदानबाट प्राप्त सम्पूर्ण नागरिक अधिकारसहितको विचार तथा वाक् स्वतन्त्रता र प्रेस

---

१ Baran J. Stanley & Dennis K. Davis. *Mass Communication Theory Foundations, Ferment and Future*, Thomson Asia Pvt Ltd., 2002, pp. 46-48.

२ २०६१ साल माघ १८ गते श्री ५ बाट सम्पूर्ण कार्यकारी अधिकार स्वयं ग्रहण गरी देशमा सङ्कटकाल लागू गरिएको थियो। प्रेस स्वतन्त्रतालगायतका मौलिक र आधारभूत अधिकारहरू निलम्बित गरेर सरकारले प्रमुख राजनीतिक दलका दर्जनौं नेता तथा कार्यकर्ताहरूलाई नजरवन्द र हिरासतमा राखेको थियो। यस घटना नेपालमा 'माघ १९' का नामले प्रचलित छ र शाही घोषणा, शाही कदम, शाही सम्वोधन आदि नामले राजाद्वारा राष्ट्रको नाममा दिइएको शाही घोषणालाई वुभिन्छ उक्त घोषणाको पूर्ण विवरण २०६१ साल माघ २० गतेको *गोरखापत्र*मा प्रकाशित छ।

स्वतन्त्रता पनि समाप्त पारिएको छ। सञ्चारमाध्यमहरूमा सेनाको उपस्थिति र सेन्सरसिप सुरु गरिएको छ। सञ्चारका प्रविधिहरू पूर्णतः अवरुद्ध पारिएका छन्। अब स्वतन्त्र प्रेस जिउँदो छैन, यसको हत्या गरियो।" [३]

कमिटी टु प्रोटेक्ट जर्नालिस्ट नामक विश्वव्यापी रूपमा पत्रकारहरूको सुरक्षाका निम्ति काम गर्ने संस्थाले प्रेस स्वतन्त्रताको हननका सम्बन्धमा मानकका रूपमा केही परिभाषाहरू तय गरेको छ। त्यसरी परिस्थितिको चित्रण गर्ने परिभाषाहरूमध्येका अधिकांश मानकहरू शाही कदमपछिका दिनमा नेपालमा विद्यमान छन्। भौतिक वा कानुनी कारबाही र धम्कीलगायतका क्रियाकलापद्वारा प्रेसमाथि नियन्त्रण गर्ने सरकारी प्रयासका कारण त्यसपछिका दिनमा नेपाली प्रेसको स्वतन्त्रताको व्यापक उल्लङ्घन भएको छ। [४]

समाचार वा विचार प्रकाशित गरेकै आधारमा कार्यालयमा छापा मारेर दुःख दिनेदेखि लिएर औपचारिक सेन्सरसिप, जफत, समाचार सार्वजनिक हुन नदिनेजस्ता कामकारबाही वा दमन यसबीच नेपाली प्रेसले भोगेको छ। त्यसै गरी पत्रकारहरूको गिरफ्तारी, सूचनाको पहुँचमाथिको बन्देज, सामग्रीको वितरणमा रोकजस्ता पत्रकारिता पेसाका लागि निरुत्साहित तुल्याउने व्यवहार पनि नेपाली प्रेसले भोगेको छ। यसबीच सरकारले बल प्रयोगद्वारा वा त्यस्तै प्रकारको व्यवहारद्वारा पत्रकारहरूलाई धम्क्याएको पनि छ। उल्लिखित सबै हतकण्डाहरूका साथ माघ १९ गतेपछिका दिनमा सरकारले कानुनी राजको बेवास्ता गर्दै कानुनी प्रावधानका नाममा प्रेसमाथि बन्देज लगाउन भरमग्दुर प्रयत्न गर्दै आएको छ। यसबीच राज्यले आफूलाई अनुकूल लाग्ने सूचना वा आफूद्वारा तयार गरिएको सूचना मात्र प्रवाहित गर्न खोजेर 'प्रपोगान्डा' फैलाउन खोजेको छ। उल्लेखनीय छ "कुनै किसिमको सेन्सरसिपबिना साँचो मानेमा प्रपोगान्डा सम्भव हुन सक्दैन। प्रपोगान्डाका निम्ति आममानिस र घटनाबीच कुनै न कुनै किसिमको अवरोध हुनै पर्दछ।[५]" माघ १९ गतेपछि नेपालमा राज्यले सूचना प्रवाहमा त्यस्तै अवरोध सृजना गर्न प्रेस स्वतन्त्रतामाथि बन्देज लगाएको छ।

## सैद्धान्तिक रूपमा सेन्सरसिप र प्रपोगान्डा

"सर्वियामा राष्ट्रपति मेलोशोवीचले सम्पूर्ण स्वतन्त्र सञ्चारमाध्यमहरूलाई बन्द गराए। जिम्बाबे र इरानमा स्वतन्त्र आमसञ्चारका माध्यमहरू गम्भीर प्रहार खेपिरहेका छन्।..... यो कथा धेरथोर मात्रामा संसारभरि नै दोहोरिँदै आएको छ। स्वतन्त्रताका शत्रुहरू राम्रोसँग जान्दछन्, स्थानीय हुन्

---

३ नेपाल पत्रकार महासङ्घ, केन्द्रीय समितिका तत्कालीन सभापति तारानाथ दाहालद्वारा २०६१ माघ २० गते जारी प्रेस विज्ञप्ति।

४ Committee to Protect Journalists, website: www.cpj.org

५ Lippmann Walter, *Public Opinion*, The MacMillan Company, New York, 1961, p. 43.

वा समाचार सामग्रीका निम्ति परदेशबाट ओइरिने हुन्, स्वतन्त्र पत्रकारहरू उनीहरूका दुश्मन हुन्, जसलाई नियन्त्रण, खत्तम वा दमन गर्नैं पर्दछ।"[६] अधिनायकवादीहरू प्रेसमाथि सेन्सरसिप लगाएर सूचना र विचारका वैकल्पिक माध्यम वा साधनहरू बन्द गराउन चाहन्छन्। उनीहरू आफू अनुकूलका सूचना वा विचारको प्रवाहलाई मात्र अघि बढाउन खोज्छन्। आफू अनुकूलका सूचनाहरू मात्र प्रवाह गरी प्रपोगान्डा फैलाउन सूचना र विचारका वैकल्पिक माध्यम वा साधनहरूमाथि बन्देज कायम गर्नैं पर्ने मान्यता त्यसैकारण विकसित भएको हो।

नोम चोम्स्कीले आधुनिक राज्यद्वारा सञ्चालित पहिलो प्रपोगान्डा संयुक्त राज्य अमेरिकाबाट सुरु भएको जनाएका छन्। प्रजातन्त्रको नाम लिँदै प्रपोगान्डा फैलाउन खोज्ने दुष्प्रयत्नप्रति कटाक्ष गर्दै उनी लेख्दछन-" प्रजातन्त्रको वैकल्पिक अवधारणा के हो भने आफ्ना मामिलाहरू व्यवस्थापन गर्नका लागिजनतालाई रोकिनै पर्छ र सञ्चारका साधनहरूलाई साँघुरो घेराभित्र कठोर नियन्त्रणमा राखै पर्दछ।"[७]

आमसञ्चारका माध्यमहरूमाथि किन बन्देज कायम गरिन्छ? भन्ने विषयमा चोम्स्कीले विभिन्न पुस्तकहरूमा विस्तारपूर्वक चर्चा गरेका छन्। उनी भन्छन्, "शक्तिका सम्पूर्ण संयन्त्रहरू राज्ययन्त्रको हातमा केन्द्रित भएका देशहरूमा प्रायः आधिकारिक सेन्सरसिपपद्वारा आमसञ्चारमाथि स्वेच्छाचारी बन्देज कायम गरिएको हुन्छ। यस्तो अवस्थामा आमसञ्चारका माध्यमद्वारा शक्तिमा रहेकाहरूको सेवा हुने कुरा प्रस्ट छ।"[८]

सूचना प्रवाहउपर आफ्नो नियन्त्रण कायम गरी आफू अनुकूलका सूचना वा विचार मात्र प्रवाहित गर्ने चाहना अधिनायकवादको हुने गर्छ। "आमजनताको विचारधारा, व्यवहार, धारणा र विश्वासलाई शब्दलगायतका साधनद्वारा आफू अनुकूल हुने गरी योजनाबद्ध रूपमा प्रभावित तुल्याउने कार्य नै प्रपोगान्डा हो।"[९] खास विश्वास वा आस्था र अपेक्षाको बढाइचढाइ गरी सूचनाको सञ्चार गर्नु प्रपोगान्डा हो। यसअन्तर्गत आमजनताको विश्वासलाई प्रभावित पार्न सञ्चारका विविध उपायहरू प्रयोगमा ल्याइन्छन्। अमेरिकी सिद्धान्तकारहरूले कालो, सेतो र खैरो प्रपोगान्डाको व्याख्या गरेका छन्। उनीहरूका विचारमा नाजीहरूले जमर्नीमा गरेजस्तो पूर्णतः झूटोलाई सत्य भनेर गरिने प्रचारबाजी कालो प्रपोगान्डाको कोटिमा पर्दछ। खतरापूर्ण सूचना वा सोचहरूमाथिको दमन र लाभदायक सूचना वा सोचहरूको अधिकतम प्रचारबाजीलाई यी सिद्धान्तकारहरूले सेतो प्रपोगान्डाको कोटिमा राखेका छन् भने खैरो प्रपोगान्डाको कोटिमा पर्ने

---

६ Herbert John, *Practising Global Journalism exploring reporting issues worldwide*, Focal Press, 2001, p.4.

७ Chomsky Noam, *Media Control the Spectacular Achievements of Propaganda Post 9/11 edition*, ETCH, 2003, p. 10.

८ Herman, Edward S. & Noam Chomsky, *Manufacturing Consent the Political Economy of the Mass Media*, Vintage, 1994, p. 1.

९ Watson James & Anne Hill, *A Dictionary of Communication and Media Studies*, Universal Book Stall, 1996, p. 141.

सूचना वा सोच गलत वा सही दुवै हुन सक्छन्।[१०] कालो, सेतो वा खैरो जस्तो किसिमको प्रपोगान्डा भए पनि त्यसको मूल ध्येय आफू प्रतिकूल सूचना वा विचारको विस्थापन गर्नु नै हुन्छ। नेपालको सन्दर्भमा माघ १९ गतेको शाही घोषणाले, अधिनायकवादी मान्यताको अनुकूल हुने सूचना वा विचारको प्रवाह गर्ने गरी सेन्सरसिपलाई व्यापक र कठोर तुल्यायो। सँगसँगै त्यही मान्यताको सेवामा प्रपोगान्डाको थालनी गरियो।

प्रेसका चार सिद्धान्तहरूको व्याख्या गर्ने क्रममा म्याक क्वायलले सैद्धान्तिक विषयवस्तुका दृष्टिकोणले अधिनायकवाद खोक्रो हुने धारणा अघि सार्दै[११] डा. स्यामुअल जोनसनलाई यसरी उद्धृत गरेका छन् – "सबै समाजसँग शान्ति र सुव्यवस्था कायम गर्ने अधिकार हुन्छ, त्यसैले खतरनाक प्रवृत्ति भएको विचारको प्रचारबाजीलाई निषेध गर्ने जायज अधिकार हुन्छ।" जोनसनको धारणालाई अधिनायकवादका निम्ति आमसञ्चारका माध्यमहरूमाथि बन्देज लगाउने आधार मान्न सकिन्छ।[१२] अधिनायकवादी सोचका शासकहरू किन प्रेसलाई रोक्न खोज्छन् वा सूचना प्रवाहउपर नियन्त्रण गरी आफ्नो अनुकूलका सूचना मात्र प्रसारण वा प्रकाशन गराउन चाहन्छन्? भन्ने विषयमा चर्चा गर्दा फ्रान्सेली राज्य क्रान्तिको सुरुआतको चरणलाई पनि नियाल्न सकिन्छ। "त्यसअगाडिको निरङ्कुश राजतन्त्रकालीन सोच त्यस्तै बन्देजमुखी थियो जुन सोचलाई परास्त गरी प्रेस स्वतन्त्रतासम्बन्धी जिरोन्डिन मोडल अस्तित्वमा आएको थियो। फ्रान्समा व्यक्ति र नागरिकको अधिकारसम्बन्धी घोषणापत्र १७८९ को धारा ११ मा आमसञ्चारमाध्यमको स्वतन्त्रतालाई प्रत्येक व्यक्तिको वाक् स्वतन्त्रताको विस्तारित रूप मानेर यसरी प्रत्याभूत गरियो – "मानिसको अत्यन्त बहुमूल्य अधिकारहरूमध्ये विचार र धारणाको निर्बाध सञ्चार पर्दछ। कानुनले तय गरेअनुसार स्वतन्त्रताको दुरुपयोग गरेको अवस्थामा बाहेक प्रत्येक नागरिकले स्वतन्त्रतापूर्वक बोल्न, लेख्न र प्रकाशन गर्न पाउँछ।"[१३] फ्रान्सेली राज्य क्रान्तिको सुरुआततिर अस्तित्वमा आएको यस्तो अवधारणालाई जिरोन्डिन मोडल अफ मिडिया फ्रिडम भनेर चिन्ने गरिन्छ। प्रत्येक व्यक्तिलाई आफूले गरेको कामबाट अरूको हानि नहुनेसम्मको अधिकार प्रदान गर्ने प्राकृतिक कानुनको सिद्धान्तको गर्भबाट जिरोन्डिन मोडल अफ मिडिया फ्रिडम अस्तित्वमा आएको थियो।

निरङ्कुश राजतन्त्रमा राजनीतिक निर्णय लिने अधिकार राजाको निजी मामलाका रूपमा रही आएको थियो। राजाले शासन गर्ने दैवीशक्ति प्राप्त गरेको हुनाले राजाद्वारा स्वेच्छापूर्वक गरिएको निर्णयउपर कुनै सार्वजनिक छलफल-बहस हुँदैन थियो। त्यसको विपरीत राजनीतिक बहसउपर

---

१० Baran J. Stanley & Dennis K. Davis, *Mass Communication Therory Foundations Ferment, and Future,* Thomson Wadswort, 2000, p. 68.

११ Mc Quail's, *Mass Communication Theory*, SAGE, 2000, p. 153.

१२ Siebert Fred S.et al., *Four Theories of the Press,* University of Illinois Press, 1972, p. 36.

१३ Barbrook Richard, Media Freedom *The Contradictions of Communications in the Age of Modernity*, Pluto Press, 1995, p. 10.

दमन गरिनुलाई दार्शनिकहरूले व्यक्तिको प्राकृतिक अधिकारको उल्लङ्घन ठाने। वाक् स्वतन्त्रता नागरिक समाजभन्दा पहिले अस्तित्वमा आएको हो। तसर्थः कुनै पनि किसिमको संविधानअनुसार बनेको सरकारले मुद्रणका साधनको प्रयोगलगायतका अभिव्यक्ति स्वतन्त्रताको अधिकारको प्रयोगलाई रोक्न सक्दैन। वाक् स्वतन्त्रताको अधिकारको संरक्षणबाट व्यक्तिले सामूहिक समस्याका विषयमा जायज छलफल चलाउन र समाधानका निम्ति चालिनु पर्ने कदमका सम्बन्धमा जायज समाधान प्रस्तुत गर्न सक्दछ।[१४] माघ १९ गतेपछि नेपालमा सूचना प्रवाहउपर नियन्त्रण गर्ने अधिनायकवादी सोच र त्यस अनुकूलको प्रपोगान्डाको प्रक्रिया राज्य स्तरबाट अघि बढाइएको प्रस्ट देखिन्छ। त्यसयता आमसञ्चारका विविध माध्यम वा साधनलाई आमजनताको व्यवहार र धारणाउपर प्रभाव जमाउने उद्देश्यका साथ व्यापक रूपमा प्रयोग गर्न खोजिएको छ। साथै राज्यद्वारा आफ्नो प्रतिकूल सूचना वा विचार प्रवाहित हुन सक्ने मुहान (आमसञ्चारका माध्यमहरू) उपर बन्देज लगाउन खोजिएको छ। प्रपोगान्डा जहिले पनि प्रापकको होइन सम्प्रेषकको स्वार्थ अनुकूल हुने गर्दछ। नेपालमा यसअघि २०१७ सालमा शासनसत्ता हातमा लिइसकेपछि सञ्चारमाध्यमबाट आफ्नो हितका कुरा मात्र जनमानसमा जाऊन् भनेर राजा महेन्द्र र उनका प्रचारकहरू लागिपरेका थिए।[१५] त्यसपछिका दिनमा बहुदलीय व्यवस्थाका प्रवर्तकहरूको विचार सम्प्रेषणमा कडा सेन्सर लगाइएको थियो।[१६] २०६१ माघ १९ गतेयताको नेपालमा पनि राज्यले आमजनताको हितका निम्ति होइन, आफ्नो स्वार्थका निम्ति यस्तो प्रचारबाजीलाई तीव्र पारेको छ र प्रतिकूल सूचना वा विचारलाई रोक्न खोजेको छ।

## नेपाली प्रेससँग अधिनायकवादको पछिल्लो जम्काभेट

२०६१ माघ १९ गतेको शाही कदमपछिका गतिविधि नेपाली प्रेसका निम्ति अधिनायकवादसँगको जम्काभेट नै थियो। त्यस दिन बिहान दस बजे रेडियो नेपाल र नेपाल टेलिभिजनबाट सम्बोधन सुरु हुनेबितिकै पत्रपत्रिकाका र रेडियोका कार्यालयहरूमा सुरक्षाफौज तैनाथ गराइयो। देशका सबै एफ.एम.हरूमा सेना पुग्यो। खास गरी उपत्यकाबाहिर कन्ट्रोल रुमहरूसम्मै सुरक्षाफौज पुग्यो। देशभरका रेडियो एफ.एम. स्टेसनहरू तत्काल बन्द गराइए। सुरुआतमा त्यसरी बन्द गराइएका रेडियोहरू भोलिपल्ट वा त्यसै दिन रातिसम्म गीतहरू मात्र बजाउने र कुनै पनि सूचनामूलक कार्यक्रम नचलाउने सर्तमा खुला गरिए।

---

१४ ऐजन।

१५ वन्त, प्रत्यूष र अन्य (सम्पा) *रेडियो नेपालको सामाजिक इतिहास,* मार्टिन चौतारी, २००४, पृ. १६७।

१६ ऐजन।

तर पोखरामा शाही घोषणाकै दिन सेनाले एफ.एम तथा पत्रिकाका कार्यालयहरूमा ताला लगाई आफैले लगेको साँचो तीन दिनपश्चात् मात्र फिर्ता गऱ्यो। पोखराका एफ.एम. र पत्रिकाहरू तीन दिनसम्म बन्द भए र पछि सेन्सरका साथ सुचारु भए।[१७] पूर्वाञ्चलमा पनि त्यही दिन पूर्वाञ्चलको इटहरीस्थित सप्तकोसी र विराटनगरको कोसी एफ.एम.मा सेनाको प्रवेश भयो र समाचार प्रसारण नगर्न आदेश दिइयो।[१८] शाही घोषणाको चौथो दिन नेपाल पत्रकार महासङ्घले अर्को प्रेस विज्ञप्ति जारी गर्दै यही अवस्थालाई छर्लङ्ग्यायो – "राज्यले सुरक्षाफौज खटाएर अधिराज्यका सबै प्रकाशनहरू बन्द गराएको छ भने छापाखानाहरूमा ताला लगाइदिएको छ। एफ.एम. स्टेसनहरूमा समाचार प्रसारणमा पूर्णतः बन्देज गरी कार्यालयहरूमा सुरक्षाफौज तैनाथ गरिएको छ।"[१९]

एकातिर माघ १९ को शाही सम्बोधन पछिको बन्देज कायम छ भने अर्कोतिर कठोर सङ्कटकालको एक महिनाको अवधिभित्रै २०६१ फागुन १८ गते सूचना तथा सञ्चारमन्त्री टङ्क ढकाल सूचना विभाग र प्रेस काउन्सिलको निरीक्षण गर्ने क्रममा भन्दै थिए – "सरकारले आतङ्ककारीको मनोबल सूचनाको प्रसारका कारण नबढोस् भनेर सूचना र सञ्चारलाई व्यवस्थित मात्र गर्न खोजेको हो। यो सेन्सरसिप होइन।" त्यही अवसरमा सरकारका प्रवक्ता ढकाल पत्रकारहरूलाई निर्देशनात्मक शैलीमा भन्दै थिए – "शाही घोषणालाई रोडम्यापका रूपमा लिई यसलाई कार्यान्वयन गर्न प्रेसले सहयोगीको भूमिका खेल्नु पर्दछ।"[२०]

सरकारका तर्फबाट दिइएका यस्ता निर्देशनहरूले यसअवधिमा नेपाली प्रेसलाई कठोर सेन्सरसीपको राणाकालीन शासनको स्मरण गराएको छ- "सम्वत् १९७० मा गोरखा भाषा प्रकाशनी समिति खडा गरी त्यसको लागि मुलुकी ऐनको अदलको महलमा थप कानुनी व्यवस्था (३१) र (३१क) गरियो। यसअनुसार जुनसुकै किताब छाप्नु/छपाउनु पर्दा गोरखा भाषा प्रकाशनी समितिमा लगी जँचाइ छपाउन हुन्छ भन्ने अनुमति दिएपछि मात्र छपाउन हुने व्यवस्था भयो। यसलाई नेपालमा छापाखाना र प्रकाशनसम्बन्धी व्यवस्थामा कानुनी व्यवस्थाको विकासको प्रारम्भ मान्नु पर्दछ।"[२१] माघ १९ पछिको नेपालमा गोरखा भाषा प्रकाशनी समितिकालीन प्रावधानलाई चुनौती दिने पत्रकारहरू अनेक किसिमका दमनको सिकार भएका छन्।

---

१७ नेपाल पत्रकार महासङ्घ कास्कीका पूर्व सभापति पुण्य पौडेलसँगको कुराकानीमा आधारित।

१८ नेपाल पत्रकार महासङ्घका तत्कालीन उपसभापति यज्ञ शर्मासँग २०६१ चैत ८ गते विराटनगरमा गरिएको कुराकानी।

१९ नेपाल पत्रकार महासङ्घका तत्कालीन महासचिव विष्णु निष्ठुरीद्वारा २०६१ माघ २२ गते जारी प्रेस विज्ञप्ति

२० *गोरखापत्र,* २०६१ फागुन १९ गते।

२१ शाही प्रेस आयोग २०३८ को प्रतिवेदन, परिच्छेद ३, प्रकाशनको दिग्दर्शन चतुर्थ संस्करण, प्रेस काउन्सिल नेपाल, २०६० पृ. ४२०-२१।

गरियो। माघ १९ पछिको समयमा आतङ्ककारी गतिविधिलाई नियन्त्रणमा लिने नाममा राजनीतिक पार्टीका गतिविधिमाथि रोक लगाइएकै थियो। त्यसभन्दा अगाडि बढेर समाचार छापेकै आधारमा पत्रकारसँग प्रहरीले बयान लियो। त्यस घटनाले अन्तर्राष्ट्रिय समुदायलाई थप चिन्तित बनायो। खुला र प्रजातान्त्रिक समाजको मर्यादा र नागरिकका आधारभूत मानव अधिकारको सम्मान गर्न सरकारसँग आग्रह गर्दै यस्ता गतिविधि अविलम्ब रोक्न मानव अधिकार संस्थाहरूले माग गरे।[२५]

राजाको चरम राजनीतिक महत्त्वाकाङ्क्षाको प्राकट्यसँगै नेपालमा द्रुत गतिमा प्रेसमाथि निरङ्कुशतावादी सिद्धान्त थोर्पन खोजिएको छ। शाही कदमको लगत्तै सरकारले प्रेसको निरङ्कुशतावादी सिद्धान्तकै वकालत गर्दै आएको छ। त्यसयता प्रेसलाई नियन्त्रित गर्न राज्यले आफ्ना तमाम संयन्त्रहरूको व्यापक परिचालन गरेको छ।

प्रेसका चार सिद्धान्तमा अधिनायकवादी सिद्धान्तका सम्बन्धमा यसरी व्याख्या गरिएको छ – "... शासकहरूले जनताले जे कुरा थाहा पाउनु पर्छ भन्ने ठान्थे त्यो कुराका बारेमा र जनताले समर्थन जनाउनु पर्ने उनीहरूका नीतिका बारेमा जनतालाई सूचित गर्न प्रेसको प्रयोग गर्दथे। प्रेस राजाको कार्यालयप्रति उत्तरदायी हुन्थ्यो, त्यसकारण यसले दरबारिया नीतिको सर्मथन गर्नु पर्दथ्यो। विशेष स्वीकृतिका आधारमा मात्र निजी प्रेसको सञ्चालनका निम्ति अनुमति प्रदान गरिन्थ्यो। तर यस्तो अनुमति उक्त प्रेसले दरबारिया नीतिको अपमान गरेको वा पालना नगरेको भन्ने ठानियो भने फिर्ता गरिन्थ्यो।" यस सिद्धान्तको आधार राजा, राजाको सरकार वा दुवैको असीमित अधिकार हुन्छ भन्ने दर्शन नै हो। प्रेसको यस्तो सिद्धान्तको मुख्य उद्देश्य सरकारका नीतिहरूको समर्थन र विस्तार गर्दै राज्यको सेवा गर्नु नै हुन्छ। यस सिद्धान्तअन्तर्गत सञ्चारमाध्यमको प्रयोग गर्ने अधिकार राज्यको अनुमति पाउनेलाई मात्र हुन सक्छ। प्रेसको अधिनायकवादी सिद्धान्तमा शक्तिमा रहेका राजनीतिक संयन्त्र र नोकरशाहको आलोचना निषेधित हुन्छ। यस सिद्धान्तअनुसार हरेक सञ्चारमाध्यम सरकारको नीतिलाई प्रभावकारी तुल्याउने साधन हो।[२६] शाही कदमपछिका गतिविधिद्वारा सरकारले नेपाली प्रेसमाथि सोह्रौं-सत्रौं शताब्दीमा बेलायतमा विकसित यस्तो अधिनायकवादी सिद्धान्त थोपर्न खोजेको छ। माघ १९ पछि नेपाललाई सूचना र विचारमाथिको बन्देजको पुरानो युगमा फर्काउन खोजिएको तथ्य सरकारका क्रियाकलापहरूबाट प्रस्ट हुन पुगेको छ।

---

२५ मानव अधिकार तथा प्रजातान्त्रिक अध्ययन केन्द्र सेहुर्डसका सचिव प्रदीप घिमिरेद्वारा २०६१ चैत ४ गते जारी प्रेस विज्ञप्ति।

२६ Fred S. Siebert, Theodore Peterson, Wilbur Schramm, *Four Theories of the Press*. University of Illinois Press, 1972, p. 7.

छयालीस सालको राजनीतिक परिवर्तनसँगै नेपालको पुरातन अधिनायकवादी सञ्चार नीतिलाई मिल्क्याइएको थियो। त्यसपछि प्रस्तावनामै "...नेपाल अधिराज्यको संविधान, २०४७ ले प्राथमिकताका साथ प्रत्याभूति गरेको विचार र अभिव्यक्तिको स्वतन्त्रता तथा प्रत्येक नागरिकलाई सार्वजनिक महत्त्वको कुनै पनि विषयको सूचना माग्ने र पाउने हकको मूल मर्मलाई हृदङ्गम गरी सूचना र सञ्चारका सम्पूर्ण माध्यमहरूलाई विश्वसनीय, प्रभावकारी एवं सुदृढ बनाउनु पर्ने आवश्यकता" दर्शाउँदै २०४९ सालमा राष्ट्रिय सञ्चार नीति लागू गरिएको थियो।

खुला एवं उदार राजनीतिक व्यवस्थाको स्थापनासँगै आमसञ्चार जगतमा निजी क्षेत्रलाई प्रोत्साहित गर्ने नयाँ सञ्चार नीति अगाडि ल्याइएको थियो। त्यही क्रममा "पत्रकारिता क्षेत्रलाई स्वतन्त्र, मर्यादित र उत्तरदायित्वपूर्ण तुल्याउँदै प्रतिस्पर्धात्मक रूपमा निजी क्षेत्रको पत्रकारिताको विकास गरी आर्थिक एवं भौतिक रूपले आत्मनिर्भर हुने वातावरण सृजना गर्ने" नीति राज्यद्वारा अघि सारिएको थियो।[२९]

बहुलवादी संस्कृतिको विकास गर्ने सोचका साथ सूचना तथा सञ्चार क्षेत्रको दीर्घकालीन नीतिको प्रस्तावनामा पनि "देशले अवलम्वन गरेको खुला, उदार एवं प्रतिस्पर्धात्मक परिचालन आर्थिक वातावरणसँग तादात्म्य राख्दै सञ्चार क्षेत्रको विकास एवं परिचालन आर्थिक उपलब्धिसमेत हासिल गर्ने दृष्टिकोण लिई व्यावसायिक रूपमा गरिनु पनि उत्तिकै आवश्यक भइसकेको" तथ्यलाई अघि सारियो। त्यस दीर्घकालीन नीतिमा "सूचना तथा सञ्चार क्षेत्रका मुख्य दीर्घकालीन नीतिहरू" अन्तर्गत "नेपाल अधिकराज्यको संविधानले प्रत्याभूत गरेको जनताको सुसूचित हुने अधिकारलाई पूर्ण रूपले स्थापित गर्ने" अवधारणा अघि सारियो।[३०]

माघ १९ गतेपछिका दिनमा सरकारले संविधान र यस अनुकूल तय गरिएका नीतिहरूलाई पूरै लत्याउँदै आएको छ। तर यसबीच स्वयं नेपाली प्रेस, नागरिक समाज र बहुलवादी राजनीतिक शक्तिले अभिव्यक्ति स्वतन्त्रता र बहुलवादी राजनीतिको पुनर्स्थापनाका निम्ति सङ्घर्ष पनि गरेका छन्।

सङ्कटकालकै अवधिमा पुनरावेदन अदालत तुलसीपुरको फैसलाले संवैधानिक प्रावधानलाई स्मरण गर्न सरकारलाई बाध्य तुल्यायो। २०६१ फागुन १३ गते न्यायाधीश उद्धवप्रसाद बाँस्कोटाको एकल इजलासबाट पन्ध्र दिनभित्र लिखित जवाफ पेस गर्न जिल्ला प्रशासन कार्यालय दाङका नाममा जारी बहुचर्चित आदेशमा भनिएको छ – "जिल्ला प्रशासन कार्यालयले २०६१ माघ २२ गते नयाँ युगबोध दैनिकलाई लेखेको पत्रमा कुन ऐन, कानुन र सूचनाको अधिकार

---

२९ विरही, हरिहर (सम्पा), *प्रकाशनको दिग्दर्शन*, राष्ट्रिय सञ्चार नीति, २०४८ प्रेस काउन्सिल नेपाल, २०६० असोज, पृ. १७७।

३० विरही, हरिहर, (सम्पा), *प्रकाशको दिग्दर्शन*, सूचना तथा सञ्चार क्षेत्रको दीर्घकालीन नीति, २०५८, प्रेस काउन्सिल नेपाल, २०६० असोज, पृ. १८६।

प्रयोग गरी प्रकाशन गर्न बन्देज लगाइएको हो, खुलाइएको देखिएन, अतः यसमा के-कसो भएको हो? निवेदकको मागबमोजिमको आदेश किन जारी गर्नु नपर्ने हो? कुनै आधार र प्रमाण भए सोसमेत साथै राखी लिखित जवाफ पेस गर्नु।"

पुनरावेदन अदालत तुलसीपुरले मुख्य न्यायाधीश माधवप्रसाद ओझा र न्यायाधीश उद्धवप्रसाद बाँस्कोटाको संयुक्त इजलासले २०६१ फागुन १६ गते नयाँ युगबोध दैनिक प्रकाशन गर्न पाउने अन्तरिम आदेश जारी गऱ्यो। अदालतले "पत्रिका प्रकाशन गर्न पाउने निवेदकको कानुनी हक गैरकानुनी रूपले कुण्ठित नगर्नु नगराउनु" भनी विपक्षीहरू प्रमुख जिल्ला अधिकारी शिवप्रसाद नेपाल र जिल्ला प्रशासन कार्यालय दाङका नाममा अन्तरिम आदेश जारी गऱ्यो। यसरी माघ २२ गते रोकिएको नयाँ युगबोध फागुन १६ गते अदालतको आदेशबाट खुला भयो।

तुलसीपुर पुनरावेदन अदालतको त्यो अग्रगामी फैसलाबाट सरकारले भने कानुनी प्रावधान अझै कठोर तुल्याउनु पर्ने पाठ सिकेको अनुमान गर्न गाह्रो छैन। सञ्चारसम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने अध्यादेश २०६० त्यसकै द्योतक हो।

बितेको चौध वर्षमा नेपाली आमसञ्चार जगतमा पहिलेको भन्दा नौलो मूल्य र मान्यतामा आधारित सिद्धान्तको विकास भइरहेको थियो। प्रेसको नौलो मूल्य र मान्यतामा आधारित सिद्धान्त भन्नाले यस्तो किसिमको सिद्धान्त बुझिन्छ, जसले आमसञ्चार प्रणालीको संरचना र सुसञ्चालनसम्बन्धी आर्दश बाटोको व्याख्या गर्दछ।[३१] सामाजिक समस्याको पहिचान र समाधान, शासनको निगरानी आदि सवालमा त्यो सिद्धान्तको प्रभावकारिता देखिँदै पनि थियो। तर शाही घोषणासँगसँगै प्रेस स्वतन्त्रतालाई कुण्ठित पार्ने गतिविधिहरू सुरु भए। सूचनाको निर्बाध प्रवाहमा अवरोध, अन्योल र आमसञ्चार जगतको निगरानी गर्ने भूमिकाको कटौती नै ती सबै गतिविधिका साझा परिणति हुन् भन्ने प्रस्टै छ।

प्रेसलाई सत्यको खोजी गर्ने साधन ठान्ने स्वच्छन्दतावादी सिद्धान्तबाटै बीसौं शताब्दीमा विकसित सामाजिक जिम्मेवारीको सिद्धान्त[३२] छयालीस सालपछिको नेपाली प्रेसमा बढ्दो व्यावसायिक क्षमताका बीच स्पष्ट रूपमा देखिँदै थियो। बीसौं शताब्दीको परिवेशमा आमसञ्चारबाट नयाँ र पृथक् किसिमको सामाजिक जिम्मेवारीको अपेक्षाका साथ अमेरिकामा सन् १९४७ को हचिन्स आयोगको प्रतिवेदनमा आधारित भएर यो सिद्धान्त अस्तित्वमा आएको थियो।

२०४६ सालपछि बनेको नेपालको संविधानले सन् १७९१ को अमेरिकी संविधानको पहिलो संशोधन झैं निर्बाध प्रेस स्वतन्त्रताको परिकल्पना गरेको छ। "स्वतन्त्र प्रेसको प्रत्याभूतिको प्राथमिक उद्देश्य भनेको राज्यका तीनओटै अङ्गबाहेक सरकारबाहिर एउटा चौथो

---

३१ Stanley J. & Dennis K. Davis, *Mass Communication. Theory Foundation*, Ferment and Future, Thmoson Wadsworth, 2000, pp. 86-89.

३२ Fred S. Siebert, Theodore Peterson, Wilbur Schramm, *Four Theories of the Press*,University of Illinois Press, 1972, p. 5.

अङ्गको स्थापना गराउनु नै थियो, जसले तीन आधिकारिक अङ्गहरूउपर निगारानी कायम गर्न सकोस्।"[३३] नेपालका सन्दर्भमा प्रेस चौथो अङ्गका रूपमा जिम्मेवारीका साथ अगाडि आइरहेको थियो। २०४७ सालको संविधानमा "पूर्ववर्ती संविधानहरूमा समावेश नभएका र प्रस्तुत संविधानमा समावेश गरिएका नयाँ हकहरूमध्ये छापाखाना र पत्रपत्रिकासम्बन्धी हक पनि एक हो। यसअघिका संविधानमा स्वतन्त्रताको हकअन्तर्गत वाक् तथा प्रकाशन स्वतन्त्रताको हक रहेको र सोअन्तर्गत नै यस हकको उपयोग गर्नु पर्ने बाध्यता थियो। तर सञ्चार क्षेत्रको विकास, प्रेस स्वतन्त्रताप्रति जनताको बढ्दो अभिरुचि र विश्वव्यापी मानव अधिकारसम्बन्धी घोषणा र महासन्धिहरूका परिप्रेक्ष्यमा नेपालमा पनि प्रेस स्वतन्त्रतालाई यथोचित् स्थान दिनु पर्ने हुनाले छापाखाना र पत्रपत्रिकासम्बन्धी छुट्टै हकको व्यवस्था यस संविधानमा गरिएको छ।[३४] "नेपाल अधिराज्यको संविधान २०४७ मा प्रेस स्वतन्त्रतालाई निर्वाध तुल्याउनका निम्ति जुनसुकै अवस्थामा पनि पत्रपत्रिकाको दर्ता खारेज नगर्ने प्रावधानलाई समावेश गरिएको छ।" विगतमा पत्रपत्रिका र छापाखानाउपर नियन्त्रण गर्ने सिलसिलामा कुनै कुरा छापेको कारणवश कानुनले हुने सजायका अतिरिक्त छापाखाना नै बन्द गर्ने वा जफत गरिदिने र पत्रपत्रिकाको दर्ता पनि खारेज गर्ने गरेका प्रशस्त उदाहारणहरू छन्। आमसञ्चारका यस्ता माध्यमहरूको दर्ता नै खारेज गर्ने र तिनीहरूको छपाइ गर्ने छापाखाना नै बन्द गर्ने वा जफत गर्ने गर्नाले जनताले सूचनाको अधिकारबाट वञ्चित हुनु पर्ने अवस्था रहेको कारणले यस संविधानमा यस प्रकारका हकको विशेष व्यवस्था गर्नु परेको हो।"[३५] तर माघ १९ गतेको शाही कदमले स्वतन्त्र वातावरण र राज्यको खुला संवैधानिक तथा कानुनी नीतिका कारण नेपाली प्रेसमा विकसित भइरहेको मूल्य र मान्यतामा आधारित सुसञ्चालनको नयाँ सिद्धान्तउपर प्रहार गरेको छ। आउँदा दिनहरूमा नेपालमा त्यस्तो नवीन सिद्धान्तको निर्वाध विकासका पक्षधर र त्यसलाई पछाडि धकेल्न खोज्ने माघ १९ का पृष्ठपोषहरूबीचको द्वन्द्व तीव्र हुने सङ्केत पनि प्रस्टै देखिन्छ।

## खराबबाट अति खराबतर्फको यात्रमा रहेको प्रेस स्वतन्त्रता

कुनै देशमा प्रेस स्वतन्त्रताको अवस्था कस्तो छ? भन्ने विषयको आकलन फ्रिडम हाउस नामक सस्थाद्वारा तय गरिएका मापदण्डहरूको आधारमा गर्न सकिन्छ। सन् १९८० देखि उक्त

---

३३ Potter Stewart, *Freedom of Expression: The First Amendment Speech and Press Guarantees in Free but Regulated,* Daniel L. Brenner & William L. Rivers (ed), M, 1989, p.16.

३४ रेग्मी, मुकुन्द, *संवैधानिक विकास र नेपाल अधिराज्यको संविधान २०४७*, भाग-२, प्रकाशकः श्रीमती सीतादेवी रेग्मीसमेत अन्य, २०६१, पृ. १८५९।

३५ रेग्मी, २०६१, पृ. १८६०।

अन्य सहुलियत प्रदान गर्ने सवालमा गरिएको मनोमानी, सामग्रीमा भ्रष्टाचार वा घूसखोरीको असर आदि पर्दछन्।

फ्रिडम हाउसले यही आधारमा शून्यदेखि ३० अङ्क ल्याउने देशको आमसञ्चारमाध्यमलाई स्वतन्त्र, ३१ देखि ६० ल्याउने आंशिक स्वतन्त्र र ६१ देखि १०० ल्याउनेलाई स्वतन्त्रताविहीन प्रेसका रूपमा वर्गीकरण गर्दै आएको छ। यसरी फ्रिडम हाउसको मूल्याङ्कनमा प्रेस स्वतन्त्रमाथि जति बढी चोट पुऱ्याउने वातावरण भयो उति अङ्क बढ्दै जान्छ। त्यही व्यवस्थाअनुसार गएको वर्ष सन् २००४ मा नेपालको प्रेस स्वतन्त्रताको अवस्थालाई फ्रिडम हाउसले ६९ अङ्क प्रदान गरेको थियो। कानुनी प्रावधान र आर्थिक वातावरणमा थोरै अङ्क पाएको भए पनि त्यस बेला नेपालले राजनीतिक दमनका कारण धेरै नकारात्मक अङ्क प्राप्त गरेको थियो।

तर माघ १९ पछिको अवस्थामा राज्यले राजनीतिक रूपले मात्र होइन कानुनी र आर्थिक रूपले पनि नेपाली प्रेसलाई कठोर नियन्त्रण गर्न खोजेको छ। कुनै पनि देशको सूचनाको स्वतन्त्र प्रवाहको परिमाणले नै प्रेस स्वतन्त्रताको अवस्था दर्शाउँछ। शाही कदमपछिको नेपालमा उल्लेखित तीनओटा पक्षमा गरिएको नियन्त्रणका माध्यमबाट राज्यले सूचना प्रवाहउपर बन्देज लगाउन खोजेको छ।

## नेपाली आमसञ्चार उद्योगमाथिको आक्रमण

२०४६ सालको जनआन्दोलनपछिको राजनीतिक व्यवस्थामा विस्तारित समाचारपत्रहरूको जन्म गराउने वातावरणको सृजना भयो। अमेरिकी सन्दर्भमा विस्तारित समाचारपत्रको जन्म हुनु पूर्वको अवस्थाका सम्बन्धमा व्यापक अध्ययन गरिएको छ। जसअनुसार त्यहाँ व्यापक परिमाणमा वितरण हुने आमसमाचारपत्र वा विस्तारित समाचारपत्रको विकासका पूर्वाधारहरूलाई यसरी सूत्रबद्ध गरिएको छ।

छिटो र सस्तो छपाइ गर्न सक्ने मुद्रणयन्त्रको विकासपश्चात् आमसमाचारपत्रहरूको जन्म भयो। सन् १८३० मा प्रतिघण्टा चार हजार प्रति छाप्न सक्ने वाष्पचालित यन्त्रको विकास भएपछि संयुक्त राज्य अमेरिकामा तीव्र गतिमा छपाइ हुन थालेको थियो। त्यस्तो यन्त्रको विकास भएपछि आममानिसको क्रयशक्तिले धान्न सक्ने ज्यादै सस्तो समाचारपत्र छाप्न सम्भव भएको थियो। त्यस्ता विस्तारित समाचारपत्रहरूको अर्को पूर्वाधारका रूपमा छापिएका सामग्री पढ्न सक्ने पर्याप्त जनसङ्ख्या तयार भयो। त्यसैले विस्तारित आमसञ्चारपत्रको जन्म गराउने दोस्रो तत्त्व भनेको जनतामाझ बढ्दो साक्षरता प्रतिशत थियो। सन् १८३० का बेला राज्य स्तरमा पहिलो सार्वजनिक विद्यालय प्रणालीको स्थापना भएको थियो। शिक्षामा गरिएको प्रोत्साहनले मध्यम र अल्प आयका जनतामाझ पनि पढ्न सक्ने क्षमताको विकास भएको थियो।

अमेरिकामा विस्तारित समाचारपत्रको विकासको तेस्रो पूर्वाधारका रूपमा सचेत आमपाठक वा जनसमुदायको उल्लेखनीय उपस्थितिलाई लिइएको छ। सन् १८३० ताका नै सर्वसाधारणले पहिलोपटक राजनीतिक र आर्थिक शक्तिका रूपमा मान्यता पाएका थिए। मतदानका निम्ति सम्पत्तिसम्बन्धी प्रावधानको अन्त्य त्यही बेला भएको थियो। लोकप्रिय मतका आधारमा राष्ट्रपतिको चयन गर्ने पद्दतिलाई एउटाबाहेक सबै राज्यहरूद्वारा त्यही बेला अङ्गीकार गरिएको थियो। त्यस अवधिमा अमेरिकी समाजमा सहरी मध्यम वर्गको विस्तार हुन गयो। साथै वाणिज्य र राजनीतिको प्रजातान्त्रिकरणले आमसमाचारपत्रप्रति उत्तरदायी आमपाठकको सृजना भयो।[३८]

पौने दुई सय वर्षअघिको अमेरिकाको यस्तो परिदृश्य छयालीस सालपछिको नेपालमा पनि क्रमशः विकसित हुँदै थियो। तर माघ १९ गतेको घोषणापछि राज्य स्तरबाट प्रदर्शित गतिविधि र सरकारका निर्णयहरूले नेपाली आमसञ्चार जगतको औद्योगिकीकरणतर्फको मार्गमा व्यवधान उत्पन्न गरेको छ। सरकारले माघ १९ को कदमप्रति असहमत पत्रपत्रिकाउपर आर्थिक नाकाबन्दी लगाउने नीति अघि सारिसकेको छ र विमति जनाउने पत्रपत्रिकाको सहुलियतमा कटौती हुन थालिसकेको छ।

सूचना तथा सञ्चार मन्त्रालयले वैचारिक आधारमा पत्रिकाहरूमाथि अन्याय र भेदभाव गर्न थालेको तथ्यप्रति एक जना सम्पादकले प्रशासनसमक्ष नै आफ्नो धारणा यसरी प्रस्तुत गरेका छन् –"अघिल्लोपटक बुधबार साप्ताहिकलाई बयानमा बोलाइएपश्चात् हामीले विज्ञापन छापेबापत प्राप्त गर्ने रकम मासिक १२ हजार रोक्का गरिएको छ। यसरी राज्यले अभियोग प्रमाणित नगरी पत्रिकालाई आर्थिक नाकाबन्दी गर्ने काम सूचना तथा सञ्चार मन्त्रालयको मौखिक आदेशमार्फत गरेको छ।"[३९]

२०६१ फागुन २० गते सूचना विभागका नवनियुक्त महानिर्देशक नारायणगोपाल मलेगोले लोक कल्याणकारी कोषअन्तर्गत दिँइदै आएको विज्ञापन सहयोग बन्द भएको घोषणा गरे। प्रस्ट छ, त्यो घोषणा माघ १९ को विपक्षमा रहेका पत्रपत्रिकाकालाई आर्थिक नाकाबन्दी लगाउने योजनाअनुरूप नै भएको थियो। माघ १९ पछि गठित नयाँ सरकारले नेपाल पत्रकार महासङ्घलाई अघिल्लो सरकारद्वारा छुट्याइएको आर्थिक सहयोग फिर्ता लिने भएको जानकारी पनि त्यस बेला दिइएको थियो।[४०] नयाँ सरकारले अघिल्लो सरकारका पालामा महासङ्घको नाममा पत्रकार कल्याण कोष, द्वन्द्वपीडित पत्रकार कोष र भवन निर्माण तथा प्रेस काउन्सिलको पत्रकार कल्याण कोषको शीर्षकमा छुट्याइएको कुल रकम रु. ४५ लाख उपलब्ध नगराउने निर्णय गरेको छ।

---

३८ Dominick Joseph R. *The Dynamics of Mass Communication*, Mc Graw-Hill College, 1999, p. 89.

३९ सम्पादक सूर्य थापाको वयान, २०६२ वैशाख ७ गते, *बुधवार साप्ताहिक*।

४० *काठमाडौं पोष्ट*, २०६१, फागुन २१।

२०६१ चैत १८ गते सञ्चारमन्त्री टङ्क ढकालद्वारा राष्ट्र, राष्ट्रियता र राजमुकुट पक्षधर सञ्चारमाध्यमलाई प्रोत्साहन गर्न नयाँ विज्ञापन नीति ल्याइने घोषणा गरियो। उनले प्रेस काउन्सिलद्वारा राष्ट्र, राष्ट्रियता र राजमुकुटको पक्षमा आउने प्रेसलाई प्रोत्साहित र नआउनेलाई निरुत्साहित गर्ने गरी प्रभावकारी अनुगमन गरियोस् भन्ने निर्देशन दिए। उनले त्यहीअनुसार आचारसंहिताको पालना भएनभएको आधारमा लोककल्याणकारी विज्ञापन वितरण गर्न प्रेस काउन्सिललाई निर्देशन दिए। उनले प्रेसमाथिको नियन्त्रणलाई गर्वको विषय बनाउँदै भने – "शाही घोषणापछि सञ्चारमाध्यम जिम्मेवार, मर्यादित, अनुशासित र संयमित भएका छन्। त्यसका लागि म सञ्चारमाध्यमहरूलाई धन्यवाद दिन्छु।"[४१]

त्यस बेलासम्म नेपाली सञ्चार उद्योगले सञ्चारमन्त्रीको त्यस्तो धन्यवादको मूल्य गतिलैसँग चुकाइसकेको थियो। माघ १९ गतेपछि खास गरी एफ.एम.हरूमा आर्थिक सङ्कट निकै बढेको छर्लङ्ग देखिएको छ। यतिखेर एकातिर एफ.एम रेडियोहरूमा जम्मा १०-१५ मिनेटको समाचार बन्द हुँदैमा ठूलो सङ्ख्यामा बेरोजगारी बढ्यो भन्नु तर्कसङ्गत नरहेको दाबी [४२] गरिँदै छ। अर्कोतिर सञ्चार उद्योगको रक्षाको प्रश्न गम्भीर बन्न पुगेको छ। पत्रकारहरूको रोजगारीको प्रत्याभूति र उनीहरूको व्यावसायिक स्वतन्त्रताको रक्षाको प्रश्न उत्तिकै गम्भीर छ। किनभने वस्तुवादी आलोचना गर्ने प्रेसको स्वतन्त्रतालाई राज्यले स्वीकार नगर्ने नीति अघि सारिसकेको छ।

तर राज्यको नीतिप्रति असहमतिका यस्ता स्वर पनि उठिरहेका छन्, सञ्चार उद्योगको रक्षा गरिनु पर्दछ। पत्रकारहरूको रोजगारीको प्रत्याभूति र उनीहरूको व्यावसायिक स्वतन्त्रताको रक्षा हुनु पर्दछ। सञ्चारका प्रविधि र माध्यममाथि अहिले गर्न खोजिएको नियन्त्रण र बन्देज हटाउनु पर्दछ। वस्तुवादी आलोचना गर्ने प्रेसको स्वतन्त्रतालाई राज्यद्वारा स्वीकार गर्नु पर्छ।[४३]

माघ १९ को कदमपछि बुटवलको लुम्बिनी एफ.एम.मा विज्ञापनमा पचहत्तर प्रतिशतले कटौती हुन पुगेको छ। त्यसयताका दिनमा पहिले बाह्र हजारमा बजाइने गरेको विज्ञापन पच्चीस सयसम्ममा पनि बजाइने गरेको बताइन्छ। समाचारका निम्ति काम गर्ने सात जनामध्ये पाँच जनालाई बिदा दिइसकिएको छ। ठाउँठाउँका गरी लुम्बिनी एफ.एम.मा काम गर्ने चालीस जना संवाददाता अलपत्र परेका छन्।[४४] माघ १९ पछि रूपन्देहीकै बुटवल एफ.एम.मा पनि स्थानीय संवाददातासहित समाचारमा संलग्न रहँदै आएका बीस जना बेरोजगार हुन पुगे।[४५] माघ १९ पछिका दिनमा देशभरका एफ.एम.हरूले यस्तो समस्या भोग्नु परेको छ।

---

४१ *गोरखापत्र* २०६१ फागुन १८ गते।

४२ सञ्चारमन्त्री ढकाल, *गोरखापत्र* २०६१ फागुन १८ गते।

४३ तारानाथ दाहाल, *हिमाल खबरपत्रिका*, १-१५, फागुन, २०६१।

४४ *लुम्बिनी एफ.एम.* को कार्यालयमा, २०६२ वैशाख ८ गते कार्यकारी प्रमुख लेखनाथ ज्ञवालीसँग गरिएको कुराकानीमा आधारित।

४५ *बुटवल एफ.एम.*मा स्टेसन म्यानेजर माधव नेपालसँग २०६२ वैशाख ८ गते गरिएको कुराकानीमा आधारित।

यसबीच विज्ञापन नीतिसम्बन्धी मस्यौदासमेत चर्चामा आएको छ। माघ १९ पछि सञ्चार मन्त्रालयले गठन गरेको आमसञ्चार कार्यदलको सिफारिसमा सरकारी विज्ञापनलाई केन्द्रीकृत गर्ने अवधारणासम्बन्धी आन्तरिक गृहकार्य भइरहेको कुरा सार्वजनिक भइसकेको छ। यतिखेर सरकार माघ १९ गते उदाएको राजनीतिक महत्त्वाकाङ्क्षाको सेवामा आर्थिक र कानुनी वातावरण बनाउन तल्लीन छ। माघ १९ अघि सारिएको प्रेसमाथिको बन्देजको अवधारणालाई कार्यान्वयन गर्ने सिलसिलामै बनेको पाँच सदस्यीय आमसञ्चार कार्यदलले सरकारी विज्ञापनमा एकद्वार प्रणालीसम्बन्धी अध्यादेशको तयारी गरिरहेको छ। जसअनुसार "सरकारी निकाय र सरकारबाट प्रदान गरिने अनुदानबाट सञ्चालित स्वायत्त, स्वतन्त्र स्वशासित संस्थाहरूबाट प्रवाहित हुने विज्ञापन सूचनाहरू प्रकाशित गर्ने माध्यमहरूले राज्यका सर्वोच्च निकायबाट विनिर्मित मस्यौदा ऐन, नियम, कानुन र तिनका अधीन रही सरकारले जारी गरेका आदेश सूचनाहरूको परिपालना गरून् भन्ने राज्यको अपेक्षालाई स्पष्ट गर्नु पर्ने भएकोले" यस्तो एकद्वार प्रणाली लागू गर्ने जनाइएको छ।[४६] विज्ञापनमा एकद्वार प्रणालीसम्बन्धी अवधारणामा पत्रपत्रिका र सञ्चारका अन्य माध्यमको मूल्याङ्कनको आधारमा "राष्ट्र, राष्ट्रियता, राष्ट्रिय अखण्डता, राष्ट्रिय एकताका प्रतीकका रूपमा संविधानले मर्यादित स्थानमा राखेको राजसंस्थाप्रति प्रकट गरेको मर्यादा" लाई पनि समावेश गरिएको छ। उक्त अवधारणाअनुसार विज्ञापन वितरणसम्बन्धी कार्यका निम्ति केन्द्रमा सूचना तथा सञ्चारमन्त्रीको नेतृत्वमा केन्द्रीय समन्वय समिति र जिल्लामा प्रमुख जिल्ला अधिकारीको संयोजकत्वमा जिल्लास्तरीय विज्ञापन वितरण समितिको गठन गरिने भएको छ। केन्द्रीय समन्वय समितिका अध्यक्ष सूचना तथा सञ्चारमन्त्रीलाई प्रेस काउन्सिलले गरेको पत्रपत्रिकाको मूल्याङ्कन स्वीकृत, संशोधन वा अस्वीकृत गर्ने अधिकारसमेत दिएर कठोर आर्थिक नियन्त्रणको नीति अघि सारिएको छ।[४७] सरकारले आफ्नो राजनीतिक स्वार्थ पूरा गर्न प्रेसमाथि नियन्त्रण कायम गर्न अर्को अध्यादेश ल्याउने तयारी गरिरहेको तथ्यसमेत प्रकाशमा आइसकेको छ।

राजाको सरकार सरकारी विज्ञापनमा कटौती गरी समाचार माध्यमको घाँटी रेट्ने घातक अर्थिक नीति अघि सार्दै छ। एक अनुमानअनुसार देशव्यापी रूपमा करिब दुई हजार पत्रकारहरू बेरोजगार हुन पुगेका छन्।[४८]

बेलायती राजदूत किथ जर्ज ब्लुमफिल्डले वैशाख १२ गते आतङ्कवादको नाममा सरकारले सञ्चारमाध्यममाथि आर्थिक नाकाबन्दी लगाएर स्वतन्त्र सूचना प्रवाहमा नियन्त्रण गर्न खोजेको धारणा सार्वजनिक कार्यक्रममै व्यक्त गरे।[४९] त्यसअघि राष्ट्रसङ्घीय शैक्षिक, वैज्ञानिक एवं

४६ विज्ञापनमा एकद्वार प्रणाली लागू गर्नेसम्बन्धी अवधारणाको मस्यौदाको अप्रकाशित प्रति।

४७ ऐजन।

४८ Lak Daniel, A Country Silenced Nepal After The Coup, CPJ, April 28, 2005

४९ *कान्तिपुर,* २०६२ वैशाख १३ गते

सांस्कृतिक सङ्गठन युनेस्कोका महानिर्देशक कोचिहिरो मात्सुराले एफ.एम. रेडियोका समाचारमा लगाइएको प्रतिबन्धका कारण एक हजार पत्रकारको रोजगारी खतरामा परेको जनाएका थिए।[५०]

## पहिले सैन्य बलको प्रयोग

माघ १९ को कदम नेपाली प्रेसमा कुन रूपमा अनूदित भयो भन्ने बुझ्न एक जना सम्पादकले प्रशासनसमक्ष दिएको बयानका यी पङ्क्तिहरू पर्याप्त छ – "२०६१ माघ १९ को शाही घोषणालगत्तै सोही साँझ ७ बजे रेन्जर गणका कर्णेलको नेतृत्वमा सशस्त्र सुरक्षाफौजले घेराबन्दी गरी पत्रिका नछापिने आदेश छ, जहाँ जुन स्थितिमा रहेको छ, छोड्नुहोला भनेर भित्री पेजहरू छापिएको स्थितिमा अखबार छपाइ अवरुद्ध पारियो। पछि ९ बजे जङ्गी अड्डाबाट सिभिल ड्रेसमा मेजर शङ्कर भण्डारीको टोली पुगेर पत्रिका छाप्न सकिने तर माघ १९ को शाही घोषणाको सकारात्मक पक्ष, स्वागत र दीपावली गरेको समाचार मात्रै लेख्न पाइने सीमा तोक्ने काम भयो। हामीले यससम्बन्धी केही आदेश, निर्देशन छ कि भनेर माग गऱ्यौं तर त्यस्तो केही दिइएन। प्रेसमा छपाइको काम गर्ने व्यक्तिहरूलाई भय र त्रासले त्यहाँ बस्न नसक्ने अवस्था बन्यो। त्यसले गर्दा दोस्रोपटकको आदेशअनुसार पत्रिका निस्कन सम्भव भएन।"[५१]

कैलालीमा माघ १९ को शाही घोषणाको लगत्तै पत्रपत्रिका छाप्ने ६ ओटै छापाखानाहरूमा ताल्चा लगाइयो। त्यसपछि पाँच दिनसम्म जिल्लामा पत्रपत्रिका प्रकाशित भएनन्। प्रेस सञ्चालकहरूलाई क्षेत्रीय प्रहरी इकाइ कार्यालय, धनगढीमा बोलाई शाही घोषणा प्रतिकूल कुनै पनि सामग्री नछाप्ने सर्तमा कागज गराइयो। त्यसपछि मात्र ताल्चा खोलियो।[५२]

शाही घोषणा सकिँदा नसकिँदै शाही नेपाली सेनाको नेतृत्वमा संयुक्त सुरक्षाफौजले बुटवलको बुटवल एफ.एम.मा घेरा हाल्यो। सुरक्षाफौजले प्रसारण तत्काल रोक्न आदेश दियो। तर एफ.एम.का सञ्चालकहरूसँगको केही बेरको बहसपछि मनोरञ्जनात्मक सामग्रीबाहेक अरू कुनै पनि सामग्री नबजाउने सर्तमा प्रसारण बन्द नगरिने भयो। तर राती आठ बजे फेरि सुरक्षाफौज स्टेसनमै पुग्यो। यसपटक सेनाले कन्ट्रोल रुममै पुगी प्रसारण बन्द गर्न लगायो। राती दस बजे गीतहरू बजाए हुन्छ भनियो। तर माघ २० गते बिहान ५ बजेदेखि मात्र प्रसारण सुरु गरियो। प्रसारण केवल गीतको थियो।[५३]

---

५० UNESCO Director-General Koichiro Matsura's statement, 16 February 2005

५१ *बुधवार* साप्ताहिक का सम्पादक सूर्य थापाले २०६१ फागुन २१ गते जिल्ला प्रशासन कार्यालय काठमाडौंमा दिएको बयान।

५२ धनगढीमा फागुन ३० गते मनमोहन स्वाँरसँग गरिएको कुराकानी।

५३ *बुटवल एफ.एम.*मा २०६२ वैशाख ८ गते स्टेसन म्यानेजर माधव नेपालसँग गरिएको कुराकानी।

बुटवलमा सेन्सरका सन्दर्भमा आमसञ्चारमाध्यमसँगको व्यवहार सेनाले नै गरेको थियो। त्यसैले बुटवल एफ.एम.का सञ्चालकहरू २२ नं. बाहिनी पुगे। त्यहाँ सञ्चालकहरूले निर्देशन पाए – "अन्तर्वार्ता नलिनु, प्रसारणमा कतै राजनीतिको 'र' आउनु भएन।" फागुनको पहिलो सातातिर स्वस्थ्य संसार नामक कार्यक्रमका लागि सञ्चालकले एक जना हाडजोर्नी विशेषज्ञलाई अन्तर्वार्ताका निम्ति स्टुडियोमै बोलाएका थिए। स्टेसन प्रमुखले ब्यारेकमा फोन गरी त्यसका निम्ति अनुमति मागे। तर उताबाट भनियो –"कुनै पनि किसिमको अन्तर्वार्ता हुँदैन।" त्यसपछिका दिनमा कार्यक्रम सञ्चालकहरूले यस्ता गैरराजनीतिक विषयहरूमा विस्तारै निर्देशनहरूको अवज्ञा गर्न थाले।[५४]

माघ २० गते दिउँसो बुटवलको लुम्बिनी एफ.एम.मा सुरक्षाफौज पुग्यो र आदेश दियो – "समाचार र समाचारमूलक कुनै पनि कार्यक्रम नबजाउने।" त्यसपछि गीत र भजन मात्र प्रसारण गर्न थालियो। त्यही राती ८ बजे सुरक्षाफौज पुग्यो र पूरै प्रसारण रोक्न आदेश दियो। कर्मचारीहरूले गीत र भजन मात्र बजाउन आपत्ति हुन नपर्ने तर्क राखेपछि सुरक्षाफौजले भन्यो – "बन्द गर्ने भए गर। नत्र हामी नै बन्द गर्छौं र तिमीहरूलाई पनि लिएर जान्छौं।" त्यसपछि बन्द भएको प्रसारण भोलिपल्ट बिहान ११ बजेसम्म बन्द नै रह्यो। लुम्बिनी एफ.एम.का सञ्चालकहरूसँग पनि सेन्सरका मामिलामा सेनाले नै व्यवहार गर्‍यो। बाहिनीले सञ्चालकहरूलाई प्रसारण सामग्रीका बारेमा निर्देशन दिन एक जना सैन्य प्रवक्ता तोकिदिएको थियो।[५५]

माघ १९ पछि आमसञ्चारका माध्यमहरूलाई सेनाले आफ्नो निर्देशनमा सञ्चालन गर्न खोजेको उदाहरण रूपन्देहीमा मात्र होइन देशका सबैजसो भूभागमा पाइन्छ। त्यसपछिका दिनमा सेनाले पहिलेपहिलेभन्दा निकै अग्रसर भएर पत्रकारहरूलाई उनीहरूको कर्तव्यका सम्बन्धमा सम्झाएको पाइन्छ। २०६१ चैत १८ गते पोखरास्थित पश्चिम पृतनाको कार्यालयमा आयोजित पत्रकार भेटघाट कार्यक्रममा पृतनापति अमर पन्तले भने –"सम्पूर्ण प्रेस जगत् आतङ्कवादविरुद्धमा लाग्नु पर्ने आजको आवश्यकता हो। आतङ्कवाद निर्मूल पार्न सबैले एउटै लक्ष्य लिएर अगाडि बढ्नु पर्छ। सञ्चार जगतले समयसमयमा सुरक्षाकर्मीको मनोबल गिर्ने खालको समाचार सम्प्रेषण गर्ने गरेको छ। अबदेखि त्यस्ता समाचार सम्प्रेषण नगर्नसमेत आग्रह गर्दछु। कुनै पनि घटनाको समाचार सत्यतथ्यभन्दा फरक आइरहेको छ। त्यसैले पृतनास्थित जनसम्पर्क अधिकारीसँग सोधपुछ गरी वास्तविकता मात्रै सम्प्रेषण गर्न सञ्चारकर्मीसँग अनुरोध गर्दछु। यतिखेर मुलुकमा सुशासनका लागि भ्रष्टाचारविरोधी समाचार सम्प्रेषण गर्नु पर्ने खाँचो रहेको छ।"[५६]

---

५४ ऐजन।

५५ *लुम्बिनी एफ.एम.*मा २०६१साल वैशाख ८ गते कार्यकारी प्रमुख लेखनाथ ज्ञवालीसँग गरिएको कुराकानी।

५६ *नेपाल समाचारपत्र,* २०६१ चैत १९गते।

माघ १९ को शाही घोषणको लगत्तै राज्यबाट भएका गतिविधि पूर्णतः स्वेच्छाचारी शक्तिको प्रयोगमा आधारित थिए, कानुनी राजको मान्यताअनुसार थिएनन्। यो तथ्य प्रशासकहरूको सार्वजनिक अभिव्यक्तिका भाषामा पनि पाउन सकिन्छ। सङ्कटकालमा मानव अधिकारको अवस्थाको समीक्षा गर्न पोखरामा आयोजित एउटा कार्यक्रममा कास्कीका तत्कालीन प्रजिअ कृष्णप्रसाद लम्सालले भने –"राष्ट्र सङ्कटमा परेका बेला एकदुई दिन पत्रिका बन्द गरिनुलाई ठूलो रूपमा लिनु हुँदैन। माघ १९ गतेपछि पोखरामा दुई दिन पत्रिका बन्द भए। पत्रकार बिरामी भएको वा सम्पादक मरेको अवस्थामा पनि दुई दिन पत्रिका बन्द हुन सक्छ।"[५७]

कतिपय जिल्लाहरूमा प्रेसमाथि सुरक्षाकर्मीद्वारा प्रत्यक्ष नियन्त्रण कायम गरियो। धरानमा शाही सम्बोधनको केही बेरपछि नै सेना आएर पत्रिका कार्यालय बन्द गरी साँचो लिएर गए। त्यो साँचो माघ २५ गते प्रहरीले ल्याएर फिर्ता दियो। बीचको अवधिमा कुनै कागज वा लिखित निर्देशन दिइएन र पत्रिका निकाल्न पनि दिइएन। माघ २६ गते पत्रिका निकालिएपछि सम्पादकलाई सेनाले बोलाएर धम्क्यायो। कार्यालयमा पुनः ताला लगाइयो। माघ २७ गते साँचो पुनः फिर्ता दिइयो। त्यसपछिका दिनमा सेनाको सेन्सरमा पत्रिका निस्कन थाल्यो। सेनाले आएर सेन्सर गरेपछि मात्र अखबार छापिन थाल्यो।[५८]

शाही सम्बोधनको लगत्तै देशका सबैजसो सञ्चारमाध्यममा संयुक्त सुरक्षाफौज वा शाही नेपाली सेना तैनाथ गरियो। नेपलगन्जको भेरी आवाज एफ.एम.मा हतियारधारी सेना दोस्रो तलासम्मै पुगे। उनीहरू समाचार स्टुडियो र नियन्त्रण कक्षसम्मै पुगे।[५९] राजाको सम्बोधन सकिँदा नसकिँदै नेपालगन्जको बागेश्वरी एफ.एम.मा पनि सशस्त्र सेनाको प्रवेश भयो।[६०]

माघ १९ को शाही घोषणापछि नेपालगन्जमा ६ दिनसम्म पत्रपत्रिका प्रकाशनमै रोक लगाइयो। आमसञ्चारमाध्यमका कार्यालयहरूमा सुरक्षाकर्मी तैनाथ गरियो। सञ्चारकर्मीले सेनाको मध्यपश्चिम पृतना हेडक्वार्टरमा प्रकाशनको माग गरेपछि मात्र सञ्चार मन्त्रालयको सूचनामा थप बाह्रबुँदे स्थानीय निर्देशिका संलग्न गरी पुनः प्रकाशनको अनुमति दिइयो।[६१]

राजधानी काठमाडौंदेखि टाढाटाढाका सहरहरूसम्म सबैतिर आमसञ्चारका माध्यमहरूमाथि ठाडो नियन्त्रण कायम गरियो। तर नियन्त्रणका निम्ति धेरैजसो ठाँउमा सुरक्षाफौज र कतै कतै

---

५७ पोखरामा मानव अधिकार सन्धि अनुगमन समन्वय समितिद्वारा २०६१ चैत ३८ गते आयोजित कार्यक्रममा बोल्दै।

५८ २०६१ साल चैत ८ गते *ब्लास्ट* दैनिकको धरानस्थित कार्यालमा प्रधानसम्पादक राजकुमार कार्कीसँग भएको कुराकानी।

५९ २०६१ फागुन १६ र १७ गते *भेरी आवाज* एफ.एम.मा अध्यक्ष तारा खनाल र कार्यक्रम संयोजक डिल्ली वि.सी.संग गरिएको कुराकानी।

६० २०६१ फागुन १७ गते *बागेश्वरी एफ.एम.*मा कार्यक्रम संयोजस पोषण के.सी.सँगको कुराकानी।

६१ नेपालगन्जको *कालपृष्ठ* दैनिकमा २०६१ फागुन १७ गते सम्पादक हेमन्त कर्माचार्यसँगको कुराकानी।

जिल्ला प्रशासन अग्रसर भएको पाइयो। सुर्खेतमा बुलबुले, सुसेली र सुर्खेत पोष्ट तीनओटै दैनिक र एक रेडियो जिल्ला प्रशासन कार्यालयका तर्फबाट बन्देज लगाइयो। माघ १९ को अर्को दिनदेखि जिल्ला प्रशासनको मौखिक आदेशअनुसार बन्द भएका सुर्खेत जिल्लाका दैनिक र साप्ताहिक गरी आठओटा पत्रपत्रिका फागुन २ गतेदेखि मात्र प्रकाशित हुन थाले। नेपाल पत्रकार महासङ्घको सक्रियतामा जिल्ला प्रशासनसँग भएको छलफलपश्चात् साँझ साढे सात बजेभित्र सेन्सरका निम्ति प्रजिअलाई देखाउनु पर्ने सर्तमा पत्रिका छाप्न दिइने भयो।[६२]

## कथित कानुनी प्रावधान

माघ १९ गते शाही घोषणाको लगत्तै श्री ५ महाराजाधिराजको संवाद सचिवालयले संविधानको धारा ११५ को उपधारा (१) बमोजिम नेपाल अधिराज्यभर तत्काल लागू हुने गरी सङ्कटकालीन अवस्थाको आदेश जारी गरिएको जनायो। सोही धाराको उपधारा (८) बमोजिम नेपाल अधिराज्यको संविधान २०४७ को धारा (१२) को उपधारा (२) को खण्ड (क), (ख), र (घ), धारा १३ को उपधारा (१) र धारा १५, १६, १७, २२ र २३ (बन्दी प्रत्यक्षीकरणको उपचार प्राप्त गर्ने हकबाहेक) राजाद्वारा निलम्बन गरिएको जानकारी सचिवालयले विज्ञप्तिमार्फत दियो।

आमसञ्चारका माध्यमसँग प्रत्यक्ष रूपमा जोडिएका निलम्बित धाराहरूमा भएका व्यवस्था यस प्रकार थिए : धारा १२, स्वतन्त्रताको हक, उपधारा (२) को खण्ड (क) विचार र अभिव्यक्तिको स्वतन्त्रता, धारा १३, छापाखाना र पत्रपत्रिकासम्बन्धी हक, उपधारा (१) कुनै समाचार, लेख वा अन्य कुनै पाठ्यसामग्री प्रकाशित गर्न पूर्व प्रतिबन्ध लगाइने छैन। तर, नेपाल अधिराज्यको सार्वभौमसत्ता वा अखण्डता वा विभिन्न जात, जाति वा सम्प्रदायहरूका बीचको सुसम्बन्ध खलल पर्ने वा राजद्रोह, गाली, बेइज्जती वा अदालतको अवहेलना हुने वा अपराध गर्न दुरुत्साहन दिने वा सार्वजनिक शिष्टाचार वा नैतिकताको प्रतिकूल हुने कार्यमा मनासिब प्रतिबन्ध लगाउने गरी कानुन बनाउन रोक लगाएको मानिने छैन।" धारा १६, सूचनाको हक, प्रत्येक नागरिकलाई सार्वजनिक महत्त्वको कुनै पनि विषयको सूचना माग्ने र पाउने हक हुनेछ। तर, यस धारामा लेखिएको कुनै पनि कुराले कानुनबमोजिम गोप्य राख्नु पर्ने सूचनाको जानकारी दिन कसैलाई कर लगाइएको मानिने छैन।"[६३]

---

६२ २०६२ वैशाख १० गते *बुलबुले, सुर्खेत पोष्ट* र *सुसेली* दैनिक तथा *रेडियो भेरी* का सम्पादक एवं स्टेसन म्यानेजरहरूसँगको कुराकानीका आधारमा।

६३ नेपाल अधिराज्यको संविधान, २०४७।

माघ १९ पछि प्रेसलाई कतिसम्म नियन्त्रण गर्न खोजिएको थियो भन्न बुझ्न नेपालगन्जका पत्रपत्रिका प्रकाशकहरूका नाममा जिल्ला प्रशासन कार्यालय बाँकेले २०६१ माघ २५ गते जारी गरेको 'निर्देशिका'[६४] को भाषा पर्याप्त छ। केही उदाहरण :

• सुरक्षाफौजद्वारा गरिएको कारबाहीमा परी माओवादीतर्फ भएको क्षतिबारेमा उल्लेख गर्न सकिने तर भवितव्यमा परी सर्वसाधारणको क्षतिबारे सरकारी प्रवक्ताले दिएको वक्तव्यमा उल्लेख भएको बाहेक अन्य अवस्थामा प्रकाशन नगर्ने।

• कुनै पनि सरकारी निकायबाट भएको अनियमितताबारे राम्रो परीक्षण गरी पाएसम्म सप्रमाण गल्ती, कमजोरी दर्शाउन हुने तर निराधार चरित्र हत्या र राष्ट्रसेवकलाई निरुत्साहित गर्ने उद्देश्यले प्रकाशन गर्न नहुने।

• राजनीतिक एवं त्यससँग सम्बन्धित सङ्घसंस्थाका सूचनाहरू र गतिविधिहरू प्रकाशन नगर्ने तर सामाजिक, धार्मिक, आर्थिक सङ्घसंस्थाका गतिविधि एवं सूचना प्रकाशन गर्न सकिने।

• प्रकाशित पत्रपत्रिकाको अनुगमनका लागि अनिवार्य रूपमा एक प्रति निःशुल्क अनुगमन टोलीलाई उपलब्ध गराउनु पर्ने।

त्यही नेपालगन्जमा पुगी २०६१ फागुन २१ गते वर्तमान सरकारले प्रेसमाथि कुनै पनि खालको नियन्त्रण नगरेको प्रस्ट पार्दै सञ्चारमन्त्री टङ्क ढकालद्वारा आतङ्कवादलाई प्रोत्साहन गर्ने खालका सामग्रीबाहेक सबैखाले विचार प्रवाह गर्ने छुट रहेको जानकारी दिइएको समाचार छापियो।[६५]

श्री ५ को सरकार सूचना तथा सञ्चार मन्त्रालयले माघ २० गते यस्तो सूचना जारी गरी सेन्सरसिपलाई कानुनी जामा पहिर्‍याउन खोज्यो – "श्री ५ को सरकारले छापाखाना र प्रकाशनसम्बन्धी ऐन, २०४८ को दफा १५ को उपदफा (१) ले दिएको अधिकार प्रयोग गरी राष्ट्र र राष्ट्रिय हितलाई ध्यानमा राखी श्री ५ महाराजाधिराज सरकारबाट मिति २०६१ माघ १९ मा बक्स भएको शाही घोषणाको भावना र मर्मविपरीत एवं आतङ्कारी तथा विध्वंशात्मक र आतङ्कवादलाई प्रत्यक्ष वा परोक्ष रूपमा प्रोत्साहन वा सघाउ पुग्न जाने प्रकृतिका अन्तर्वार्ता, लेख, समाचार, सूचना अभिमत वा व्यक्तिगत विचारसमेत प्रकाशन गर्नमा यो सूचना प्रकाशन भएको मितिले ६ महिनासम्म निषेध गरिएको छ। कसैले यो सूचना उल्लङ्घन गरी निषेधित कुराहरू प्रकाशन गरेमा छापाखाना र प्रकाशनसम्बन्धी ऐन, २०४८ को व्यवस्थाबमोजिम कारबाही गरिने बेहोरासमेत यसै सूचनाद्वारा जानकारी गराइएको छ।"[६६]

---

६४ *प्राची सचेतना* द्वैमासिक, पूर्णाङ्क ५४, फागुन २०६१।

६५ *गोरखापत्र*दैनिक २०६१ फागुन २२ गते।

६६ *गोरखापत्र* दैनिक २०६१ फागुन २१ गते।

श्री ५ महाराजाधिराजको संवाद सचिवालयले २०६१ माघ २५ गते एक सूचना प्रकाशित गरी राजाबाट नेपाल अधिराज्यको संविधान २०४७ को धारा ११५ को उपधारा (७) बमोजिम विभिन्न आदेश जारी गरिएको जनायो। ती आदेशहरूमध्ये केही प्रेस स्वतन्त्रतामा प्रत्यक्ष असर पुऱ्याउने खालका थिए। एक आदेशअनुसार, देशमा शान्तिसुरक्षा कायम गर्न खटिएका सुरक्षा निकायहरूको मनोबलमा प्रतिकूल असर पर्ने गरी उनीहरूको काम कारबाहीलाई लिएर प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा सार्वजनिक टीकाटिप्पणी गर्न नपाइने जनाइयो। अर्को एक आदेशअनुसार सङ्कटकालीन अवस्थामा नेपाल अधिराज्यको शान्तिसुरक्षा कायम गर्न खटिएका सुरक्षाकर्मी, सुरक्षा अधिकारी वा तोकिएका अधिकारीले आवश्यक ठानेमा टेलिफोन, रेडियो, फयाक्स, टेलिभिजन, इमेललगायतका विधुतीय सञ्चारका साधनहरूबाट प्रचारप्रसार गर्न गराउन रोक लगाउने, यस्ता साधन र प्रक्रियामा अनुगमन गर्नेजस्ता कार्यहरूसमेत गर्न सक्ने जनाइयो।

उल्लिखित कुराहरूका विपरीत कार्य गर्ने, आदेशको पालना नगर्ने, असहयोग गर्ने व्यक्तिलाई स्थानीय प्रशासनले तुरुन्त नजरबन्दमा राखी कारबाही गर्न गराउन सक्ने कुरा पनि सूचनामा जनाइयो।

२०६१ फागुन १८ गते सरकारले सुरक्षा निकायबाट स्रोतसहितको जानकारी प्राप्त नगरी सुरक्षासम्बन्धी कुनै पनि सामग्री प्रचारप्रसार गर्न सञ्चारमाध्यमलाई निषेध गऱ्यो। सूचना तथा सञ्चार मन्त्रालयले सूचना प्रकाशित गरी आतङ्ककारी तथा विध्वंशात्मक गतिविधिलाई सघाउ पुग्न जाने कुनै पनि सामग्री प्रकाशन वा प्रसारण गरे सजाय दिइने जनाइयो। "आतङ्ककारी तथा विध्वंशात्मक गतिविधि र आतङ्कवादलाई प्रत्यक्ष वा परोक्ष रूपमा दुरुत्साहन वा सघाउ पुग्न जाने प्रकृतिका अन्तर्वार्ता, लेख, समाचार, सूचना, पाठ्यसामग्री, अभिमत वा व्यक्तिगत विचार प्रकाशित वा प्रसारित गरेमा सजाय गरिने" कुरा दोहोऱ्याएर प्रेसमाथिको बन्देज अझ कडा गर्न खोजिएको थियो।

उक्त सूचनामा त्यसअघि नेपाल राजपत्रको माघ २० गतेको सूचनामा पनि सूचना तथा सञ्चार मन्त्रालयको नामबाट छापाखाना र प्रकाशनसम्बन्धी ऐन २०४८ र राष्ट्रिय प्रसारण ऐन २०४९ ले दिएको अधिकार प्रयोग गरी आतङ्ककारी तथा विध्वंशात्मक गतिविधि र आतङ्कवादलाई प्रत्यक्ष वा परोक्ष रूपमा दुरुत्साहन वा सघाउ पुग्न जाने प्रकृतिका अन्तर्वार्ता, लेख, समाचार, सूचना, पाठ्यसामग्री, अभिमत वा व्यक्तिगत विचारसमेत प्रकाशन एवं प्रसारण गर्न निषेध गरिएको समेत जनाइयो।[६७]

एफ.एम.हरूमा सूचना तथा सञ्चार मन्त्रालय श्रव्य दृश्य तथा प्रसारण शाखाका शाखा अधिकृतिका नाममा पठाइएको 'राष्ट्रिय प्रसारण नियमावली, २०५२ को नियम ८ को खण्ड (च)

---

६७ *गोरखापत्र* दैनिक २०६१ फागुन १८गते।

बमोजिमको निर्देशन' मा भनियो – "श्री ५महाराजाधिराजका संवाद सचिवालयको मिति २०६१ माघ १९ को विज्ञप्तिद्वारा लागू भएको सङ्कटकालमा रेडियो स्टेसनहरूले विशुद्ध मनोरञ्जनात्मक कार्यक्रमबाहेक अन्य कुनै पनि प्रकारको समाचार, सूचना, लेख, विचार, अभिव्यक्तिलगायतका कुनै कार्यक्रम प्रसारण नगर्न हुन यो निर्देशन जारी गरिएको छ। कसैले यो निर्देशनविपरीत कुनै पनि कार्यक्रम प्रसारण गरेमा राष्ट्रिय प्रसारण ऐन २०४९ को दफा १७ बमोजिम कारबाही गरिने बेहोरा आदेशअनुसार जानकारी गराइन्छ।"

तर नागरिक प्रशासनका तर्फबाट बन्देज लगाइएको देखाउन खोज्दै जारी गरिएको यस्तो पत्र कैयन एफ.एम.हरूमा धेरै पछि मात्र गयो। रूपन्देहीका एफ.एम.हरूमा फागुन २६ गतेको मितिमा मात्र यस बेहोराको पत्र पठाइयो। यस्तो पत्र पुग्नुभन्दा धेरै अगाडि सैन्य बलकै आधारमा एफ.एम.हरूको समाचार वा समाचारमूलक कार्यक्रम बन्द गराइसकिएको थियो।

पाँचथरमा प्रमुख जिल्ला अधिकारीले माघ २४ गते पत्रकारहरूलाई आफ्नो कार्यालयमा बोलाएर माथिको आदेश नआएसम्म पत्रिका नछाप्न मौखिक आदेश दिए। त्यसपछि फागुन ७ गतेदेखि मात्र स्थानीय स्तरका तीनओटा साप्ताहिकहरू प्रकाशित हुन थाले। नेपाल पत्रकार महासङ्घको स्थानीय शाखाका सभापति लवदेव ढुङ्गानालाई माघ २० गते नै पक्राउ गरी पचास दिन थुनामा राखियो। पाँचथरमा जस्तै इलाम, झापालगायत सबैजसो जिल्लामा मौखिक आदेशमा केही दिन पत्रपत्रिका बन्द गराइए। धनकुटामा दुर्गा अफसेट प्रेसको साँचो १९ गते साँझ नै प्रशासनले खोस्यो र २४ गते फिर्ता दियो। मोरङमा एघार दिनसम्म अखबारहरू निस्किएनन्।[६८]

गुल्मीबाट नयाँ *जनमत, साझा विचार, गुल्मी टाइम्स* र *रेसुङ्गा शिखर सन्देश* साप्ताहिक नियमित प्रकाशन हुँदै आएका थिए। शाही घोषणाको भोलिपल्ट नै त्यहाँका प्रजिअ नेत्रप्रसाद शर्माले पत्रिका छाप्दै आएका दुई प्रेसलाई आफ्नो आदेशपछि मात्र छाप्न निर्देशन दिए। पत्रिकाका सम्पादकहरूलाई, त्यो पनि लिखित तवरले आदेश दिनु पर्नेमा छापाखानावालाहरूलाई मौखिक आदेश दिइनुबाट कानुनी राजको उपहास भएको छर्लङ्ग हुन्छ। प्रकाशनको वातावरण मिलाइदिन पटकपटक प्रजिअ शर्मासँग सम्पादकहरूले आग्रह गर्दा उनले आफूलाई माथिबाट बन्द गर्न आदेश आएको, तर प्रकाशनको स्वीकृति दिन निर्देशन नआएको बताए। तर त्यस्तो माथिको आदेश पनि लिखित रूपमा प्रस्तुत गरिएन।[६९]

---

६८ नेपाल पत्रकार महासङ्घ र दक्षिण एसियाली स्वतन्त्र पत्रकार सङ्गठन साफ्माले संयुक्त रूपमा मुलुकका पाँचै विकास क्षेत्रमा गत माघ १८ गतेको शाही कदमसँगै सङ्कटकालीन स्थितिको घोषणापश्चात् सञ्चार क्षेत्रमा परेको असरका सम्बन्धमा रहेको स्थलगत अनुगमनको प्रारम्भिक प्रतिवेदन, २०६२ वैशाख १६।

६९ अधिकारी, निर्मलमणि, सङ्कटकाल, प्रेस स्वतन्त्रता र न्यायपालिका, *प्राची सचेतना* द्वैमासिक, पूर्णाङ्क ५४, फागुन २०६१

सुदूरपश्चिमको कञ्चनपुरका ६ ओटा समाचार पत्रपत्रिकामध्येको एक *अभियान* दैनिक माघ २१ गते निस्क्यो। तर सेन्सर नगराई छापेको आक्रोश व्यक्त गर्दै स्थानीय प्रशासनले सम्पादकलाई 'निषेधित सामग्री प्रकाशित गरेको' अभियोगमा पक्राउ गऱ्यो। सम्पादक खेम भण्डारीलाई २०६१ फागुन १४ गते प्रकाशन तथा छापाखाना ऐन २०४८ अन्तर्गत पाँच हजार जरिवाना लिइएको जनाउँदै दस दिनको हिरासतपछि रिहा गरियो। फागुन ५ गतेको *अभियान* दैनिक मा छापिएका 'काङ्ग्रेस र एमाले सडकमा ओर्लन तयारी सुरु' र 'नाकाबन्दीका कारण सिङ्गो देशको यातायात ठप्प' शीर्षकका समाचारलाई प्रतिबन्धित भन्दै प्रहरीले सम्पादक भण्डारीविरुद्ध मुद्दा चलाएको थियो।[७०]

## निर्बाध सूचना प्रवाहको नियन्त्रणलाई संस्थागत गर्ने प्रयत्न

माघ १९ पछिका दिनमा राज्यले सूचना प्रवाहमा पूर्णतः नियन्त्रण कायम गर्न खोजेको छ। यसका निम्ति राज्यले शक्तिको प्रयोगबाट राजनीतिक नियन्त्रणको उपायलाई प्रमुख महत्त्व प्रदान गरेको छ। शाही घोषणासँगै सरकारले टेलिफोन, मोबाइल र इन्टरनेट पूरै अवरुद्ध पाऱ्यो र आमसञ्चारमाध्यमहरूमा सेना तैनाथ गरी नियन्त्रण कायम गर्न खोज्यो। टेलिफोन ६ दिनपछि मात्र सुचारु भयो। तर फागुन ७ गतेका दिन फेरि देशव्यापी रूपमा फोन काटियो।[७१]

वैशाखको पहिलो साता दुई सम्पादकहरूलाई बयानका निम्ति पत्र काट्दा पनि नागरिक प्रशासनको निरिहता उजागर भएको थियो –"सुरक्षा व्यवस्था उपसमितिको मिति २०६१ चैत १९ गतेको बैठकबाट सिफारिस भएअनुसार काठमाडौंबाट प्रकाशित बुधबार र हिमाल खबरपत्रिका ले श्री ५ को सरकार सूचना तथा सञ्चार मन्त्रालयको सूचनाविपरीत समाचार र व्यङ्ग्यात्मक कार्टुनचित्र प्रकाशित गरेको भनी आवश्यक कारबाही गर्ने व्यवस्था हुन भनी रक्षा मन्त्रालयको च.नं. ३५४६, मिति २०६१ चैत २३ गतेको पत्रबाट अनुरोध भइआएको हुँदा आदेशानुसार कारबाहीका लागि गृहमन्त्रालयको शान्ति सुरक्षा शाखाले चैत २६ गते जिल्ला प्रशासन कार्यालय काठमाडौंलाई पत्राचार गरेको" जनाउँदै सोही आदेशअनुरूप शुक्रबार सम्पादक सूर्य थापालाई हाजिरीको निम्ति बोलाइएको कुरा अखबारमै प्रकाशित भएको थियो। त्यस क्रममा प्रमुख जिल्ला अधिकारी वामनप्रसाद न्यौपानेसमक्ष २०६२ वैशाख ५ गते सम्पादक थापाले दुई घण्टा लामो बयान दिएका थिए।[७२]

---

७० सम्पादक खेम भण्डारीसँग २०६१ फागुन २९ गते *अभियान* दैनिकको कार्यालय महेन्द्रनगरमा गरिएको कुराकानी।

७१ *Nepal 100 Days of Royal Takeover, Nepal Coalition of Human Rights Defenders*, Secretariat: INSEC, Compact Disc, 2005.

७२ *बुधबार साप्ताहिक,* वर्ष १०, अङ्क २०, २०६२ वैशाख ७ गते।

२०६१ फागुन २८ गते साँझ सम्पादक खेम भण्डारीले आदेशबमोजिम आफ्नो पत्रिकाको डमी प्रमुख जिल्ला अधिकारीकहाँ पुऱ्याए। उनले एउटा समाचार टिप्पणीसहित ६ ओटा समाचार सामग्रीद्वारा मुखपृष्ठ सिँगारेका थिए। तर सेन्सर भएर आउँदा उनले दुईओटा समाचार पूरै काटिएको देखे। ती दुई समाचारका शीर्षकहरू थिए, 'प्रदर्शनकारीलाई नपक्रिन अमेरिकी आग्रह' र 'अमेरिका जान खोजेका दमननाथ एयरपोर्टबाट फर्काइए।' मुखपृष्ठमा एङ्करका रूपमा प्रस्तुत 'सङ्कटकाल खुकुलो हुने प्रस्ट सङ्केत' शीर्षकको समाचार टिप्पणीका दुई अनुच्छेद पनि काटिए।

हिमाल खबरपत्रिका का सम्पादक राजेन्द्र दाहालका अनुसार संयुक्त राष्ट्रसङ्घका महासचिव कोफी अन्नानको टिप्पणीसमेत सेन्सरमा पऱ्यो। "यस्ता कुराहरूलाई कसरी हेर्ने भन्ने विषयमा तिनीहरू साँच्चै अनभिज्ञ थिए," सेनाको मेजर र अन्य दुई सहायकलाई इङ्गित गर्दै दाहाल भन्छन्। तिनीहरू डमीको अध्ययन गर्दै सेन्सर गरिरहेका थिए। माघ १९ पछिको अङ्क सेन्सर गर्न हिमाल खबरपत्रिका को कार्यालयमा सेना ओइरिएका थिए। उनीहरूले छाप्न तयार पारिएको पत्रिकामा निकै फेरबदल गरिदिए। माघ १९ लगत्तैको १-१५ फागुनको हिमालका पन्नाहरूमा सेन्सर गरिएका खाली ठाउँ त्यसै छाडिएका थिए।[७३] *हिमाल*को त्यस अङ्कमा आवरण विश्लेषणअन्तर्गत 'शाही घोषणा र अन्तर्राष्ट्रिय प्रतिक्रिया' शीर्षकमा छापिएको प्रकाशक कनकमणि दीक्षितको लेखमा दसदस ठाउँमा सेन्सर गरी खाली पारिएको छ।

माघ १९ गते पक्राउ परी फागुन २८ गते रिहा भएका पूर्वप्रधानमन्त्री शेरबहादुर देउवाद्वारा त्यही दिन आफ्नै निवासमा आयोजित प्रेस सम्मेलनको समाचारमा समेत रोक लगाइयो। बेलुकी सात बजे कान्तिपुर टेलिभिजन को पहिलो बुलेटिनमा त्यो समाचार प्रसारित भयो। तर त्यसपछि सञ्चार मन्त्रालयका एक अधिकारीले त्यो समाचार पुनः प्रसारण नगर्न अनुरोध गरे। त्यसपछि त्यो समाचार बाँकी बुलेटिनमा प्रसारण गरिएन। सुरुआतमा, माघ १९ पछि पनि कान्तिपुर टेलिभिजन मा दुई दिनसम्म र *कान्तिपुर* दैनिकमा तीन दिनसम्म सेना तैनाथ गराइएको थियो।[७४]

संयुक्त राष्ट्रसङ्घको न्युर्योकस्थित कानुनी मामिलासम्बन्धी कार्यालय र जेनेभास्थित मानव अधिकारसम्बन्धी आयोगले विचार र अभिव्यक्तिको स्वतन्त्रतासम्बन्धी मार्गनिर्देशन र कार्यविधिहरू तय गरेका छन्। ती मार्गनिर्देशन र कार्यविधिमा सञ्चारमाध्यमसँग सम्बन्धित सूचनाको अधिकारको चार प्रकारका उल्लङ्घनलाई उल्लेख गरिएको छ। जसअनुसार सम्पादकीय कार्यालयहरू वा छापाखानाजस्ता भवनहरूमाथि भौतिक आक्रमण, कानुनी, प्रशासकीय र आर्थिक दबाब, घरेलु तथा अन्तर्राष्ट्रिय सूचनाको निर्बाध प्रवाहमा अवरोधजस्ता अवस्थालाई प्रेसमाथिको

---

७३ A Country Silenced Nepal after the Coup, by Daniel Lak, CPJ, April 28, 2005

७४ *कान्तिपुर टेलिभिजन*का समाचार प्रमुख तीर्थ कोइरालासँग वैशाख २० गते गरिएको कुराकानी।

नियन्त्रण दर्शाउने मापदण्ड मानिएको छ।[७५] उल्लिखितमध्ये सबैजसो प्रवृत्ति नेपालमा देखिएका छन्। माघ १९ पछि राज्यले निरङ्कुशतावादी सोच र शैलीका साथ उल्लेखित सबैजसो उपायहरूद्वारा प्रेसमाथि नियन्त्रण कायम गर्न खोजेको छ।

प्रेस काउन्सिल नेपालका अनुसार आजको नेपालमा साढे तीन हजारभन्दा बढी पत्रपत्रिका दर्ता भएका छन्। गएको वर्षको अभिलेखमा देशव्यापी रूपमा तीमध्ये साढे तीन सय पाक्षिक, अर्धसाप्ताहिक, साप्ताहिक र दैनिक अखबार नियमित निस्किरहेका छन्। तर यति व्यापक रूपमा भइरहेको सूचना प्रवाहलाई माघ १९ को शाही घोषणा र त्यसपछिका गतिविधिद्वारा अवरुद्ध पार्न खोजिएको छ। तैपनि सूचनाको निर्वाध प्रवाहका निम्ति यसबीच नेपाली पत्रकारहरूले सकेसम्मको प्रयत्न गरे। साथै, यसबीच राज्यले पनि सूचनाको प्रवाहउपर सञ्चारकर्मीको स्वतन्त्रता कायम रहन नदिन सम्पूर्ण शक्ति खर्च गऱ्यो।

**समग्रमा**

वास्तवमा माघ १९ को शाही घोषणासँगै नेपाली प्रेसमा केवल तीन महिनाको सङ्कटकाल र क्षणिक सेन्सरसिपका रूपमा मात्र लिनु हुँदैन त्यस दिनको घोषणालाई त्यसपछिका दिनमा देखिएको राज्यका संयन्त्रको गतिविधि र सार्वजनिक भएका राज्यका आधिकारिक धारणाका आधारमा विश्लेषण गरिनु पर्दछ। त्यसरी विश्लेषण गर्दा माघ १९ को शाही कदम नेपाली आमसञ्चार प्रणालीमा प्रेसका चार सिद्धान्तमध्येको एक 'पुरानो अधिनायकवादी-अनुदार सिद्धान्त' लागू गर्ने प्रयासका रूपमा लिनु पर्छ। शाही कदमले अघिसारेका अवधारणाको प्राप्तिका निम्ति आगामी दिनमा सरकारले आफ्नो अनुकूल हुने आर्थिक तथा कानुनी वातावरणको सृजना गर्न प्रयत्न गर्ने प्रस्ट देखिन्छ। आर्थिक तथा राजनीतिक नियन्त्रणको उद्देश्यका साथ त्यसैअनुसारका कानुन अध्यादेशमार्फत ल्याउने तयारीले त्यस दिशाको स्पष्ट सङ्केत गरेको छ। शाही कदमसँगसँगै सुरु गरिएको प्रेसमाथिको नियन्त्रणको प्रयत्नलाई संस्थागत गर्ने राज्यको योजना त्यसयताका क्रियाकलापहरूमार्फत सार्वजनिक भइसकेको छ। त्यसैले सरकारले माघ १९ पछिको ६ महिना मात्र होइन सदाका लागि नेपाली प्रेसमाथिको बन्देज कायम गर्ने तयारी गरिरहेको बुझ्न गाह्रो छैन। त्यसैले शाही घोषणा र त्यसपछिका गतिविधिले छयालीस सालपछि नेपाली प्रेसमा व्यावसायिकताभित्रबाट क्रमशः विकसित हुँदै गइरहेको नयाँ मूल्य र मान्यतामा आधारित सिद्धान्तको बाटोमा अवरोध ल्याएको छ। यस कदमले नेपाली प्रेसमाथि अधिनायकवादी सिद्धान्त थोपर्न खोजेको छ र त्यस कदमपछिका गतिविधिबाट राज्यले सूचना प्रवाहमा पूर्णतः नियन्त्रण कायम गर्न खोजेको छ।

---

७५ Practical guidede for Joiurnalist, UNESCO & Reporters Sans Frontieres,1996.

## सन्दर्भसामग्री

Chomsky Noam, *Understanding Power the Indispensable Chomsky*, Vintage, 2003.

Federation of Nepalese Journalists (FNJ), *Nepali Press during State of Emergency*, April 2003.

Harish C. Mehta, *Cambodia Silenced the Press under Six Regimes*, White Lotus, 1997.

Institute for Integreted Development Studies, *Mass Media and Democratization : A Country Study on Nepal*, Study Directors Bhesh Bahadur Thapa and Kulshekhar Sharma, 1996.

Lippman Walter, *Liberty and the News, Transaction Publishers*, USA and UK, 1995.

Moeller Susan D., *Compassion Fatigue How The Media Sell Disease, Famine, War and Death*, Routledge, 1999.

O' Malley and Clive Soley, *Regulating the Press*, Pluto Press, 2000.

Peter Phillips & Project Censored, *Censored 2001*, Seven Stories Press, 2001.

# रिचार्ड वाग्नेरको काल्पनिक प्राची

थियोडर रिकार्डी

यो लेख उन्नाइसौँ शताब्दीका अत्यन्त चर्चित तथा चिरपरिचित जर्मन रचनाकार तथा सङ्गीतकार रिचार्ड वाग्नेर (सन् १८१३-१८८३) को विषयमा आधारित छ। यद्यपि राजनैतिक क्रान्तिकारी र विचारकका रूपमा उनको प्रभावबारे भने थोरैलाई मात्र जानकारी छ। यस लेखले उनको प्राचीप्रतिको अवधारणा र जातीय विचारलाई प्रस्ट्याउनुका साथै उक्त विचारको विकासमा नेपालको भूमिकाबारेमा चर्चा गर्ने छ।

लामो समयअघि कसैको घरमा बेलुकी सम्पन्न भएको पारिवारिक भेलाका केही स्मृतिहरू प्रस्तुत गर्ने जमर्को गर्दै यस लेखको सुरुआत गर्दछु। कुनै पनि तस्बिरहरू उपलब्ध नभएकाले यहाँ प्रस्तुत सामग्रीले बाँकी लेखका लागि मुख्य भूमिकाको काम गर्नु पर्ने हुन्छ।

सन् १८६८ नोभेम्बरको पूर्वार्द्धमा हिउँ परेको रातमा आफूलाई मुस्किलले न्यानो प्रदान गर्ने पुरानो कोटमा ढाकिएर शास्त्रीय तुलनात्मक भाषा विज्ञानका नौजवान विद्यार्थी, फ्रेडरिच नित्छे लैपजिगको 'थिएटर क्याफे' तर्फ लागे जहाँ उनले विश्वविद्यालयका सहपाठी एर्न्ष्ट विन्डिशलाई भेटे। शास्त्रीय इन्डोलोजी[१] का विद्यार्थी विन्डिशले नित्छेलाई लैंपजिग विश्वविद्यालयमा पूर्वीय भाषाहरूका प्राध्यापक, आफ्ना गुरु हर्मान ब्रोकहाउसको सुविधायुक्त प्राज्ञिक घरमा लिएर गए। नित्छे उक्त परिवारकै महत्त्वपूर्ण सदस्य अर्थात् फ्राउ ओटिलि ब्रोकहाउसका भाइ सङ्गीतकार रिचार्ड वाग्नेरलाई भेट्न उल्लासका साथ आएका थिए।

युरोपकै प्रसिद्ध संस्कृतविद् प्राध्यापक ब्रोकहाउसले एकआपसमा उनीहरूको परिचय गराए। त्यो भेट न्यानो रह्यो। छपन्न वर्ष पुगेका वाग्नेर, नित्छेको तेजस्वी ज्ञानबाट मुग्ध भए र आफ्ना कार्यहरूका बारे नित्छेमा रहेको जानकारीबाट मक्ख परे। त्यस साँझ सुरु भएको उनीहरूको मित्रता धेरै समयका लागि रहनु थियो र वाग्नेरको अन्तिम कार्य 'पर्सिफल' को सृजनासँगै टुङ्गिनु थियो। तर सभ्यताको संसारमा त्यस महत्त्वपूर्ण साँझको उल्लेखनीय भेटले भारत, ग्रीस र जर्मनीलाई जोड्यो, परस्परमा बाँध्यो र तुलनात्मक भाषाशास्त्रीय विज्ञानका माध्यमद्वारा चिरपरिचित गरायो।

यो लेख रिचार्ड वाग्नेरका पूर्वीय सिद्धान्तसम्बन्धी विशाल कृतिको एउटा सानो अंश हो। वाग्नेर जर्मन विचारक र रचनाकार हुन्। यस लेखले वाग्नेरका पूर्वीय विचारहरू केही मानिसहरूले सोचे झैं केवल आलङ्कारिक आध्यात्मिक अनौठा कुराहरूको वर्णन मात्र नभई उनका जातीय विचारहरूका रचनात्मक निर्देशिका पनि हुन् भनी प्रस्ट पार्दछ। यस सम्बन्धमा गद्य

---

१ पौराणिक भारतीय पाठ्यसामग्रीको भाषाशास्त्रीय अध्ययन।

लेखहरू र सङ्गीत नाटकहरूका दुवै विधामा एक स्थापित कलाकार हुँदै जाने क्रममा वाग्नेरका विचारले स्पष्टता र मूर्त रूप लिन्छ।

म वाग्नेरका बारेमा जान्ने (वाग्नेरसम्बन्धी जानकारी राख्ने) विद्वान् होइन र त्यसमाथि पनि जर्मन विषयमा त झनै होइन। मेरो आफ्नो विषयगत विशिष्टीकरण ब्रोकहाउस र विन्डिशको झैं इन्डोलोजी हो। तर ब्राह्मणवाद र बुद्ध धर्मप्रति वाग्नेरको लामो र स्थिर चाखहरू हुनु तथा आफ्ना कृतिहरूमा समेत यी विचारहरू जोडिनाले म उनलाई तुलनात्मक शास्त्रीय भाषा विज्ञान र इन्डोलोजी दुवै कोणबाट हेर्न चाहन्छु।

वाग्नेरसम्बन्धी मेरो तर्क र विचारहरू उनको साहित्यको त्यो भागतर्फ लक्षित छ जुन उनी र उनका कार्यहरूका कटु अन्तरविरोधी र आलोचक छन्। म प्रभावित भएका लेखकहरूका प्रमुख तर्कहरूले मेरा तर्कहरूलाई थप बल र समर्थन दिने कुरामा म विश्वस्त छु। यस्ता लेखकहरूमा नित्छे, अडोर्नो र हालसालैका लेखकहरूमध्ये पौल लौरेन्स रोज पर्दछन्।

वाग्नेरप्रतिको मेरो चाख तुलनात्मक हिसाबले हालसालैको हो। यो चाख कोलम्बियामा भएका दुई छलफलपछि अनुभूति भएका अन्यौल र नैराश्यबाट उब्जेको हो जुन एड्वार्ड सैडद्वारा लिइएको डानियल बारेन्बोइमको अन्तर्वार्ता र जोर्ज स्टेनरद्वारा दिइएको भाषणमा आधारित थियो। बारेन्बोइम र स्टेनर दुवैले छुट्टाछुट्टै तरिकाले भए पनि आ-आफ्ना टिप्पणीहरूमा वाग्नेरका विचारहरूलाई कलात्मक कृतिहरूबाट छुटयाउने जमर्को गरेका छन्। बारेन्बोइमको विचारमा वाग्नेरका सङ्गीत नाटकहरूमा यहुदीप्रतिको घृणा रत्तिभर पनि छैन। यसले जातीय विचारसँग त्यस्तो सम्बन्ध राख्दैन। उनका गद्य लेखहरूमा त्यस्ता विचारहरू छुट्टै अभिव्यक्त भएका हुनाले समस्याका रूपमा खडा भएनन् अथवा कमसेकम एउटा सङ्गीतकारका लागि त्यति गम्भीर हुन गएन। स्टेनरले वाग्नेरको सृजनात्मक कलाका साथसाथै यहुदीप्रतिको घृणामा एउटा प्रमुख रहस्यमयी अन्तरविरोध पाए — कसरी वाग्नेरजस्ता महान् सङ्गीतकार र नामुद साहित्यकारले त्यतिविघ्न घृणा पोख्न पुगेका हुन्? 'मेरो यस सम्बन्धमा कुनै उत्तर छैन', स्टेनरले भने। दुवै अवस्थाका प्रश्न र उत्तरहरू मलाई अपर्याप्त लागे। यस्तो प्रकृतिका प्रश्न र उत्तरहरूले एकातिर बारेनबोइमलाई वाग्नेरको बारेमा आफ्ना विचारहरू निश्चिन्त सञ्चालन गर्न बाटो खुला गर्दथ्यो भने अर्कातर्फ स्टेनरको वाग्नेरवादी रहस्यका बारे आफूमा रहेको भयमिश्रित आदरलाई निरन्तरता दिन्थ्यो।

वाग्नेरको जातीय दृष्टिकोणहरूलाई उनको कलात्मक सृजनाहरूबाट अलग्याउन खोज्नेहरूमा बारेनबोइम र स्टेनर एक्ला अवश्य पनि छैनन्। वाग्नेरको सङ्गीतबाट मोहित धेरै मानिसहरू उनका विचारहरूबारे रत्तिभर पनि सोच्न चाहदैनन्। यस प्रसङ्गमा "वाग्नेर केवल एक व्यथा हुन् मेरा" भन्ने नित्छेका चर्चित टिप्पणी यहाँ सम्झना आउँदछ। तर मेरो विचारमा भने उनी हाम्रा अटुट व्यथाहरू हुन्, त्यसैले उनको कारणले हामीमा आइपर्ने कष्टको प्रत्यक्ष सामना

हामीले गर्नु नै उचित हुन्छ। जीवनको अन्तिम घडीमा सोपेनहाउरको आविष्कार तथा गोविनोसँगका भेट र अध्ययनकालको बीचमा वाग्नेर विवादरहित कलाकार एवं विचारक नै छन्। उनका गद्य लेख र सङ्गीत नाटकहरूले विकासोन्मुख राजनैतिक सन्देशहरूको रेकर्ड गर्दछन् जुन बेलाबखत अर्धचेतन अवस्थामा रहेको पाइन्छ। अन्य समयमा आफ्नै सङ्गीत सुन्दा उनी यस कुरालाई स्वीकार गर्दछन्। यस प्रकृतिको राजनैतिक सन्देश उनको काल्पनिक प्राचीको विश्लेषणबाट अझ प्रस्ट हुन्छ।

वाग्नेरको बारेमा एक सङ्गीतकारका रूपमा नभई एउटा विचारकको भूमिकामा म केही साधारण टिप्पणीहरू गर्न चाहन्छु। प्रथमतः उनको बारेमा प्रणालीबद्ध रूपमा नभए पनि दर्शनशास्त्र र साहित्यमा व्यापक अध्ययन गरिन्छ र उनी विविध विषयहरूका सफल लेखक पनि हुन्। उनको सङ्गीतको जादुमा नपरेका केहीले उनलाई मौलिक र महत्त्वपूर्ण विचारकका रूपमा लिने गर्छन्। उनले अघि सार्ने विचारहरू आलोचनात्मक र मौलिक नभई अरूहरूका विचारहरूमा आवश्यक प्रमाणहरू जुटाई पुष्टि गर्ने प्रकृतिका छन्। तुलनात्मक हिसाबले सोपेनहाउर वाग्नेरभन्दा सबल देखिन्छन् किनभने सोपेनहाउर आफ्ना विचारहरूलाई प्रस्ट्याउँथे, गहिराइमा लान्थे तर बदल्दैन थिए। आर्थुर गोविनोको प्रभावका बारेमा धेरै वर्षपछि कुरा गर्दा पनि सोही लागू हुन्छ।

वाग्नेरले आफूलाई आंशिक आध्यात्मावादी चिन्तनतर्फ ढाले, यद्यपि उक्त सोच वितृष्णा फैलाउने निदान विधामा आधारित थियो। यस सोचसँग आवश्यकता भन्ने विचारले सारभूत सम्बन्ध राख्दछ, सबैको भाग्य निर्धारण गर्दै एउटा अन्धो आवश्यकता वा अनिवार्यता मानव र प्राकृतिक संसार हुँदै हिँड्दछ। हरेक व्यक्तिले यस आवश्यकतालाई आत्मसात् गर्नु पर्दछ, यदि अटेर गर्दछ भने आफ्नै व्यक्तिगत जोखिममा ऊ यसो गर्दछ। आवश्यकताका बारे प्रत्यक्ष जानकारी उसले आफ्नो खाँचो, अन्तप्रेरणा र उद्वेगहरूबाट लिन्छ। जैविक संसारमा 'आवश्यकता' रगतले निर्धारण गर्छ र यो रगत नै हो जसले समुदायका मानिसहरूलाई आबद्ध गराउँदछ। यस दृष्टिकोणमा मानवीय कारणहरू गौंण हुन जान्छन् किन भने 'आवश्यकता' ले प्रभाव जमाउने क्रममा मानवीय विचारहरूलाई ध्यान दिँदैन। वाग्नेरले इतिहासप्रति चाख नबढाई मिथकमै डुबेर लेख्ने रुचि लिनुमा सम्भवतः यिनै कारणहरू कारकतत्त्व भएको हुनु पर्दछ। इतिहासमा पाइने असाधारणता र अनिश्चतताहरू वाग्नेरको अन्धो आवश्यकतासम्बन्धी मतहरूसँग मेल खाँदैनन्।

अब यी सबै कुराहरू प्रकाशमा आइसकेको अवस्थामा वाग्नेरको प्राची वा पूर्वीयवाद धारणाहरू के हुन् भनेर किटान गर्न मुस्किल पर्दछ। उनको पूर्ण कृतिहरूमा न 'लाक्मे' छ, न 'माडाम बटरफ्लाई' छ न त 'टुरान्डोट' नै छ। उनको सुरुका गीतिनाटकहरू 'गोत्सी', 'शेक्सपियर' र 'बुल्वर-लिटन' मा आधारित छन् भने सङ्गीतनाटकहरू जर्मन वा जर्मन सामग्रीमा

आधारित छन्। त्यसो भए प्राची कहाँ छ त? उत्तर साधारण र जटिल छ, प्राची जताततै छ र विभिन्न स्वरूपमा आउँदछ।

सरल हिसाबले हेर्ने हो भने वाग्नेरको जीवनी र लेखहरूमा असङ्ख्य प्राचीहरू छन्, सबै काल्पनिक र मौलिक। पहिलो बाइबलमा भएको प्राची, जसलाई उनले यहुदीवादी प्राचीको नामाकरण गर्न सक्थे। यो 'ओल्ड टेस्टामेन्ट'[२] का अनुसारको प्राची हो जहाँ उनको वरिपरि बस्ने यहुदीहरू अर्थात् उनको भाषामा जर्मन संसारमा अवैधानिक तवरले घुसेका पूर्वीयहरूका बारेमा लेखिएको छ। दोस्रोमा मुसलमानी प्राची हो, जुन उनका धेरै सङ्गीतनाटकहरूका लागि नजिकको क्षितिज हो; 'क्रुसेड्स' हरूका प्राची जसका विरुद्ध मध्ययुगी जर्मन योद्धा र नायकहरूले धार्मिक युद्ध लड्दै पवित्र कलशको रखबारी गर्छन्। अन्तमा भारत र इरानका प्राचीहरू छन्, जुन उनका कृतिहरूका लागि टाढाको क्षितिज हुन्। वाग्नेरका अनुसार मानवीय सोचका दुई उच्च स्वरूपहरू ब्राह्मणवाद र बुद्ध धर्मको उत्पत्ति थलो प्राचीहरू हुन्। यसका बाहेक उनले कल्पना गरेको आदर्श समाज र सृष्टिको सुरुआत भएको भूमि पनि यही पछिल्ला प्राची नै हुन्।

वाग्नेरको लागि अर्को प्राची पनि छ जहाँबाट उनी धारणात्मक शब्दकोश सापट लिन्छन्। यो मुख्यतः भारत नै हो, जसका दर्शन र साहित्यसँग उनको राम्रै हेलमेल छ। उक्त धारणाको भाषा संस्कृत छ। संसारलाई उनी दुःख, महापरिनिर्वाण, पापबाट मुक्ति, कर्म, पुनर्जन्मका नियमहरू, पुनःअवतार, अहिंसाका समानर्थी मान्छन्। उल्लिखित शब्दावलीबाहेक विनय, नम्रता, आत्माजस्ता शब्दहरू उनका बोली र लेखहरूमा बरोबर दोहोरिरहन्छन्। यी शब्दहरू उनका नगिचका मण्डलीहरू (कोसिमा, उनकी पत्नी, कार्ल रिट्टर, ह्यान्स भोन बुलौं र अन्य) का विचारहरू र दैनिक बोलीअन्तर्गत पर्दछन्।

उनका अपूर्ण लेखका रूपरेखाहरूमा प्राची वा प्राचीहरूको अन्तिम थलो रहेको पाइन्छ। वाग्नेरले जम्माजम्मी चौध कृतिहरूलाई पूर्णता दिए। उनका अनुसार गीतिनाटकहरूमध्ये सुरुका चार कृतिहरूमा 'दि होख्जैड', 'दि फैएन', 'दि लिबेसभेर्बोट' र 'रेञ्जी' पर्दछन्। त्यस्तै सङ्गीत नाटकहरूमा 'दि फ्लाइङ्ग डचम्यान', 'टान्हाउसर', 'लोहेन्ग्रिन', 'डासरहेन्गोल्ड', 'दि वाल्क्युर', 'सिएगफ्राइड', 'गोटेरडामेरुङ', 'ट्रिस्टान र इजोल्ड', 'दि मेइस्टेरसिङ्गर' पर्दछन् र अन्त्यमा उनको महान् कृतिका रूपमा चिनिएको 'पर्सिफल' लाई उनले विशेष नाम 'बुह्नेव्येइहेउफेस्टस्पाइल' दिएका छन्, जसको अनुवादित रूप 'रङ्गमञ्चलाई पवित्रता प्रदान गर्ने उत्सव नाटक' हुन जान्छ। यिनै कृतिहरूमा यत्रतत्र छरिएका विभिन्न महत्त्वपूर्ण तर अपूर्ण लेखीय रूपरेखाहरू उनका पूर्ण कृतिहरूका लागि दरिलो स्रोत बनेका छन्। यी अपूर्ण लेखीय रूपरेखाहरू उनको गद्य लेखहरूकै अंशअन्तर्गत प्रकाशित भएका छन्। उनका पूर्ण कृतिहरूले उनको जीवनका विविध कालहरूको चित्रण गर्दछन्। मेयरबियर र रोस्सिनीद्वारा नेतृत्त्व गरिएको

२ बाइबलको पहिलो भाग जहाँ यशु प्राचीका घटनाहरूका बारेमा यहुदीका लेखहरू पाइन्छन्।

फ्रान्को-इटालियन स्कुलको नाचघरबाट छुटकारा पाउने उनको प्रयासदेखि लिएर शुद्ध जर्मन सङ्गीतकला र शब्दहरूको सृजना गर्ने अवधिसम्मको। सुरुका कृतिहरूमा उनको प्रेम र घृणामिश्रित भावनाहरू झल्किएका छन्। विश्वास गर्न कठिन छ 'रिङ्ग' र 'पर्सिफल' का लेखकले कसरी 'दि अरेबियन नाइट्स' बाट प्रभावित भएर 'दि ह्याप्पी बियर फ्यामेली' जस्तो गीतिनाटक सोच्न पुगे? अर्को लेखीय रूपरेखा 'दि सारासेन उमन' इटालीका राजा मानफ्रेडका बारेमा लेखिएको छ। प्राचीसम्बन्धी उनका सुरुका वैचारिक विकासका सम्बन्धमा यी लेखीय रूपरेखाहरूले चाखलाग्दो ढाँचाले वर्णन गरे पनि, म हाललाई तिनीहरूका बारे अन्यत्र नै छलफल गर्ने विचारका साथ अगाडि बढ्दछु। अरू दुई कृतिहरू एक 'जिसस अफ नजरेथ' र अर्को 'दि सिगर' अर्थात् 'दि भिक्टोर्स', उनका लागि जीवनभर महत्त्वपूर्ण रहे। मेरो विचारमा उनका कृतिहरू बुझ्न यिनीहरूले अत्यन्त गहन भूमिका खेल्छन्। यो पछिल्लो कृति, 'दि सिगर' अथवा 'दि भिक्टोर्स' एउटा बौद्ध धर्मावलम्बीसम्बन्धी गीतिनाटकका बारे लेखीय रूपरेखा हो, जसका बारेमा म विस्तृत छलफल गर्न चाहन्छु।

वाग्नेरको 'प्राची' उनी आफैद्वारा परिकल्पित मौलिक भएका कारण यो तुलनात्मक भाषाशास्त्रीय अध्ययनसँग पनि सम्बन्धित छ किनभने 'प्राची' उन्नाइसौं शताब्दीको युरोपीय भाषा विज्ञानको मुटुमा अवस्थित छ। वाग्नेर आफैले तुलनात्मक भाषाशास्त्रीय अध्ययनलाई बेकारको ठान्दथे। विलमोवित्जच-मोएल्लेनडोर्फले नित्छेमाथि गरेको आक्रमणको प्रतिवाद गर्दै वाग्नेरले विशेष महत्त्वका साथ तुलनात्मक भाषाशास्त्रीय अध्ययनप्रतिको आफ्नो नकरात्मक धारणाहरू व्यक्त गरेका छन्। तर तुलनात्मक भाषाशास्त्रीय अध्ययनका साहित्यिक उपजलाई भने उनले बारम्बार प्रयोग गरे यसका केही अवधारणाहरूलाई जानेर वा अन्जानमा निःशर्त स्वीकार गर्दै। यस्ता उपजहरूमा ज्याकोब ग्रीमको दियुत्चे मिथोलोजी पर्दछ, जसबाट उनले जर्मन र टिउटोनिक कथावस्तुहरूका लागि धेरै विचारहरू लिए। दियुत्चे मिथोलोजीबाट प्राप्त विचारहरूको आविष्कारलाई उनले आफ्नो आत्मकथाहरूमा उल्लासपूर्वक प्रयोग गरेका छन्। अर्को त्यस्तै उपजमा 'इन्डोलोजी' आफै पर्दछ, जसमा भारतीय लेखहरूका अनुवाद, इतिहास र ब्राह्मणवाद तथा बौद्ध धर्मका विश्लेषणहरू प्रशस्त पाइन्छन्। यहाँ इन्डोलोजीबाट वाग्नेरले धेरै ज्ञान लिए। यस अर्थमा उनले अत्यधिक भारतीय साहित्य मात्र पढेनन् बरु इन्डोलोजीको प्राची धारणाहरूलाई सहर्ष स्वीकार गरे।

तुलनात्मक भाषाशास्त्रीय अध्ययनहरूमा इन्डोलोजीको स्थान विशेष छ किनभने सुरुदेखि नै यसले भारत र युरोपलाई विशेष तरिकाले बाँध्ने काम गर्‍यो। भारतीय-युरोपेली अथवा भारतीय-जर्मन परिकल्पनाहरूको मुख्य स्रोत इन्डोलोजी हो। यद्यपि यस सम्बन्धमा भिन्नभिन्न मतहरू छन्। अठारौं शताब्दीको अन्त्यतिर विकसित धारणाअनुरूप युरोप र भारतका विभिन्न भाषाहरूको शब्दकोश र व्याकरण धेरै मिल्दाजुल्दा भएकाले तिनीहरूलाई एकै भाषा परिवारअन्तर्गत राख्न

सकिन्छ। यो तहमा उक्त परिकल्पना मुस्किलैले विवादास्पद हुन्थ्यो जसले तत्काल भाषागत तथ्यका रूपमा स्वीकृति पायो। उन्नाइसौं शताब्दीको विकासक्रममा उक्त परिकल्पनाले मानिस, उनीहरूको उत्पत्ति, समाज, धर्म र उनीहरूबारेको मिथकले तथ्यगत पुष्टि पायो। तुलनात्मक भाषाशास्त्रीय अध्ययन नजानिँदो तरिकाले लेखहरूमा आधारित मानवशास्त्रमा परिणत भयो।

वाग्नेर आफ्नो कलाकारिता पेसाका विभिन्न समयकालहरूमा तुलनात्मक भाषा शास्त्रीय अध्ययन गर्ने मानवशास्त्रसँग एकदमै आश्रित देखिन्छन्। भाषाशास्त्रीय अध्ययन गर्ने मानवशास्त्र मानव जातिहरूका बारेको ज्ञानलाई सङ्गठनात्मक रूप दिने प्राथमिक साधन हुनका साथसाथै उन्नाइसौं शताब्दीको परिकल्पित समुदायहरूको प्रमुख स्रोत पनि हो। तर यस भित्र थुप्रै विरोधाभासहरू पनि छन्। भाषाशास्त्रीय अध्ययन गर्ने मानवशास्त्रलगायत अन्य भाषाशास्त्रीय अध्ययनहरू इन्लाइटेन्मेन्ट[३] कालमा जन्मिए र पोजिटिभिज्म[४]का साझा विशेषताहरूलाई अङ्गीकार गर्दै आधारभूत राजनैतिक टेन्येट[५]हरूका विरोधभासहरूसँगै हुर्कियो। इन्लाइटेन्मेन्टले मानिसका हक र यसको विश्वव्यापीकरणको घोषणा गऱ्यो भने उदीयमान नौलो भाषाशास्त्रीय अध्ययनले मानव परिवारलाई विश्लेषण गर्ने एक कसीको रूपमा प्रयोग गरेर भाषाअनुसार मानिसहरूको वर्गीकरण गऱ्यो। सन् १८५० सम्ममा विश्वका धेरै भागहरू सानो सङ्ख्यामा रहेका भाषिक परिवारहरूमा वर्गीकृत भइसकेका थिए। यी परिवारहरू मोटामोटी हिसाबले बासिन्दाहरूका रङ्गका आधारमा थप अनौपचारिक श्रेणीगत विभाजनमा मिलाएर राखिएका हुन्थे। यसअन्तर्गत इन्डो-युरोपेली अथवा इन्डो-जर्मन शीर्ष श्रेणीमा राखिए भने कालो वर्णका अफ्रिकी भाषाहरू पुछारमा रहे। इन्डो-युरोपेली भाषाले पछि गएर नयाँ नाम 'आर्य' लिन पुग्यो जसका नामकरण इन्डोलोजिस्ट[६] माक्स मुल्लरले कुनै खास आशयबिना शताब्दीका बीचतिर एक भाषिक शब्दका रूपमा गरेका थिए। 'आर्य' शब्दले भाषाबाहेक अन्य कुरालाई जनाउन सक्ने वा नसक्ने भन्ने सम्बन्धमा तत्काल विवाद उठिहाल्यो। उक्त शब्दद्वारा मानिस वा जातलाई जनाउन गरिएको प्रयोगप्रति मुल्लरले कडा रूपमा विरोध गर्दै तर्कहरू अगाडि सारे।

> म ,एक जातिविशेषज्ञका लागि 'आर्य' जाति, 'आर्य' रगत 'आर्य' आँखा वा कपालका कुरा गर्ने जो कोही उत्तिकै ठूलो पापी हुन्छ त्यत्ति नै एउटा भाषाविद् जसले 'डोलिकोसेफालिक'[७] शब्दकोश र 'ब्राखिसेफालिक'[८] व्याकरणका कुरा गर्दछ।

---

३ १८औं शताव्दीको समयको युरोप, जतिखेर केही विचारकहरू विज्ञान र यसका तर्कसङ्गत आधारहरूका प्रयोगले मानवीय अवस्थाहरू सुधारिन सक्छन् भन्ने मान्यता राख्दथे।

४ अनुभव र प्रमाणित गर्न सकिने वास्तविक तथ्यहरूमा आधारित दर्शनशास्त्र।

५ व्यक्ति वा धार्मिक समुदायद्वारा पछ्याइने सिद्धान्त वा आस्था।

६ पौराणिक भारतीय पाठ्यसामग्रीको भाषाशास्त्रीय अध्ययनसम्वन्धी विद्वान्।

७ ग्रीक भाषामा मानिसको कपाललाई जनाउँदछ।

८ ग्रीक भाषामा मानिसको टाउकोलाई जनाउँदछ।

तर फ्रान्सेली शास्त्रीय ज्ञाता एमिल बर्नोफले सन् १८६५का आफ्नो लेखनमा आर्यका सम्बन्धमा फैलिरहेको जातीय दृष्टिकोणको समर्थन गरे। धेरै पाठकहरूमाझ पुगेको एस्साइ सुर ले भेदामा उनले लेखेः

> हामी वेदमा पुग्छौं। यी ईश्वरका स्तुतिहरूका लेखकले आफूहरूलाई 'आर्य' नाम दिए। यस शब्दले कुनै खास मानिसका वर्ग, सहर वा मानिसलाई नजनाई एक जातिविशेषलाई इङ्गित गर्दछ।

तर्कविहीन, प्रमाणविहीन उक्त पुस्तक, 'जुन कुरा वेदमा छैन' भन्ने अध्यायमा गएर टुङ्गिन्छ।

सन् १८८१ सम्ममा मुल्लर आफै यस्तो सोचको जादुमा परिसकेका थिए। वाग्नेरको मृत्युको एक वर्ष पहिले 'क्रिटिक अफ प्युर रिजन' नामक अनुवादको प्राक्थानमा उनले लेखेका थिएः

> आर्यहरूको सम्पूर्ण इतिहासको सोच र सुस्केराहरूलाई जोड्ने पहिलो द्वार वेद हो भने अन्तिम कान्टको 'क्रिटिक'। वेदमा हाम्रा जातिका सुरुको अवस्था हाम्रै आँखाअगाडि खोल्ने प्रयास गरिएको छ। वेदमा शिशु अवस्था पढ्न सक्छौं भने कान्टको 'क्रिटिक अफ प्युर रिजन' मा आर्यहरूको परिपक्व अवस्था। सामग्रीहरू अहिले पहुँचमा छन् र अङ्ग्रेजी बोल्ने भविष्यका जातिहरूले पनि कान्टको 'क्रिटिक' मा आर्यसम्बन्धी वेद झैं मूल्यवान् अर्को सम्पत्ति पाउँछन्।

नजानिंदो तरिकाले 'इन्डो-जर्मन' भन्ने शब्द र यसको अर्थहरू रूपान्तरित भए। पहिले भाषिक परिवारका भौगोलिक सीमितताहरूलाई सङ्केत गर्न प्रयोग हुने समस्त चिन्ह अब अनुरूप चिन्ह भनेर बुझिन थाल्योः इन्डो-जर्मन। एकै शब्द 'आर्य' ले ठाउँ लिएपछि एक समूहमा राखेर मूल्याङ्कन गर्ने प्रवृत्ति गाढा भएर गयो। भनिन्छ वाग्नेर आफैले कुनै बखत यस्तो टिप्पणी गरेका थिए — पौराणिक जर्मनहरू सम्भवतः छेत्रीहरू थिए जसका मिथकहरू हिमालयमा बस्दाखेरि पहिलोपटक उजागर र स्पष्ट भयो।

जर्मन विचार र प्राचीन भारतका विचारहरूको समानता र त्यसमा पनि विशेष गरी ब्राह्मणवाद र बौद्ध धर्मका मुख्य टेन्येट्सहरू बुझ्नका लागि एउटा पहिचान बिन्दुको निर्धारण गर्न आवाश्यक हुन्छ। यसरी इन्डो-जर्मन शब्दको चयन र एकताका सूत्रमा बाँध्ने तर अस्पष्ट अर्थ दिने 'आर्य' शब्दको उदयसँगसँगै प्रातकालीन भारतीय विचार, जर्मन विचारको पहिलो पथप्रदर्शक भयो। यस अर्थमा भारतीय विचार जर्मन विचारको प्राचीज हो, प्रातकालीन उक्ति हो। हामीलाई यस कथन जत्ति नै बेतुक र अपत्यारिलो लागे पनि वाग्नेरले भने यसलाई निश्चित बाटोको रूपमा लिए। विचारमा समानता, अर्थ बुझाइको आधारमा नभई सुरुका भारतीय विचारकहरू र तिनका सन्ततिहरू, मध्ययुगी र आधुनिक जर्मनहरूको बीच रहेको वास्तविक ऐतिहासिक सम्बन्धहरूमा आधारित छन्। हामीसँग जर्मन विचार विकासको इतिहास ऋग्वेदका ऋषिहरूदेखि लिएर

'म्येस्टर एकहार्ट', 'मार्टिन लुथर', 'कान्ट', 'हेगेल' र 'सोपेनहाउर' सम्म छ। प्रमुख धारणात्मक समानताहरूको सधैँ पहिचान लिनु पर्दछ र पहिचान लिने प्रक्रिया समग्र जातीय पद्दतिको निर्मूलीकरण र दुवै संस्कारहरूको व्यापक विश्लेषनात्मक चिरफारबाट नै गर्न सकिन्छ। यस प्रक्रियाको सर्वमान्यताको खोजीलाई प्राय बुर्जुवा खोजी पनि भनिने गर्दछ। एउटा प्रमुख सामाजिक विभिन्नताहरू हटाउने पक्षपातिमा सोपेनहाउर देखिन्छन् र उनी कान्टको सवालमा बढी प्रस्ट देखा पर्दछन्। उनको 'क्रिटिक अफ प्युर रिजन' ले ब्रिटिस साम्राज्यवाद र ग्रीक दर्शनका समस्याहरूसँग राखे जटिल सम्बन्धहरूलाई इच्छा र विचार गरी दुई भागमा विभाजित गऱ्यो। विपक्षहरूलाई त्यसपछि महापरिनिर्वाण र ब्राह्मणवादी बौद्ध धर्मी संसारका भेदहरूमार्फत अनुरूप पारिन्छ। फेरि पनि, उपनिषद् र बौद्ध ग्रन्थहरू स्वरलोप भई सोपेनहाउरका ओछ्यान नगिचैको मेचमा रहेको औपनेखतहरूमा परिणत भए।

तथ्य बङ्ग्याउने सवालमा हेगेलको भूमिका अझ विषम छ। उनी आफ्ना प्रशंसक र आलोचकहरूमाझ निष्क्रिय व्यक्तिको रूपमा चिनिन्छन्। यसै गरी प्रायः ठट्टामा उडाइने 'अब्सल्यूट'[९] र इतिहासका अति कलङ्कित कालहरू, क्रमशः पूर्वीय, ग्रिको-रोमनी र आधुनिक पर्सियाली वा जर्मनसँग पनि उनी जोडिन्छन्। इतिहासलाई विभिन्न सांस्कृतिक कालहरूमा अध्ययन गर्ने यो पछिल्लो धारणा अर्को भारतीय विचार कर्म र पुनर्जन्महरूसँग सम्बन्धित छ, जसलाई वाग्नेरले 'मेटेमसाइखोसिस' को सङ्ज्ञा दिएका छन्। वाग्नेरका अनुसार मेटेमसाइखोसिस व्यक्तिगत तहमा मात्र शाश्वत नभई इतिहासकै कार्यकारी सिद्धान्त हो। यस अर्थमा कि जर्मन विचार र सभ्यताले इतिहासका विभिन्न कालहरूमा विविध पथप्रदर्शनहरूको रूपमा पुनर्जन्म लिएका छन्। जसमध्ये भारतीय, ग्रिको-रोमनी र अन्त्यमा जर्मन, दुवै मध्ययुगी र आधुनिक तथा यदि सहमत हुनुहुन्छ भने कर्मगत 'औफेगेहोवेन'[१०] लाई पनि लिन सकिन्छ। यसरी इन्डो-जर्मन शब्दलाई अस्थाइ आयाम दिइएको छ जसमा विद्वान्हरूले इतिहासभरि एक साझा सिद्धान्तको पुनर्व्याख्या गरेका छन्, जुन सिद्धान्त शाश्वत मात्र नभई आवाश्यक पनि हुन्छ। यो सीधै वाग्नेरको सोच थियो भन्ने कुरा हेरवेघलाई दिइएको सल्लाहबाट देखिन्छ। हेरवेघ एउटा ठूलो साङ्गीतिक रचनाका लागि उचित विषयको खोजीमा थिए।

हेरवेघ आफूले आर्जन गरेका विचारहरूलाई मूर्तरूप दिनका लागि एउटा महाकाव्यको धेरै प्रतिहरू सृजना गर्न चाहन्थे। जसरी एकचोटि 'नर्क हुँदै तीर्थयात्रा र स्वर्गमा तप' भन्नेजस्तो विषयवस्तु दाँतिले पाएकोमा उनलाई भाग्यले साथ दिएको कुरा हेरवेघले इङ्गित गरेका थिए, मलाई पनि यो कुरा मेटेमसाइखोसिसका ब्राह्मणसम्बन्धी कथनका सवालमा मेल खान्छ भन्ने टिप्पणी गर्न मन लाग्यो। स्मरण रहोस्, प्लेटोका अनुसार माथि उल्लिखित कथन हाम्रो शास्त्रीय

९ कुनै शासकमा सम्पूर्ण शक्तिहरू रहेको शासन प्रणाली।

१० जर्मन भाषामा तेस्रो विश्वसम्वन्धी सोच-विचारहरू।

शिक्षाको दायराभित्र पर्दछ। उनले यसलाई खराब विचारका रूपमा लिएनन् र मैले सोहीअनुसार कविताले लिनु पर्ने स्वरूपको व्याख्या गरिदिने दुःख गरिदिएँ। उनले तीन नाटकका भागहरूका बारे निर्णय गर्नु थियो, जसअन्तर्गत प्रत्येक भागमा तीन तीनओटा गरी जम्मा नौओटा गीतहरू समावेश हुनु थियो। पहिलो भागले नायकलाई उनको जन्मस्थान एसियाली मुलुक देखाउने थियो भने दोस्रोले सोही नायकले ग्रीस र रोममा अवतार लिएको र तेस्रोले भने मध्ययुग र आधुनिक कालहरूमा उनले लिएको अवतारका बारे जानकारी दिनेवाला थियो। यी सब कुराले उनलाई एकदमै खुसी तुल्यायो र निश्चित परिणाममा पुग्न सकिन्छ कि भन्ने सोच उनमा आयो।

वाग्नेरको दिमागमा हुर्केका भारतीय, ग्रीको-रोमनी र जर्मन संस्कृतिबीच पुनर्जन्मका सम्बन्धहरूले प्रश्नहरू उब्जाउँछन्: ग्रीक र जर्मन विचारको बीच के-कस्तो सम्बन्ध छ? के सम्पूर्ण ग्रीक विचार जर्मन विचारको सुरुको रूप हो त? जहाँसम्म मलाई ज्ञान छ, वाग्नेर समानताहरू औँल्याउनमा सन्तुष्ट छन्, यो हेरवेघलाई दिएका सल्लाहमा पनि देखिन्छ। तर वाग्नेरका लागि ग्रीक दर्शनको प्रश्न इसाई धर्मको तुलनामा कम महत्त्वको हुन्छ। इसाई धर्मको पहिलो उद्भव ग्रीक-रोमनी कालमा भएको पाइन्छ र वाग्नेरका अनुसार यहुदीवादसँगको सम्बद्धताका कारण यसको दुरुपयोग भएको छ। सारांशमा भन्ने हो भने क्याथोलिक गिर्जाघरले उक्त सम्बद्धताको जालसाजीलाई निरन्तरता दिनका साथसाथै समर्थन पनि गरेको छ। फ्राञ्ज लिस्ज्टलाई वाग्नेरले लेखेको चिठ्ठीमा उनले इसाई धर्मका मूल उत्पत्तिका बारे यस्तो लेखेका छन्:

> इसाई धर्म एउटा विरोधाभाषपूर्ण वस्तुस्थिति हो भन्ने सवाललाई हामी मात्र वा स्वीकार गर्न सक्छौं किनभने हामी यसलाई सङ्कीर्ण यहुदीवादले यसभित्र ल्याएको विकृतिबाट मात्र बुझ्दछौं। जबकि आधुनिक अनुसन्धानले शुद्ध र चोखो इसाई धर्म श्रद्धायोग्य बौद्ध धर्मको हाँगो हो भन्ने प्रमाणित गर्न सफल भयो। स्मरण रहोस्, अलेक्जान्डरको भारतीय अभियानपश्चात् बौद्ध धर्म अन्य ठाउँहरू हुँदै मेदिटेरेनियन समुद्रको किनारासम्म फैलन पुग्यो।

इसाई धर्मको उत्पत्ति वा अध्यापनको सवालमा यहुदीवादसँग यसको कुनै सम्बन्ध छैन। उत्पत्तिको हिसाबले यो बौद्ध धर्मबाट आएको हो, यशुकालको पथप्रदर्शनमा यसले हेलेनवादी बाटो समातेको छ भने मध्ययुग र आधुनिक कालका पथप्रदर्शनहरूमा जर्मन बाटो अँगालेको छ। यशु यहुदी नभई एक 'आर्य' थिए, जो भ्रान्तिपूर्ण र जथाभाबी तरिकाले पृथक् परम्परासँग आबद्ध गराइएका थिए। यहुदीहरूलाई जरैबाट नाश गर्ने र इसाई धर्मलाई यहुदीवादबाट पूर्ण मुक्त गर्ने प्रक्रियाहरूको प्रारम्भिक औचित्यता यिनै प्राची धारणाहरूमा पाउन सकिन्छ। यशुले वास्तवमा बुद्धको अवतार प्राप्त गरेका हुन्।

भगवान्लाई साक्षी राखेर स्पष्ट भन्ने हो भने जुनसुकै मान्छेले आफूलाई जतिसक्दो सांसरिक दुःख झेल्ने वस्तुका रूपमा लिन चाहँदैनन् ,बरु संसारमाथि रहन चाहन्छन्। अब यशु (बुद्ध) नै हुन्, जसले सांसारिक दुःखबाट मानिसलाई मुक्त पार्छन्।

वाग्नेरले बुद्ध र यशुको पहिचान कुनै पनि समस्याहरूबाट मुक्त रहेको पाए। तर विभिन्न समयहरूको जर्मन रङ्गमञ्चमा भने समस्याहरू भोगेका हुन सक्छन्। उनको लेखीय रूपरेखाहरूमा स्थान पाएको र अप्रिल सन् १८६४का मितिमा लेखिएको एक छोटो लेखले केही समस्याहरूतर्फ इङ्गित गर्दछ जुन बुद्ध र मार्टिन लुथरसँग सम्बन्धित छः

> बुद्ध। लुथर। भारत। उत्तर जर्मनीः क्याथोलिकवाद। (दक्षिण उत्तर)। मध्ययुगहरू। गङ्गाका छेउछाउमा शुद्धता र सन्यासवाद; जर्मनीमा सन्यासी बन्न सक्ने असम्भव्यता। बुद्धले सिकाएका विशुद्ध सन्यासवादलाई लुथर जर्मनीको हावापानीमा अवलम्बन गर्न नसकिने कुरा उदाङ्गो पार्दछन्। यो कुरा यहाँ लागू हुन सक्दैन, जहाँ हामीले मासु खानु पर्दछ, जाँड पिउनु पर्दछ, न्यानो कपडा लगाउनु पर्दछ र राम्रोसँग बस्नु पर्दछ जसले गर्दा यहाँ हामी समझदारीमा जानु पर्ने हुन्छ; यहाँ जर्मनीमा हाम्रो जीवन यति कष्टकर छ कि रक्सी, आइमाई र गीतविना हामी सायदै जिउन सक्छौं वा भगवान्को नै सेवा गर्न सक्छौं।

माथि उल्लिखित कुराहरूका दुवै पाटामा 'जिजस अफ नाजारेथ', 'त्रिस्टान' र 'दि म्येसटेरसिङ्गर' का लेखीय रूपरेखाहरू पाइन्छन्। तर हाम्रो विचारमा सबैभन्दा महत्त्वपूर्ण लेखीय रूपरेखामा बौद्ध धर्मसम्बन्धी वाग्नेरको लेख 'दि सिगर' वा 'दि भिक्टोर्स' पर्दछ। वाग्नेरले 'दि सिगर' को कथा इयुजिन बुर्नोफका 'इन्त्रडक्सन टु हिस्ट्री अफ इन्डियन बुद्धिजम्' मा भेट्टाए। सन् १८५५ मा लेख सुरुआत गरिएको र वाग्नेरको मृत्यु पूर्वसम्म पूर्णता नपाएको 'दि सिगर' ले सम्भवतः उनको कुनै पनि लेखीय रूपरेखाहरूले भन्दा बढी समय लियो। वास्तवमा 'दि म्येसटेरसिङ्गर' लेखिसकेपश्चात् मात्र 'दि सिगर' लाई पूर्ण रूप दिने उनको विचार थियो। 'दि सिगर' को लेखन 'दि वालक्यूर' लाई पूर्णता दिइसकेपछि र 'सिग्फ्रेड' सुरु गर्ने समयका बीच भएको थियो। 'पर्सिफल' लेख्ने क्रम, जसको माध्ययमबाट उनले जर्मन रङ्गमञ्चलाई केही हदसम्म निकास प्रदान गरेका थिए, बीचमै अवरुद्ध भयो र उनले पूर्णता दिन सकेनन्। यसको लेखीय रूपरेखा भने छोटो छः

> शाक्यमुनि। आनन्द। प्रकृति। (उनकी आमा) ब्राह्मण। चेलाहरू, सर्वसाधारण जनता। बुद्ध अन्तिम यात्रामा छन्। चण्डाल कुलकी प्रकृतिले इनारबाट आनन्दलाई पानी दिन्छिन्। प्रकृति आनन्दसँग प्रेममा पर्छिन्। आनन्दको तर्फबाट आश्चर्यता व्यक्त। प्रकृतिकी आमाले आनन्दलाई प्रकृतिसमक्ष ल्याउँछिन्। प्रेमयुद्धको विशाल रूप। आनन्द दुःखित हुन्छन् र उनको आँखामा आँसु आउँछ, जुन शाक्य (बुद्ध) द्वारा उत्पन्न गराइन्छ। प्रकृति बुद्धसमक्ष पुग्छिन्, सहरको मूलद्वारको रूखमुनि आनन्दसँगको मिलनका लागि पुकारा गर्न। बुद्ध उनलाई उक्त मिलनको दुःखकष्ट र चुनौतीहरू सामना गर्न सक्ने हिम्मत उनमा रहेको छ त भनी प्रश्न गर्दछन्। द्विअर्थी संवादलाई प्रकृति आफ्नो अपार प्रेमका माध्ययमबाट बुझ्ने चेष्टा गर्छिन्। उनले आनन्दको शुद्धताको कसमलाई आदर गर्नु पर्ने कुरा थाहा पाएपछि

कहालिँदै र सुँकसुकाउँदै भुइँमा लड्छिन्। आनन्दको ब्राह्मणहरूद्वारा खेदो खनिन्छ। चण्डाल केटीसँग बुद्धको साँठगाँठको भयङ्कर विरोध। बुद्धद्वारा जातसम्बन्धी भावनाको विरोध। उनी प्रकृतिको अघिल्लो अवतारबारे कुरा गर्छन्; अघिल्लो जन्ममा प्रकृति एक अहंकारी ब्राह्मणकी छोरी थिइन्; चण्डाल राजाले आफ्नो पहिलो जुनीमा ब्राह्मणको अस्तित्वलाई सम्झँदै आफ्ना छोराका लागि ब्राह्मणकी छोरी प्रकृतिको हात मागेका थिए। यी चण्डाल राजाका छोराले प्रकृतिप्रति प्रगाढ प्रेम सँगालेका थिए। अहं र घमन्डले प्रचुर ती केटीले उक्त प्रस्तावलाई ठाडै अस्वीकार गर्दै विचरो राजकुमारको खिसी उडाएकी थिइन्। यसैको उनले चण्डाल कुलमा पुनर्जन्म लिएर आशाविहीन प्रेमका पीडाहरू भोग्दै प्रायश्चित्त गर्नु परिरहेको थियो। प्रकृति बुद्धका अन्तिम प्रश्नको उत्तर हँसिलो मुद्रामा दिन्छन्। आनन्द उनलाई बहिनीका रूपमा स्वागत गर्दछन्। बुद्धका अन्तिम प्रवचनहरू। सबै जना उनको प्रभावबाट प्रभावित हुन्छन्। बुद्ध पुण्य भूमितर्फ लाग्छन्।

पर्सिफलतर्फ अगाडि बढ्ने क्रममा दुःख, सन्यासवाद र शुद्धताका विचारहरू वाग्नेरका भावनाहरूसँग धेरै नै साझा देखिन्छन्। उनी आफ्ना लेखीय रूपरेखाहरूका चरित्रहरूमा आफ्नो ध्यान केन्द्रित गर्ने क्रममा आफूलाई 'आनन्द' र माथिल्डे वेसेनडोन्स्कलाई 'प्रकृति' र पछि 'सावित्री' भनेर पुनः नामाकरण गर्दछन्। उनको सोचाइमा बुद्ध र यशुबीच पुनर्जन्मका सम्बन्धहरूका अनुसार आनन्द र प्रकृति यशु र म्यारी माग्डालिन भएर चिनिन्छन्। यी पात्रहरू पुनर्जन्मका तेस्रो जोडी, पर्सिफल र कुन्ड्रीका लागि अपरिहार्य पुर्खाहरूको रूपमा पछि उभिन्छन्।

अर्नेस्ट न्यूम्यानका भनाइअनुसार 'सिगफ्राइड' मा पहिले 'दि सिगर' का लागि निर्मित एउटा सार प्रयोग गरिए पनि वाग्नेर लेखीय रूपरेखा 'दि सिगर' भन्दा पर जाँदैनन्। सन् १८८१ जनवरीसम्म आफ्नो मृत्यु प्राचीबारे सोचमग्न थिए वाग्नेर। उनकी श्रीमती, कोसिमाले आफ्नो एक दैनिकीमा यस्तो लेखिकी थिइन्:

जनवरी ६: अझ ओछ्यानमै हुँदा वाग्नेर भन्छन्, "मलाई राम्रो हेरविचार गरी गास र कपासको राम्रो बन्दोवस्त गरेको खण्डमा म अझै 'दि सिगर' लाई निरन्तरता दिन सक्छु।" मेरो प्रमुख अप्ठ्याराहरू भनेको स्थानीयता र वोलिचालीको भाषा नै हो। इसाई धर्म सरल छ तर बौद्ध धर्ममा शिक्षासम्बन्धी धेरै सामग्रीहरू समाविष्ट भएको कारण यो बुझनका लागि कटीन छ। दुवै 'पर्सिफल' र 'दि सिगर' मा आइमाईको पाप मोक्षसम्बन्धी प्रशनहरूलाई सम्बोधन गरिएको छ। 'पर्सिफल' को प्रस्तुति राम्रै गरिए पनि यसको तेस्रो भागले पार्न सक्ने असरहरू यसै लेखाजोखा गर्न सकिँदैन। वाग्नेरका भनाइहरूलाई उद्धृत गर्दै कोसिमा लेख्छिन्- "गोविनो भन्छन् जर्मनहरू प्रकृतिले खेल्ने तासका अन्तिम पत्ती थिए, यसै गरी पर्सिफल मेरो तासको अन्तिम पत्तो हो।"

पर्सिफल वास्तवमै उनको अन्तिम र शक्तिशाली तास थियो। 'दि सिगर' लाई श्रेय दिने क्रममा प्रायः भन्ने गरिन्छ, "सन्यासवाद र शुद्धता प्राप्तिका माध्ययमद्वारा लिइने स्वयं-अनुभूतिका सारहरू पर्सिफलमा केन्द्रित हुन्छन्।" वाग्नेर आफैले पत्रबाट प्राप्त 'दि सिगर' को बारेमा एक

प्रश्नको उत्तरमा भनेका थिए, समुदायको बारेमा उनले भन्न खोजेका सम्पूर्ण कुराहरू 'पर्सिफल' मै भनिसकेकाले 'दि सिगर' लाई पूर्णता दिने छैनन्।

वास्तवमा 'दि सिगर' को अपूर्णतामै यसको महत्त्व रहेको पाइन्छ, किनभने कुनै पलहरूमा उनले यो पनि महसुस गरेको हुनु पर्दछ कि 'दि सिगर' ले दिन खोजेको सन्देश 'पर्सिफल' सँग मिल्दोजुल्दो मात्र नभई पुनर्जन्मका सम्बन्धहरूमार्फत आर्य प्राचीलाई रणनीतिक सुरुआतमा राखेर इसाई धर्मलाई यहुदीवादबाट छुट्याउन सफल भए। गामुरेटको छोराको रूपमा इरानमा जन्म लिएका पर्सिफल 'कुन्द्री' का चरित्र पनि हुन्, जो कर्मगत हिसाबले म्यारी माग्डालिन र चण्डाल कुलकी आइमाई प्रकृति तथा पर्सिफल' का बोक्सी पात्र पनि हुन्। 'पर्सिफल' को दोस्रो भागमा शुद्ध आर्य कुलको स्थापनाका खातिर र धार्मिक कलशमा राखिएको यशुको रगतलाई एउटा यहुदीको रगतबाट आर्यको रगतमा रूपान्तर गर्नका निमित्त यशु र बुद्धको प्रलोभनलाई पुनः बिउँताइन्छ। यस सम्बन्धमा 'दि सिगर' नभई 'पर्सिफल' लाई कर्मगत आवश्यकताका कारण लेखिएको थियो। यस कर्मले आर्य संस्कृतिको अघिल्लो रङ्गमञ्चलाई दोहोऱ्यार प्रस्तुति गर्नको निमित्त माग गरेको नभई जर्मनमा रूपान्तरित सबैभन्दा पछिल्लो रङ्गमञ्चलाई वैधानिकता प्रदान गरेको थियो। यो आवश्यकताद्वारा निर्देशित हुने रूपान्तरोनमुख कार्यपद्दतिले वाग्नेरलाई जर्मन भएर लेख्ने निर्देशन दियो। फलस्वरूप दुई हजार वर्षसम्म यहुदीवादी विसङ्गतिहरूमा रुमल्लिरहेको इसाई धर्मलाई परिष्कृत र शुद्ध पार्ने काम भयो जुन पर्सिफलको प्रकाशनपछि मात्र सम्भव भएको थियो। यद्यपि 'पर्सिफल' नामले नै गलत अवधारणा प्रदान गर्दछ। यस कुरालाई वाग्नेर स्वीकार गर्छन् अर्थात् साधारण आर्य र जर्मन अवतारलाई अर्को शब्दमा भन्नुपर्दा 'शुद्ध मूर्ख' भनेर चिनाइन्छ।

कसरी यस प्रकारको शुद्धता र परिष्कार पद्दतिलाई पढ्न सकिन्छ?

मैले प्रस्तुत गर्ने यी तीनै सन्दर्भहरूमा शरीरभन्दा बढी आत्माको कुरा आउँछ। आनन्द—प्रकृति, यशु—म्यारी माग्डालिन, पर्सिफल—कुन्ड्रीका सन्दर्भहरूमा हामी शुद्ध आर्यहरूले गैरआर्य नारीहरूको आकर्षणको प्रतिवाद गरेको पाउँछौं। जब आनन्द, यशु र पर्सिफल आकर्षणलाई पूर्ण रूपमा बेवास्ता गर्दै सन्यासी बन्छन् तब आइमाईहरू पनि भोगविलासका हिसाबबाट सन्यास लिँदै समुदायका परिष्कृत सदस्यहरू बन्छन्। यस पठनमा मायाको घुम्टो मायाले नै उघारेको छ। मिथ्या-गाम्भिर्यताले भरिएको दुःख र सन्यासवाद मुख्य हाबी रहेको विसङ्गतिपूर्ण बौद्ध धर्मलाई पछाडि छोडेर हेर्ने हो भने वाग्नेरको बालककालदेखि हुर्केको जातीय भावनामा आधारित बौद्धिक हिसाबले सोपेनहाउर र गोबिनोद्वारा उनीमा विकसित गराइएको जातीय भावनामा यिनै कुराहरू भेटिन्छन्। 'टानहाउसर' देखि 'पर्सिफल' सम्म हामीले लोग्नेमान्छेको कामवासनाका लामा सङ्घर्षगाथाहरू भेट्दै आएका छौं। तर यहाँ वाग्नेरको जातीय शुद्धताप्रतिको जोडदार लगाव नै प्रमुख चिन्ताको विषय रहेको छ न कि आत्मिक शुद्धताको कुरा। उनले

'ट्रिष्टान' मा यौन प्रेमको प्रशंसा गरे तर पछि भने आफैले उक्त लेखलाई 'अर्ध-जाति' भन्ने सङ्ज्ञा दिए। 'रिङ्ग' मा 'सिग्फ्रिड' को जातीय शुद्धताको रक्षाको खातिर हाडनाताभित्रको जघन्य अपराधको पक्षमा पनि वकालत गरेका छन्। जीवनको अन्त्यतिर 'सिग्फ्रिड' को अन्तिम भाग पियानोमा बजेको सुन्दा उनले भने, "यो गोविनोको सङ्गीत हो, यो जातीय सङ्गीत हो।"

पर्सिफलमा वाग्नेरको जीवनका तीन प्रश्नका उत्तरहरू पाइन्छन्। जर्मन के हो? इसाई को हुन्? कला के हो? माथिका प्रश्नका उत्तरहरू जटिल तवरले एकअर्कासँग बाँधिएका छन् किनभने पर्सिफलमा क्रान्तिकारी र राजनैतिक दुवै लक्ष्यहरू कलासँगै आउँछन्। यस सन्दर्भमा पर्सिफललाई एक यस्तो शास्त्रीय विधि मान्न सकिन्छ, जसका माध्ययमबाट जर्मन समुदायको शुद्धताको व्याख्या गरिएको थियो। यसबाहेक इसाई धर्मको पुनर्व्याख्या गर्नमा पनि पर्सिफलको प्रयोग भएको थियो।

तुलनात्मक हिसाबले अर्को वर्णनात्मक छोटो कथामा युद्धका आकस्मिकताहरू, उपनिवेशवाद र साम्राज्यवाद अनि भारतीय उपमहादेशको औपनिवेशवादको इतिहासका विशेषताहरूसँग जोडिएको छ। यस कथामा मुख्यतः प्रश्नहरू, प्रतिस्पर्धाका बिन्दुलगायतका कुराहरू समावेश गरिएका छन्।

वाग्नेरको जीवनको एक खण्डबाट यो कथा सुरु गर्दछु। मई २२, १८७३ अर्थात् उनको ६०औं जन्मदिन। कोसिमा र बच्चाहरूले उनका लागि आश्चर्यमय जन्मदिवसीय भोजको आयोजना गरेका थिए। सो दिनका घटनावलीहरूलाई कोसिमाले आफ्नो दैनिकी यसरी लेखकी छिन्:

> कुनै खास योजनाका बारेमा थोरै पनि शङ्का नगरीकन रिचार्ड पाहुनाहरूलाई स्वागत गर्दछन्। दिउँसोको खानाको समयमा शुभकामनाहरू बाँडिन्छन्। म प्रश्न गर्छु, 'दीर्घ जीवन होस्, कसको डानियल्ला?' हाम्रा सबभन्दा इमान्दार अभिभावकको हातमा गिलास लिएर उठ्दै उनी जवाफ दिन्छिन्। 'लामो आयु रहोस्, कसको ब्लान्डिन?' 'हाम्रा अत्यन्त प्रिय मित्रको', जवाफ दिन्छिन्। 'दीर्घायु होस्, कसको ईजोल्ड?' 'हाम्रा अत्यन्त दयावान् पिताको', ईजोल्ड भन्छिन्। 'लामो आयु रहोस्, कसको फिडी?', म पुनः प्रश्न दोहोऱ्याउँछु। 'मेरो बाबाको', उनी भन्छिन्। यत्तिखेर नै सैनिक साङ्गीतिक ब्यान्डले 'लोहेनग्रीन' को तेस्रो भागको परिचयात्मक धुन बजाउँछ। हाम्रा आँखाहरू बलिन्द्र आँसुका धाराहरूले पुरिन्छन्। बिहान बच्चाहरूले सोह्रौं शताब्दीको एक कविता पाठ गरे, त्यसपछि डानियल्लाले राफायलका चित्रहरू देखाइन्, जुन रिचार्डले एकपटक चित्रकार हब्नरका घरमा देखेका र प्रशंसा पनि गरेका थिए। यसै गरी ब्लान्डिनले बुर्नोफको 'इन्ट्रडक्सन टु हिस्ट्री अफ इन्डियन बुद्धिजम' र दुई साना केटीहरूले रिचार्डका प्राची पुस्तकालयबाट 'ले रोमन डे डौंज' का अंशहरू प्रस्तुत गरे। त्यस दिन बिहान एउटा अचम्मको कुरा भयो - रिचार्डले गएराति किताब बाँध्नेका बारे सपना देखेका थिए। उनले किताब बाँध्ने मान्छेलाई सुनौलो रङमा नभई हल्का पृष्ठभूमिको कालो रङमा शीर्षकहरू छापिए राम्रो देखिने कुरा भनेका थिए। अचम्मको कुरा त के भयो भने

जब मैले बुर्नोफको पुस्तक बाँध्न पठाएँ, लेखकको नाम र पुस्तक लेखिएको मिति कालोमै लेखाउने कुरा मेरो दिमागमा थियो। यो सानो सन्जोगले हामीलाई धेरै खुसी तुल्यायो।

हाम्रो ध्यान निश्चय पनि बुर्नोफको पुस्तकतर्फ जान्छ, जुन अहिले छालामा बाँधिएको छ र कालो रङमा नै लेखिएको छ। वाग्नेरले देखेको सपना र उनकी श्रीमतीले लिएको निर्णयहरूले गर्दा बुर्नोफको पुस्तक झन् मूल्यवान् हुन गयो।

यो कस्तो पुस्तक हो? यस प्रश्नले हामीलाई एउटा अन्तहिन लाग्ने साना समूहमा आबद्ध पुराना चासोहरूतर्फ लान्छ। हामी ख्याल गर्न सक्छौं कि वाग्नेर र उनकी पत्नी कोसिमाले बारम्बार बुर्नोफको उक्त पुस्तकलाई 'इन्ट्रोडक्सन टु इन्डियन हिस्ट्री अफ बुद्धिजम' भनेर नामाकरण गर्दछन्। तर पूर्ण शीर्षकमा अझै एउटा शब्द छ, जुन सधैं लुकेको हुन्छ, त्यो शब्द हो 'इन्डियन'। यस प्रश्नले हामीलाई थप जटिलतातर्फ डोऱ्याउँछ। बुर्नोफ, स्वयंले आफ्नो कार्यको चिनारीमा एउटा कुरा के प्रस्ट पार्छन् भने उनको महान् कार्यका सम्पूर्ण सामग्रीहरू भारतबाट नभई नेपालबाट आएका हुन् । जम्माजम्मी ८८ पाण्डुलिपिहरू, जुन प्रायः कागजी र केही पुराना ताडका पातमा लेखिएका छन्। यसरी अब छलफलका क्रममा हामी बुद्ध धर्मका प्रकारहरूमा दुई शब्दहरूको मिश्रण पाउँदछौं इण्डियन र नेपाली। के यो भेदले फरक पार्छ? के उत्पत्ति स्थलले,बौद्ध धर्मको प्रकृतिमा असर पार्छ? मूलतः सबै पाण्डुलिपिहरू कागजी भएका हुनाले तुलनात्मक हिसाबले हालसालैका हुन् र पन्ध्रौं शताब्दीभन्दा पुराना अवश्य होइनन्। केही अत्यन्त दुर्लभ मूल स्रोतका समकालीन प्रतिलिपिहरू पनि छन्। के ती प्राचीन वस्तुहरू हालसालैका रेकर्ड हुन् त? यस सम्बन्धमा हाम्रो उत्तर कस्तो हुन्छ?

प्रायः सबै पाण्डुलिपिहरूको लेखीय भाषा संस्कृत नै पाइन्छ। केही अनुवाद र टिप्पणीहरू छाडेर हेर्ने हो भने नेपाल उपत्यकाको स्थानीय भाषा नेवारीमा पाइन्छन्। तर संस्कृत कठिन र कतिपय ठाउँहरूमा अपारदर्शी छ। यी प्रायः सबै लेखोटहरू एक जना नेपाली अर्थात् एक नेवार पुरोहितमार्फत हात पारिएको छ, जसलाई बुर्नोफ एक नेपाली बौद्ध धर्मावलम्बी भनेर वर्णन गर्छन्। यी नाम नखुलाइएका नेपाली बौद्ध धर्मावलम्बी को हुन्? उनी कस्ता प्रकारका नेपाली पुरोहित हुन्? के यसले केही फरक पार्छ?

यिनै पाण्डुलिपिहरूको अध्ययन, विश्लेषण र प्रस्तुतिमा बुर्नोफले आफ्नो जीवनको एक दशक बिताएका छन्। कमसेकम भाषाशास्त्रीहरूबीच फ्रान्सकै एक महान् शास्त्रीयवादीको रूपमा प्रशस्त प्रसिद्धि कमाउन सफल जीन बुर्नोफका छोरा र 'टासिटस् गेर्मानिया' का सम्पादकको हैसियतले उनी चिरपरिचित छन्। उनका भान्जा एमिल वैदिक भारतीयहरूलाई आर्य जातिको रूपमा व्याख्या गर्ने पहिलो व्याख्याकर्ताका रूपमा चिनिन्छन्। बुर्नोफलगायत उनका असल मित्र हर्मन ब्रोकहाउस लन्डनमा अङ्ग्रेजी संस्कृतविद् एच एच विल्सनका विद्यार्थीहरू थिए। बुर्नोफले यस बौद्ध धर्मसम्बन्धी काममा हात हाल्ने समयमा पर्सेपोलिसमा पर्सियन आलेखहरूको अर्थ अनुवाद

गरेर चर्चित भइसकेका थिए। त्यसै गरी 'इन्सटिच्युट डेस इन्सक्रिप्सन्स' र 'कलेज डे फ्रान्स' का क्रमशः 'स्याम्पोलिओं' र 'चेजी' का उत्तराधिकारीको पद सम्हालेका थिए। उनका दुई विद्यार्थीहरूमा माक्स मुल्लर नामका जर्मन युवा र फ्रान्सेली अर्नेस्ट रेनान पर्दछन्।

बुर्नोफ अन्य कामहरूलाई छाडेर बौद्ध धर्मसम्बन्धी यस काममा हात हाल्छन् जसअन्तर्गत ऋग्वेदकै सम्पादन पनि पर्दछ। यस कार्यका लागि उनी मुल्लरको सहयोग माग्छन्। नेपाली पाण्डुलिपिहरूको एकमुष्ठ सङ्ग्रहित रूप पाउन मुस्किल छ। यति मात्र नभई तिनीहरूको संसोधन पनि अस्तव्यस्त र हेलचेक्र्याइँका साथ राखिएका छन्। यी पाण्डुलिपिहरूको निरीक्षणमा बुर्नोफ कडा मिहिनेत गर्छन्। बेलाबखत यी पाण्डुलिपिहरूलाई कमिला र अन्य कीराहरूबाट जोगाउन छर्किएका पहेँलो धूलोद्वारा उनका औंलाहरू पोलिन्छन् पनि।

पाण्डुलिपिहरूका थाकमा 'दिव्यावदाना' पर्दछ, जहाँ बुद्धका विविध पुनर्जन्महरूका बारेमा लेखिएको छ। एक यस्तै जन्म कहानी अर्थात् शार्दुलकर्णावदनाबाट बुर्नोफले आनन्द र प्रकृतिको कथा लिन्छन्, केही भागलाई जस्ताको तस्तै उतार्छन् भने केही भागलाई अनुवाद गर्छन्। इसाई धर्मको उत्पत्तिका बारे पुनर्व्याख्या गरिएको पर्सिफलमा यिनै कुराहरू समाविष्ट छन्।

बुर्नोफ सन् १८४४ मा आफ्नो महान् कृति प्रकाशन गर्छन्। पाण्डुलिपिहरूका लागि उनी एक मानिसप्रति ऋणी छन्, जसले सम्पूर्ण पाण्डुलिपिहरूलाई बटुलेर फ्रान्स पठाए। ब्राइन हड्सन नामका यी व्यक्ति पूर्वीयहरूमाझ पूर्वीयविद् ,पूर्वीय अनुसन्धानकर्ता र सहजकर्ताका रूपमा परिचित छन् । बुर्नोफ फ्रान्सेली सरकारलाई 'लेजियन अफ अनर' उपाधिका लागि हड्सनको नाम सिफारिस गर्दछन्। फ्रान्सेली सरकार बुर्नोफको सिफारिसमाथि काम गर्न अलि ढिला गर्छ र यसले बुर्नोफलाई अधीर बनाउँदछ। फ्रान्सेली सरकारद्वारा महाशय हड्सन को हुन् भनी पत्ता लगाउन नसकी संयुक्त राज्य अमेरिकामा कुनै बखत कन्सुल जेनेरलका रूपमा सेवा पुऱ्याएका व्यक्ति हुन् भन्ने निर्क्योलको जानकारी पाउँदा बुर्नोफ लज्जित हुन्छन्। अन्तिममा मात्र उनी आफ्नो मान्छेको उपाधि जोगाउन सफल हुन्छन्।

एउटा प्रश्न अनिवार्य उठ्छ — हड्सन को हुन्? र उनी कसरी काठमाडौं पुगे? महाशय हड्सन नेपालमा रहने एक बेलायती नागरिक हुन्। नेपालमा उनको उपस्थितिको कारण अङ्ग्रेज र नेपालीहरूका बीच भएको युद्धको प्रत्यक्ष परिणाम नै देखिन्छ अर्थात् इस्ट इन्डिया कम्पनीको नेपाली सैनिकहरूमाथिको विजय र त्यसपश्चात् गरिएको सन् १८१४ को सुगौली सन्धिको हस्ताक्षर। सो सन्धिमा लेखिएको कूटनीतिक भाषाको पछाडि कम्पनीको आदेश यस्तो छ— हाम्रो मान्छेलाई स्थाई तवरमा तपाईंहरूको भूमिमा रहन स्वीकृति प्रदान गरिनु पर्दछ। नेपालीहरू सन्धिको सर्तहरूलाई मन नपराई-नपराई पनि चुपचाप स्वीकार गर्दछन्। उनीहरूका लागि बेलायतीहरू फिरङ्गी ब्वाँसाहरू अर्थात् अर्को शब्दमा 'फरेन वाइल्ड डग्स' हुन् र पवित्र

उपत्यकामा तिनीहरूमध्ये एक जनाको स्थाइ उपस्थिति भनेको उपत्यकाका कट्टर हिन्दू शासकहरूका लागि अभिशाप नै हुन जान्छ।

हड्सन कुनै विद्वान् होइनन्। उन्नाइसौं शताब्दीको पहिलो दशकमा इस्ट इन्डिया कम्पनीका कामदारका रूपमा आफ्नो भाग्य खोज्ने निर्णय गर्ने थुप्रैमध्ये एक अङ्ग्रेज युवामा हड्सन पर्दछन्। कलकत्तामा आइपुग्दा नपुग्दै उनी बीस वर्षको हाराहारीमा थिए । लगभग कलकत्ता आइपुग्नेबित्तिकै उनी बिरामी परे र आल्मोडा पठाइए, जहाँ उनी निको पनि भए। उनको संवेदनशील स्वास्थ्य स्थितिलाई मध्यनजर राखेर कम्पनीले उनलाई पहाडी भेकमा रहनु पर्ने निर्णय गऱ्यो। सन् १८२१ मा उनी काठमाडौं आइपुगे र सन् १८४३ सम्म त्यहीं रहे। उनले धेरैजसो समय नेपालका लागि इस्ट इन्डिया कम्पनीको आधिकारिक प्रतिनिधि भएर काम गरे।

इस्ट इन्डिया कम्पनी र नेपाल सरकारबीच अत्यन्त न्यून व्यापारिक परिवहनहरू हुने भएकाले नेपालमा हड्सनको खासै काम थिएन भन्दा पनि हुन्छ। देशभर आफ्नो इच्छाअनुरूप घुमफिर गर्न उनी पाउँदैनन् थिए। उनलाई उपत्यकामै सीमित गरिएको थियो। दुई सय वर्गमाइलको सानो जग्गा तर शताब्दीऔं देखिका सृजनाहरूले भरपुर ठाउँमा उनी बस्थे। समय खेर नफाली बिहानका समयहरू उनी बौद्धिक अनुसन्धानहरूमा लगाउँथे। अपरिचित नेपाल अब परिचित हुनु पर्दछ, यसका वन्यजन्तुहरू, वनस्पतिहरू, भूगोल, व्यापार, भाषा, धर्म, जातजस्ता विविध विषयमा उनका कलमबाट लेखका बाढी युरोप र बेलायतका बौद्धिक जर्नलहरूमा छापिन्थे। उनका अनुसन्धानहरू भाषाको पर्याप्त ज्ञान नभएको र अरू कुनै दोस्रो मानिसमा भर पर्नु नै पर्ने एक सिकारु अनुसन्धानकर्ताका झैं छन्। तर उनी अटुट रूपमा उद्देश्यमूलक र वैज्ञानिक ढङ्गले लेख्थे।

कुनै बिन्दुमा आएर उनी के महसुस गर्छन् भने शासकहरूको हिन्दू धर्मप्रतिको निष्ठाका बाबजुद, उनी यस्तो देशमा छन् जहाँ धेरै बौद्ध धर्मावलम्बीहरू छन्। बौद्ध धर्म र त्यसमा पनि विशेष गरी बौद्ध धर्मावलम्बीसम्बन्धी लेखहरू उनका धेरै अनुसन्धानहरूका केन्द्रबिन्दु नै भएका छन्। उपत्यकाका ठूला र साना सहरका पुस्तकालयहरू पाण्डुलिपिहरूले खचाखच भरिएका हुन्छन् र हड्सन जानकारीहरू मात्र बटुल्नतर्फ नलागी पुस्तकहरू पनि भेला पार्नतर्फ लाग्छन्। यसै क्रममा उनी एक वृद्ध बुद्ध धर्मका पुरोहितलाई भेट्न पुग्छन्, जो उनीसँग अन्य मानिसहरू विपरीत मैत्रिभावी र सहयोगी देखिन्छन्। हड्सन यी पुरोहितलाई पछि 'मेरा पुराना साथी' वा 'मेरा पुराना बौद्ध धर्मी साथी' भनेर जनाउँछन्। यिनै पुरोहितको सहयोगमा हड्सनले चाहेजति पाण्डुलिपिहरू भेट्टाउँछन्, बेच्छन्, प्रतिलिपि बनाउँछन्, व्यापार गर्छन् र रेकर्ड गर्छन्, अर्थात् अर्को शब्दमा भन्नुपर्दा जे जति कुराहरू गर्न आवश्यक छ, सबै गर्छन्। सन् १८३७ मा हड्सन लन्डन, पेरिस र कलकत्तातर्फ यी यावत् सामग्रीहरूलाई पठाउन थाल्दछन्। नेपालबाट बिक्रीका

शैलीमा बौद्ध धर्मी लेखहरू बाहिरिन सुरु हुन्छ र युरोपेली बुद्ध धर्मले ठूलो मात्रामा पहिलो आधारभूत सामग्रीहरू प्राप्त गर्दछ।

हड्सनका पुराना बौद्ध धर्मी साथी, बुर्नोफका बौद्ध धर्मी नेपाली हुन्, जसको नाम हड्सनद्वारा एकदम कम उल्लेख गरिँदागरिँदै पनि हामीलाई बुझ्न कुनै कठिनाइ हुँदैन। उनको नाम अमृतानन्द हो, जो एक नेवार बज्राचार्य पुरोहित हुन्। अश्वघोषको 'बुद्ध चरित' का अन्तिम खण्ड, अर्थात् बुद्धका जीवनीका बारे सबैभन्दा पुरानो र ज्यादै प्रसिद्ध खण्ड सकेकोमा जीवनकालमै उनी देशभर चर्चित हुन पुगेका थिए। यसका साथै उनी नेपाल उपत्यकाको बुद्ध धर्मसम्बन्धी इतिहासका लेखक पनि हुन्। उनी पाटन सहरको महाबौद्ध भन्ने ठाउँमा बस्दथे, जहाँबाट बुर्नोफका असङ्ख्य पाण्डुलिपिहरू निस्के। अमृतानन्द र उनका मानिसहरू नेवारहरू हुन्, जो युद्धमा परास्त गरिएका र गोरखाका हिन्दू सैनिक जमातद्वारा दबाइएका मानिसहरू हुन्। यी अशिष्ट सिपाहीहरूसँग नेवारहरूका केही कुरा मिल्दो हुँदैन र तिनको दुःखहरू अज्ञात र ढाकिएका हुन्छन्। हड्सनलाई अमृतानन्दको तर्फबाट प्राप्त सहयोग र मैत्रीभाव भनेको लामो समयसम्म उत्पीडित जातिको तर्फबाट मान्यता प्राप्तिका लागि एउटा भूमिका बाँध्ने काम थियो, पीरमा परेको मानिसहरूको पीडाको मौन चित्कार थियो जसको समाधानका बाटाहरूबारे हड्सनले शायदै केही सोचेका थिए, बुझेका थिए। जो कसैले के तर्क प्रस्तुत गर्न सक्छ भने हड्सनका लेखहरूमा कतै पनि मानिसहरू भेटिँदैनन्।

संस्कारको बारेमा एउटा अन्तिम टिप्पणी। सन् १८८३ फेब्रुअरी १३ को एक दिउँसो, रिचार्ड वाग्नेर आफ्नो अध्ययनस्थल भेनिसको पलाज्जो भेन्ड्रामिनमा थिए, जहाँ उनी र उनका परिवार बस्ने गर्दथे। उनी एउटी आइमाईको बारेमा लेख लेख्दै थिए। करिब तीन बजेतिर उनले छातीमा हल्का दुखाइको महसुस गरे र उत्तरमा आपत्तिसूचक डोरी ताने, जुन यस्तै अवस्थाका लागि बनाइएको थियो। आपत्तिसूचक यन्त्रको सूचनामा कोसिमा दौडदै उनको छेउमा पुगिन्। चिकित्सक पनि बोलाइए तर ढिला भइसकेको थियो। केही मिनेटमै उनले आफ्नी श्रीमतीका अँगालोमा जीवन त्याग गरे।

एक उपन्यासकारले बीस वर्षपछाडि, अर्को शताब्दीको सुरुतिर, वाग्नेरको अन्त्येष्टिको बारे यस्तो लेख्छन्:

> फटिकको लास राखे बाकसमा वाग्नेरको पार्थिव शरीर थियो र छेउमा एक हिउँ झैं सेतो अनुहार लिएकी आइमाई उभिएकी थिइन्। दोस्रो लास राखे बाकस जुन चमकदार धातुको थियो, सडकपेटीमा खुला थियो। सबका आँखाहरू जीवन र मृत्युमा रोजिएका व्यक्तिमाथि थियो। लम्पसार परेका नायकको अनुहारमा एउटा असीमित मुस्कानको चमक थियो, एउटा यस्तो मुस्कान जुन हिमनदीका इन्द्रेनी झैं दूर र असीमित, समुद्रको चमक झैं र भाग्य प्रदान गर्ने ताराहरूजस्तै। मलामीहरू यो सब हेर्न सकिरहेका थिएनन्, तर भयमिश्रित तिनका

हृदयले उब्जाएका धार्मिक निष्ठताले भने आफूहरूलाई पवित्र रहस्य खुल्न लागेको भान हुन्थ्यो।

हिउँ झैं सेतो अनुहार लिएकी आइमाई अलिकति सरेर उही शैलीमा उभिरहिन्, एउटा सालिक झैं हलचल नगरीकन। मलामी सानो थियोः मलामी ढुङ्गा अगाडि हिँड्योः आफन्त प्रियजनहरूका साथमा विधवा लागिन्। त्यसपछि युवा मानिसहरूको जमात। आकाशमा बादल मडारिरहेको थियो। तल ढुङ्गा र पानीको फराकिलो बाटोमा मलामी हिँडिरहेको थियो। त्यस समय छाएको सन्नाटाले वाग्नेरको महान् व्यक्तित्वको पुष्टि गरिरहेको थियो, जसले मानव पूजाको सवालमा यस ब्रह्माण्डकै शक्तिहरूलाई एउटा अनन्त गीतमा परिणत गरे।

यी शब्दहरू नयाँ शताब्दीका एक देवदूत गाब्रियेल्ल डानुन्जिओका हुन्। उनी फाँसीवादको अगुवा हुन्।

## लेखकको भनाइ

यो लेख पहिलोपटक सन् २००२ फेब्रुअरीमा न्युयोर्कको साहित्य र समाजको अध्ययन केन्द्र, कोलम्बिया विश्वविद्यालयमा अङ्ग्रेजी भाषामा प्रस्तुत गरिएको थियो। सन् २००४ को अक्टुबरमा संसोधित शीर्षक 'हड्सन घोस्ट' अन्तर्गत सोसल साइन्स बहाः पाटन, नेपालमा पुनः प्रस्तुत गरिएको थियो। यस लेखलाई अनुवादित रूप दिन र बहाः जर्नलमा प्रकाशनका लागि दिनु भएको अमूल्य सुझावका लागि श्री कनकमणि दीक्षितप्रति आभारी छु। अनुवाद पढी टिप्पणी गरिदिनु भएकोमा श्री प्रयागराज शर्मालाई पनि म हार्दिक धन्यवाद दिन चाहन्छु।

# नेपालमा सम्भ्रान्त वर्गको रूपान्तरण: एक अध्ययन

स्टेफनी लोटर

यस लेखले सम्भ्रान्त वर्गको अध्ययन गर्दा देखा पर्ने नियमबद्ध चुनौतीका बारेमा छलफल गर्छ र पहुँचताको सहमति तथा सम्भ्रान्त वर्गसँगको सम्बन्धमा अनुसन्धानकर्ताको अवस्था र यसबाट निस्कने परिणामबारेमा तर्क गर्ने छ। यो लेख उभोमुखी दृष्टिकोणको पक्षमा उभिने छ र सबअल्टर्न स्टडिजको अवधारणामा आधारित रही यसले 'पाले' को रूपमा काम गर्ने र सम्भ्रान्त संस्कृतिसँग अन्तरनिहित प्रतिनिधित्वमा लादिएको तहगत अवधारणाको अध्ययन गर्ने छ। एक सम्भ्रान्त कुलका रूपमा राणाहरूको विगतको अध्ययनले पततोन्मुख राणाहरू वरिपरिको वातावरण र सम्भ्रान्तहरूको शक्तिकेन्द्रित प्रक्रियामाथि विचार गर्ने छ।

सन् १९५१ (२००७) को क्रान्तिपश्चात् शक्ति गुमाउनु पूर्व १०० वर्षसम्म राणाहरूले प्रभावकारी रूपमा शासन व्यवस्था चलाएका थिए। राजनैतिक, नागरिक समाज र सैनिक प्रशासनजस्ता प्रमुख क्षेत्रमा उनीहरूको प्रभाव थियो र शक्तिबाट बाहिरिएपछि यो बिस्तारै घट्यो। शाही परिवारसँग नजिकको सम्बन्ध र नेपालका प्रमुख कम्पनीहरूको उच्च तहमा रहे पनि राजनैतिक तथा सैनिक नेतृत्वमा भने यिनीहरू कमै प्रतिनिधित्व छ। यीमध्ये कतिपयको जीवन पुर्ख्यौली सम्पत्तिकै आधारमा चलिरहेको कारण पुर्खाले बिताएको जीवनस्तर जिउन कतिपयलाई गाह्रो परिरहेको छ।

'सम्भ्रान्त' शब्दको व्यावहारिक परिभाषाअनुसार सम्भ्रान्त भनेका यस्ता वर्ग हुन्, जसले समाजको संस्थागत क्षेत्रमा सामान्यभन्दा अधिक प्रश्रय पाउँछन् मार्भिकमा उल्लेख भएअनुसार सन् १९९६:२३८)। वर्तमानमा स्थापित केही सम्भ्रान्त राणाहरू पहिले सम्भ्रान्त वर्गका रूपमा स्थापित भएका राणावंशको रूपान्तरणमा आधारित छन्। यस सन्दर्भमा मेरो हालसालको अध्ययनको क्षेत्र 'प्रभावकारी सम्भ्रान्त'[१] (आफ्नो क्षेत्रमा विज्ञका रूपमा अन्तर्राष्ट्रिय स्तरमा चिनिन चाहने) हो। यद्यपि उनीहरूको हालको जीवनस्तरअनुसार पश्चिमी युरोपमा बसेका भए यो समूह मध्यम वर्गका रूपमा चिनिने थियो।

पतनोन्मुख सम्भ्रान्त वंश अर्थात् परिभाषित कुनै खास खण्ड (माथिल्लो दर्जाको राजनीतिकर्मी अथवा व्यापारिक सल्लाहकारहरू) को अध्ययनभन्दा पनि मेरो नमुना (प्रभावकारी सम्भ्रान्तहरूसँगको राम्रो पहुँच भएका नातेदारहरूसँगको पारिवारिक सङ्गत) ले प्रभावकारी सम्भ्रान्तहरूको सम्भावित अवलोकन गर्ने अनौपचारिक अवसर दियो। यस अवस्थाले मलाई प्रभावकारी र कम प्रभावकारी राणाहरूका बीचमा हुने यस प्रकारका बोलचालको अध्ययन गर्ने

---

१ पहुँचता र प्रभावकारी सम्भ्रान्तबीचको फरकका लागि स्टेफन नुगन्ट (सन् २००२:७२) हेर्नुहोस्। मानवशास्त्रीहरू पहुँचका लागि साविकको विश्वसनीयता कायम गर्न सक्षम हुन सक्छन् तर नयाँ समूहलाई भने यो गाह्रो हुन्छ र अध्ययनका लागि स्वीकृति दिनु पर्छ भन्ने छैन।

मौका दियो जसलाई तानिया लुहरमानन (सन् १९९६) द्वारा पूर्व निर्धारित भेटघाटे मानवशास्त्रका रूपमा व्याख्या गरिएको छ। उनीद्वारा परिभाषित अन्तर्वार्ताको अवस्थामा आइपर्ने सीमाहरूको कुरा गरिन्छ जहाँ अनुसन्धानकर्ताको हातमा कुराकानीको प्रक्रिया मिलाउने, सहमति बनाउने सम्भावनाका आधारहरू कम हुन्छन् र वनावटी स्वप्रतिनिधित्वको रूपमा चित्रित हुने सहभागीहरूसँग सामना गर्नु पर्ने हुन्छ। सुरुमा राणावंशहरूको पहुँचको परिधि र एक अलग शक्तिकेन्द्रभित्र काम गर्दाको अनुभवमा स्वप्रतिनिधित्वको झलक दिन्थ्यो। जुन औपचारिक अन्तर्वार्तामा होइन कि पारिवारिक कुराकानीमा आधारित थियो।

सम्भ्रान्तहरूसँग भएको असाधारण अनुसन्धान अवस्थाको चित्रण गर्नका लागि म सम्भ्रान्त सहभागीहरूसँग थिए। म त्यति बेला जिल्ल परें जब महाशय राणाद्वारा[२] आफूले बोलेका कुराहरू बारम्बार दोहोऱ्याउन नचाहेकाले अन्तर्वार्ताका लागि एक स्थानीय पत्रकार र मलाई एउटै समय दिइएको थियो। सम्भ्रान्त वर्गसँगको अनुसन्धान सम्बन्धमा सहभागीहरूको सशक्तीकरणका लागि सोच्न जरुरी छैन। सम्भ्रान्त वर्गका सहभागीहरू आफ्ना लागि आफै लेख्न र बोल्न सक्छन्। हर्जफल्डले यस अवस्थाका लागि महत्त्वपूर्ण प्रश्न उठाउँछन्, "हामीहरू ती मान्छेहरूसँग कसरी आत्मीय सम्बन्ध राख्न सक्छौं र उनीहरू आफै आफ्नोबारेमा नबोलेको विषयमा हामी बोल्न सक्छौं?" (सन् २०००:२३०)। मेरो तर्क छ, सम्भ्रान्त वर्गको अध्ययनका बेला देखिने दुविधामा दुईओटा धारहरूले नेतृत्व गरिरहेका हुन्छन्। सम्भ्रान्तहरूको अध्ययनमा आउने दुविधाबाट मुक्त हुन पहिलो, मानवशास्त्रीहरूले अन्तर्वार्ताको औपचारिक अवस्थाबाट मुक्त हुने बाटोहरू निकाल्नु पर्छ। जुन उनीहरूसँग हुने अन्य अन्तरक्रियाका लागि पहुँचका अवसरहरू बढाएर प्राप्त गरिन्छ। दोस्रो, सम्भावित वनावटी स्वप्रतिनिधित्वको महत्त्वलाई पनि ध्यान दिनु पर्छ। यो दिशाविहीन जस्तो देखिए पनि सम्भ्रान्तहरूको वातावरणमा सहभागितामूलक अवलोकन गर्न केही सीमित विकल्पहरूमध्येको महत्त्वपूर्ण विकल्प हो। दोस्रो दिशाबाट सुरु गर्दा भने म अचम्ममा परें। सम्भ्रान्तहरू अन्तर्वार्ता दिन मात्र अनुभवी थिएनन् बरु उनीहरूलाई लाग्थ्यो कि यो उनीहरूले विशिष्टता हात पारेको क्षेत्र हो र सार्वजनिक छवि तथा महत्त्वका हिसाबले यिनीहरूको कर्तव्य जनतालाई सुसूचित गर्नु वा जानकारी दिनु हो।

सार्वजनिक स्वप्रतिनिधित्व निकै फैलेको छ। राणाहरूले दिने गरेका अनगिन्ती अन्तर्वार्ता र प्रेस वक्तव्यहरूबाट उनीहरूमाझ यो अझ फैलेको छ भन्ने कुराको पुष्टि हुन्छ। वास्तवमा यस्ता कामहरू कसरी गर्ने भन्ने कुराको ज्ञान उनीहरूलाई राम्ररी नै थाहा छ। दमनशमशेर जबरा (सन् १९७८) जगदीश राणा (सन् १९९५) पद्मा राणा (सन् १९९९), प्रमोदशमशेर जबरा (सन् १९७८, १९९५ र २०००) र पुरुषोत्तमशमशेर जबरा (सन् १९९८, वि.स.

२ मिस्टर र मिसेज राणा मेरो अध्ययनको अज्ञात सहभागी हुन्, तर पहिलो पूरा नाम भएका सहभागीहरू भने अज्ञात होइनन्।

२०५५) ले राणाहरूको ऐतिहासिक विवरण लेखेका छन्। यसै गरी अरू कैयौं ऐतिहासिक उपन्यास र काल्पनिक कथामा राणा अभिजात वर्गको वर्णनहरू छापिएका छन्। यस सन्दर्भमा नेपाली ऐतिहासिक आख्यान (फिक्सन) लेखनका पिताका रूपमा परिचित डायमण्ड राणा ( सन् १९८१ र १९८४) मात्र होइन ग्रेटा राणा (सन् १९८७ र १९९४) र दीपक राणा (रणभूमि) यो क्षेत्रका उल्लेखनीय नाम हुन्। पशुपति, प्रभाकर र गौतमशमशेर जबरा (सन् २००२) द्वारा हालैमा यस उच्च वर्गमा आधारित 'कफी टेबल बुक' लेखिएको छ भने 'पारिवारिक धार्मिक संस्था' 'पाञ्चायन' द्वारा बृहद् राणा वंशावली तयार गरिएको छ।

सम्भ्रान्त वर्गका बारेमा भन्दा सवअल्टर्नका बारेमा लेख्ने (स्पिवाक, १९८८ए १९८८बी) ले प्रतिनिधित्वका दुई भेदहरू छुट्याएकी छिन्। बेरट्रिटुङ (Vertregung) अर्थात् प्रतिनिधित्व र डाश्टेलुङ (Darstellung) अर्थात् चित्रित गर्नु वा प्रस्तुत गर्नु। यी दुई भेदले हामीलाई राणाहरूले राणाहरूका बारेमा गरेका साहित्यिक कामको स्थान निर्दिष्ट गर्न मदत गर्दछ।

प्रतिनिधित्व, बेरट्रिटुङ भनेपछि राजनैतिक प्रतिनिधित्वका सन्दर्भमा बुझ्नु पर्छ, अर्थात् कुनै अन्य व्यक्ति वा समूहको स्वार्थ वा लाभका लागि। जबकि डाश्टेलुङ भन्नाले चित्रित गरिदिने वा प्रस्तुत गरिदिने बुझिन्छ। सवअल्टर्न समूहले सम्भ्रान्त समूहले जस्तो आफ्नो समुदायको प्रतिनिधित्वका लागि आफ्नो पूर्ण नियन्त्रण बनाउँदैनन्। उनीहरूका नसुनिएका आवाजहरू राजनैतिकर्मीद्वारा प्रतिनिधित्व हुने तथा कहिलेकाहीं मानवशास्त्रीहरूका प्रतिनिधित्वमा बढी नै भर पर्ने गर्छन्, तर यसको ठीक विपरीत सामाजिक प्राधान्य बोकेको समूहका लागि यस्ता खाले प्रतिनिधिहरूको जरुरत पर्दैन। उनीहरूले कैयौं स्वप्रतिनिधित्वको निर्माण गर्न सक्छन् र प्रत्यक्ष सहभागिताबिना पनि आफ्नो वा आफ्नो समूहको चित्रण गर्न सक्छन्। हर्जफल्डको प्रश्नमा स्पिवाकले सुझाउ दिन्छिन्, सम्भ्रान्त वर्गसँग उनीहरू 'आफ्नै लागि बोल्न सक्ने' क्षमताले गर्दा मानवशास्त्रीय अध्ययनका क्रममा उत्पन्न हुने वा हुन सक्ने प्रतिनिधित्व (बेरट्रिटुङ) को आवश्यकता नै पर्दैन। वास्तवमा सम्भ्रान्त वर्गको बारेमा लेख्नुको कुनै ठूलो महत्त्व छैन, जस्तो कि यदि उनीहरूका बारेमा लेख्न जरुरी थियो भने उनीहरूको आवाज पनि सुनिएको हुने थिएन। यो वर्गको चित्रण अर्थात् सचेतन रूपमा गरिएको स्वप्रतिनिधित्व आफैमा चुनौतीपूर्ण काम वा प्रवृत्ति हो र माथि उल्लिखित राणाहरूको विषय राम्रोसँग सुरक्षित पाठसङ्ग्रहमा आधारित छन्।

यस्ता कतिपय साहित्यिक सामग्रीका उत्पादनबाहेक राणाहरूद्वारा राणाहरूका विषयवस्तुमा आधारित अन्य सामग्रीहरू पनि उत्पादन भएका छन्। विजुशमशेर जबराले आफ्ना पुर्खाहरूको इतिहासमा आधारित आधा घण्टा प्रसारित हुने २७ भागको टेलिभिजन धारावाहिक बनाएका छन्। अन्तिमपटकको कुराकानीअनुसार उनी आफ्ना पूर्वज अर्थात् पहिलो राणा प्रधानमन्त्री

जङ्गबहादुर राणाको भूमिकाका लागि तयारी गर्दै थिए। जङ्गबहादुरको प्रतिनिधित्व हुन सक्ने खुबी भएको भूमिकाका लागि उनी कसरी तयारी गर्दै छन् भन्ने कुराको वर्णनले उनको चित्रण गर्ने क्षमता डाश्टेलुङ्गको परिचय दिन्थ्यो र यसका लागि एक प्रकारको कल्पना र जानकारी अझसम्म पनि सुरक्षित राखिएको थियो, जबकि उनीहरूले प्रभावकारी सम्भ्रान्तको उत्तराधिकारी वा वारिसको संयुक्त सदस्यता पहिले नै गुमाइसकेका थिए। विजुशमसेर जबराले ऐतिहासिक राणाहरूको बारेमा लेख्न राणा कचहरीसम्बन्धी आफ्नो ज्ञानको प्रयोग गरे। उनले रङ्गमञ्चमा नेपालको राजाको भूमिका निभाउनका लागि रिचार्ड थर्ड[३] र अरूहरूले जस्तै प्राकृतिक कुलीनतालाई परम्परागत[४] रूपमा संरक्षण गरिरहेका छन्। जानीजानी नै उनको सभ्य वा बितेको दरबारी जीवनबाहेक अरू सर्वसाधारणहरूले जिउने जीवन अपनाउन चाहेनन् उनले। अरूभन्दा भिन्न शासकको भूमिकामा अभिनय गर्नु कुनै विशेष गाह्रो काम होइन उनका लागि।

> "यो क, ख, रा सिकेजस्तै हो। यसले कविता लेख्न अनुमति दिँदैन। यो आफै भित्रबाट र रङ्गमञ्चबाट आउने कुरा हो। मैले अचानक पाएँ, मसँग जनसमुदायमा आधारित स्वाभाविक भावना थियो र सोही प्रकारको भाषा अथवा यस्तै यस्तै ... थियो। आजसम्म म राजनीतिकर्मी होइन। त्यसकारण म अरू के हुन सक्थेँ, सिबाय एक अभिनेता?"

समग्रमा उनी जनसमुदायमाझ रहन चाहन्थे, उनले निर्णय गरे र कलाकारिताको दौडमा सम्मिलित भए। यस रोजाइले उनलाई श्रोता मात्र दिएन। उनले सचेतन रूपमा बढ्दै गरेका सम्झनाहरू र परम्परागत बानी लागेका अभिव्यक्तिहरू छलफलको क्रममा कुनै जोखिम नउठाई सचेतन रूपमै मञ्चबाट श्रोताहरूका माझ चित्रित गर्न पाए। म यहाँ यो मात्र भन्न चाहन्छु, कैयौं राणाहरू उनीहरूको आर्थिक अवस्था सबल नहुँदा नहुँदै पनि सार्वजनिक रूपमा उनीहरूको पुर्खाहरूको प्रतिनिधित्व गर्न मन पराउँथे, जबकि प्रत्यक्षतः यसले स्वप्रतिनिधित्व र स्वप्रतिबिम्बका दुई रोचक क्षेत्रहरूको अवस्था प्रदान गर्ने गर्थ्यो।

सवअल्टर्न स्टडिजले सम्भ्रान्तहरूको अध्ययनका लागि दुई पक्ष दिन्छ— स्वप्रतिनिधित्वका सन्दर्भमा विशेष जोड र अन्य दृष्टकोणको उपलब्धी हुँदाहुँदै पनि तल्लो तहबाट उभोमुखी एकोहोरो दृष्टिकोण। उभोमुखी दृष्टिकोण जुन मुख्यतया सवअल्टर्नहरूको प्रतिरोधमा चासो देखाउँछ तर यसले कथित 'ठूलो मान्छे' को इतिहास लेखनलाई भने नकार्दैन, जस्तो कि शहीद अमिन (सन् १९८८) ले देखाएका छन्। दक्षिण एसियाको सवअल्टर्न स्टडिजमा लुइस डोमोन्ट (सन् १९६६) लगायतका अलि पहिलेका अनुसन्धानकर्ताहरूद्वारा सम्भ्रान्तहरूसँग सम्बद्ध भएर गरिने गरेका उदोमुखी दक्षिण एसियन इतिहास लेखनमा विमति राख्थे। पछिल्ला अध्ययनहरू अत्यधिक मात्रामा स्थानीय

---

३ शेक्सपियरद्वारा लिखित अङ्ग्रेजी इतिहासकाका चार नाटकहरूमध्येको अन्तिम नाटक 'रिचार्ड थर्ड' को प्रमुख पात्र।

४ Bourdieu का लागि, habitus मूर्त इतिहास हो, जुन कुनै दोस्रो उपायले ग्रहण गरिन्छ, बिर्सिएको इतिहासको रूपमा लिइन्छ तर वर्तमानमा भएका क्रियाकलाप पूरै विगतको निरन्तरता र उत्पादन हो।

सम्भ्रान्तहरूद्वारा पश्चिमी मध्यम वर्गीय अनुसन्धानकर्ताहरूलाई प्रदान गरिएको पहुँचमा आधारित थियो। सम्भ्रान्त वर्गको अध्ययन आफैमा उदोमुखी अध्ययनको ऐतिहासिक विशिष्टताबाट स्वतन्त्र हुन सक्छ र अब नयाँ परिवेशमा यसको परीक्षणका बारेमा छलफल गर्न सकिन्छ। दक्षिण एसिया र सम्भ्रान्त वर्ग दुवैको अध्ययनमा अनुसन्धानकर्तालाई यस दृष्टिकोणले पुरानो पुस्तासँगको औपनिवेशिक परियोजनासँगको सम्बद्धतामा स्वतन्त्रता प्रदान गर्दछ।

पीटर फ्रेन्कवर्ग (सन् २००२:२५१) वर्णन गर्छन्, जब खपतका आधारमा वर्गको तुलना गरिन्छ, कैयौं अफ्रिकाका गाँउले सम्भ्रान्तहरू पश्चिमका मध्यम वर्गीय मानवशास्त्रीहरूसँग प्रतिष्पर्धा गर्न सक्दैनन्। त्यसकारण स्टडी अप एप्रोच[५] तरिकाले उनीहरूको अध्ययन हुन जरुरी छैन। यसैले मध्यम वर्गीय पश्चिमी अनुसन्धानकर्ताहरूका तुलनामा यिनीहरू प्रभावकारी नभई पहुँचवाला सम्भ्रान्त हुन सजिलो छ। आजकाल भएका कतिपय प्रकाशनहरू मध्यम वर्गीय अनुसन्धानकर्ताहरूको अध्ययनमा आधारित छन्। यस्ता खाले अनुसन्धानकर्ताहरूले पहुँच भएका सम्भ्रान्तहरूसँग काम गरिरहेका हुन्छन्, प्रभावकारी सम्भ्रान्तहरूसँग होइन (हार्वे सन् २००२, एड सन् २००२, इभर सन् २००२ र सोवरल सन् २०००)। यस स्थितिमा अनुसन्धानकर्ताहरूले पहुँचयुक्त सम्भ्रान्तहरूको शक्तिविहीनताको स्थिति जान्न जरुरी छ। पश्चिमी मध्यम वर्गीय मानवशास्त्रीहरूद्वारा भएको स्थानीय अफ्रिकी सम्भ्रान्तहरूको अध्ययनको उदाहरणलाई छाडेर हेर्दा कुनै पनि सम्भ्रान्त वर्गसँगको वरिपरिको पहुँच यो वर्गको बहिर्गमनमा मात्र भर नपरी अनुसन्धानकर्ताहरूको व्यक्तिगत स्तरमा समेत भर पर्छ र यो नेपालका राणाहरूबारेमा गरिएको अध्ययनले पनि प्रस्ट देखाउँछ। एक जर्मन मानवशास्त्री सुसाने वोन दे हेद (सन् १९९७) द्वारा राणाका बारेमा 'अ कफी टेबल बुक' तयार पारियो। काठमाडौंमा रहँदा हैदले सानो राणा दरबार बहालमा लिइन् र आफ्नो सामाजिक संरचनामा कूटनीतिज्ञहरू र स्थानीय सम्भ्रान्तहरूलाई समावेश गरिन्। अर्का जर्मन कुलीन केरीन ग्राफिन स्वेचरिनद्वारा (सन् १९९३) ले राणा आर्किटेक्चरभित्रका खराबीबारेमा लेख लेखियो र पहिले काठमाडौंका लागि अस्ट्रेलियन राजदूत अडरिन सेभरले राणाहरूसम्बन्धी सबैभन्दा ठूलो ऐतिहासिक सारसङ्क्षेप प्रकाशित गरे (सन् १९९३)। (जुलिया थम्सन, सन् १९९७), एक अमेरिकन कूटनीतिज्ञकी श्रीमतीले राणा आइमाईहरूको व्युटी सैलुनका बारेमा विद्यावारिधि शोधपत्र लेखिन् जसमा दुई ठूला भागहरू राणा आइमाईका बारेमा केन्द्रित थियो। यस अध्ययन क्षेत्रमा थम्सनद्वारा आफ्नो सामाजिक अवस्था प्रतिबिम्बित गरिएको छ। "काठमाडौंमा मेरो पहिचान

५ मानवशास्त्रमा स्टडिङ अप एप्रोच पहिलोपटक लाउरा नादेर (सन् १९६९, १९९६) को 'अप दि एन्थ्रोपोलोजिस्टः प्रस्पेक्टिभ गेन्ड फ्रम स्टडिङ्ग अप' मा देखा परेको थियो। इथ्नोग्राफिक स्टडी अफ इलिट्स ग्रुप्ससँग सम्बन्धित उपयोगी छलफलका लागि हेर्नुहोस्, नादेर (सन् १९६९, १९९६) मार्कस (सन् १९८३) र मार्शल (सन् १९८२)।

एक अमेरिकी कूटनीतिज्ञसँग विवाहित गोरो छाला भएको अनुसन्धानकर्ताको रूपमा रहेको थियो जसले गर्दा गरिब विद्यार्थी र विशेष सुविधा पाएका गृहिणी आइमाईसँग सम्बन्ध राख्न सघायो' (थम्सन, सन् १९९७:८०)। एक अनुसन्धानकर्ताबाट कूटनैतिक समूहभित्रको एक सदस्यकी श्रीमती बन्न पुगेकी थम्सन एक मात्र त्यस्ती अनुसन्धानकर्मी हुन् जसले राणाको अध्ययन-अनुसन्धानका क्रममा आफ्नो सामाजिक स्तर र अवस्था प्रस्ट्याएकी छिन्। सम्भ्रान्त वर्गसँगको पहुँच भएको अनुसन्धानकर्ताका रूपमा राणाहरूको अध्ययन गर्दा सामान्यतः अनुसन्धानका क्रममा सामना गर्नु पर्ने पहुँच र विश्वासमा आई पर्ने समस्या भोग्नु पर्दैन जसको बारेमा सम्भ्रान्त वर्गको अध्ययनमा छलफल गरिन्छ (हेर्नुहोस्, नादेर सन् १९६९, हर्ज र इम्वर सन् १९९३, गुस्टर्सन सन् १९९७ र हन्टर सन् १९९३)। सम्भ्रान्तहरूको अध्ययन सम्बद्धताको हिसाबले पनि खतरनाक हुन सक्छ किनभने चाल नपाईकन संस्थागत रूपमा बहिर्गमन हुनु र समग्र वनावटी प्रस्तुति स्वरूपको उत्पादन हुन सक्छ।

अध्ययनमा माथि उल्लिखित विभिन्न भिन्नताका बाबजुद मेरो आफ्नो काम राणाहरूमध्येको 'प्रभावकारी सम्भ्रान्त' राणाहरूको अध्ययन गर्नु थियो र यो अध्ययनको पहल तल्लो तहबाट भएको थियो अर्थात् उभोमुखी थियो। यस अवस्थामा मैले 'गेटकिपर' (पाले) र अन्य माध्यमहरूको अध्ययन गर्न सकें जसले उनीहरूको गोप्यतालाई सुरक्षित राख्थे। यो दृष्टिकोण तुलनात्मक रूपमा सम्भ्रान्त अध्ययनको क्षेत्रमा नौलो थियो जबकि स्टडिङ अप एप्रोच भन्ने शब्दले उभोमुखी अध्ययनका लागि जोड दिन्छ (नदाल, सन् १९६९)। आजसम्म सम्भ्रान्त अध्ययनको सरोकार राख्ने 'प्रभावकारी सम्भ्रान्त' धेरैजसो दोस्रो स्रोतको तथ्याङ्कमा भर पर्छ जुन मिडिया र ऐतिहासिक स्रोतबाट खिचिएको हुन्छ (इदे, सन् २००२; लिमा, सन् २००० र मासस, सन् २०००)। पहिलेको अध्ययनले मानवशास्त्रलाई अन्य समाजविज्ञान र खोज पत्रकारिताको नजिक ल्याइपुर्‍यायो। उदाहरणका लागि गुप्त रूपमा काम गरिने कामको खारेजी हुँदाहुँदै पनि केही मानवशास्त्रीहरूले यसरी नै काम गरे (इयान रोज, सन् १९९०:११) (गुस्टर्सन, सन् १९९७)। राणाहरूको सम्बन्धमा गरिने गुप्त अनुसन्धान प्रयोगात्मक रूपमा कठिन थियो। मसँग न त, कुनै माध्यम वा शिक्षा थियो जसले म त्यो सम्भ्रान्त वर्गको सदस्य हो भनेर सजिलै विश्वास दिलाउन सक्थें न त मैले अपनाउन सक्ने मर्यादित भूमिकाको बारेमै सोच्न सक्थें। अति खर्चिलो राणापरिवारमा पनि घरेलु शिक्षक र विदेशी धाईको प्रचलन हराइसकेको छ। त्यसकारण मैले न त आफ्नो नक्कली रूप पेस गर्न सक्थें न त आफ्नो उद्देश्य मनसाय लुकाउन सक्थें। वंशको घेरादेखि केन्द्र भागसम्मको कामका लागि चाहिने पहुँचका लागि नामको प्रयोग गर्न वा कुनै सम्बन्ध देखाउन मैले अस्वीकार गरें।

मैले थुप्रै पुराना राणाहरूसँग परिचय गरें जो आफ्नो कुलीनता जोगाउँदै सानासाना ठाउँहरूमा बस्थे जुन उनीहरूको परिवेशसँग अमिल्दो देखिन्थ्यो। यी पुराना राणाहरूसँगको

छलफलमा, उनीहरूका पारिवारिक इतिहासका साथमा सम्भ्रान्त वर्गको आर्थिक पतन र घरायसी जीवनपद्धतिसँग सम्बन्धित विगत र वर्तमानको कुरा मात्र गरिन, बरु कहिलेकाही उनीहरू र उनीहरूका धनी तथा शक्तिशाली नातेदारहरूको सामाजिक कार्यक्रममा मलाई पनि निम्ता गरियो। मैले एक त्यस्तो अनुभव बटुलेको थिएँ जहाँ ट्याक्सीबाट विवाहको एक पार्टीमा आउने नातेदारले गेटबाहिर नै ट्याक्सी छोडिदिए किनभने उनीहरू आफ्नो आर्थिक पतनको सङ्केत कतै पनि देखाउन चाहँदैनथे। अर्थात् उनीहरूसँग आफ्नै कार थिएन। कुनै पनि बेला यस्ता कम शक्तिशाली व्यक्तिहरूसँगै प्रभावकारी सम्भ्रान्तहरूको सेरोफेरोमा प्रवेश गर्नलाई मलाई रोक लगाइएको थिएन। 'पहुँचयुक्त' राणाहरूको समूहबाट मैले के सिकें भने पारिवारिक कार्यक्रममा प्रभावकारी सम्भ्रान्तहरूको गोपनीयताको रक्षाका लागि पालेहरू हुने गर्थे। यिनीहरूको कामको निश्चितताका लागि राणापरिवारकै सदस्यहरूले 'कम प्रभावकारी' सम्भ्रान्तहरूका सदस्यहरूको पहिचान गर्ने र निरीक्षण गर्ने गर्थे। यस्ता सामूहिक भेला भएको ठाउँमा कहिलेकाहीं शाहीपरिवारको उपस्थिति हुने गर्थ्यो। यस्तो बेलामा सेनाहरू हतियारसहित बगैंचादेखिनै सुसज्जित हुन्थे, प्रभावकारी राणाहरू घरमै कतै हराउँथे भने मलगायत कतिपय कम प्रभावकारी सदस्यहरू बगैंचामा बफेट लिइरहेका हुन्थ्यौं। प्रभावकारी सम्भ्रान्तहरूको चाहनाबिना अलग राखिएको वा छुट्याइएको शक्तिशाली व्यक्तिहरूको समूहमा प्रवेश पाउन वा पहुँच बनाउन असम्भव हुन्छ। कतिपय सन्दर्भ थाहा पाउन सम्भ्रान्त वर्गको अध्ययन महत्त्वपूर्ण हुन्छ र यसका सीमाहरू जान्न तथा उक्त वर्गसँग गाँसिन चाहने अन्य व्यक्तिहरूको सीमाहरू जाँच्न सम्भ्रान्तहरूको अध्ययन हुन जरुरी छ। यसबाहेक अन्य पहुँचताका लागि मानवशास्त्रीहरूले केही छुट्टै काम गर्न सक्दछन्। त्यो मानवशास्त्र राम्रो हुन्छ जसले अध्ययनका लागि सहायक हुने गरी 'प्रभावकारी सम्भ्रान्त' का सदस्यहरूसँगको पहुँच बनाउन र आफू केही हदसम्म नदेखिन सक्छ। यसले राम्रो मानवशास्त्रीका लागि काममा निकै सघाउ पुऱ्याउँछ।

मेरो अनुभवका बाबजुद यो ठूलो सामाजिक कार्यक्रममा, तहगत एकान्ततामा मैले 'प्रभावकारी सम्भ्रान्त' हरूसँगको सामीप्यतामा कठिनाइ पाएँ र अग्रज तथा स्थानका हिसाबले क्रमिक रूपमा यसमा सुधार हुन सकेन। अचम्मको कुरा के थियो भने कतिपय माथिल्लो तहका राणाहरूसँग एक अनुसन्धानकर्ता विद्यार्थीका हिसाबले तब मात्र भेट्न सजिलो हुन्थ्यो जब उनीहरूका गरिब नातेदारहरूसँग म टाढा हुन्थें। केहीले भने अविश्वसनीय रूपमा अन्तर्वार्ताका लागि समय दिन्थे। दुई घण्टा लामो अन्तर्वार्तामा समानताको भ्रम र नजिकको साथीत्वको भावना स्थापना हुने गर्थ्यो जसमा मेरो उच्च स्तरको सहभागिता हुन्थ्यो। अन्य मानवशास्त्रीहरू अन्य बसाइमा जस्तै सम्भ्रान्त सहभागीहरूले 'स्टडि अप एप्रोच' का क्रममा उनीहरूको शक्तिशाली अवस्था (स्थान) नदेखाउन सक्छन् किनभने समान खाले बसाइका

क्रममा देखिने कुराकानीमा उनीहरूले (सम्भ्रान्तहरूले) सहानुभुति बटुल्न सक्छन्। सम्भ्रान्त वर्गसँग काम गर्नु भनेको पेसेवरहरूसँग काम गर्नु हो जसले पत्रकारहरूसँग व्यवहार गर्न जानिसकेका हुन्छन् र घमण्डी भएर देखा पर्दाको खतरा तथा उनीहरूसम्म पुग्न कठिनाइ छ भन्नेबारेमा उनीहरू सुसूचित हुन्छन्। कम्तीमा कहाँ देखा पर्ने अथवा सहयोगी बन्ने? र, साथीत्व देखाउने भन्ने कुराको निर्धारण उनीहरू आफै गर्छन्। पहिलेदेखिनै सचेत र तालिमप्राप्त रूपमा देखा पर्ने यस वर्गका बारेमा सृजना राणा भन्छिन्, "अन्तिम सत्य यो हो कि तपाईंको आमाबुबाले तपाईंमा बडप्पन नछाओस् भन्ने चाहन्छन्।" सम्भ्रान्त वर्गको वास्तविक पहिचान र अरूलाई होच्याउने प्रवृत्तिबीचको फरक छुट्याउन सम्भ्रान्तहरूकै बारेमा अनुसन्धान गर्ने अनुसन्धानकर्ता तथा जो कोहीलाई पनि गाह्रो हुन्छ। उदाहरणका लागि जर्मनीका व्यवसायी सम्भ्रान्तहरूका श्रीमतीहरूको अध्ययनमा बओनिस आफ्नो अध्ययनका केही पात्रहरू उदार र मैत्रीपूर्ण पाउँछिन् जसलाई उनी स्नेही आमाको सङ्ज्ञा दिन्छिन्। अन्तर्वार्ता लिइएकी मध्ये एक महिलाले बओनिसको विद्यावारिधिपछि (बओनिस सन् १९९९:६६) जागिरका लागि सघाउन तत्पर हुन्छिन्। यस प्रकारको प्रस्तावलाई बओनिस आफ्नो सहयोगीका तर्फबाट उनीमा रहेको ज्ञान भण्डार र भविष्यमा सम्भ्रान्तहरूका माझ विद्यावारिधि गरेकी विद्यार्थीका रूपमा इज्जतदार जागिरे हुन सक्ने सम्भावनाको पहिचान भएको अर्थ लगाउँछिन्। बओनिसका लागि यो एकतर्फी सहयोगले शक्ति असन्तुलन देखाउँदैन जसरी उक्त अवस्थाको बारेमा मैले अर्थ लगाउन सक्थें। अनुसन्धानकर्ताको कमजोर अवस्थाको पहिचान गर्न सक्षम नहुनाले सम्भ्रान्तहरूको अध्ययनमा रहने सम्बन्धले बओनिसका सन्दर्भमा समानताको गलत अर्थतर्फ डोऱ्याउँछ। पियरे बौरडिभ (सन् २००१:१६२)सँग म सहमति राख्दछु जसले सामाजिक क्षेत्र (स्थान) को विश्लेषणको महत्त्व देखाउँछ जहाँ विविधता हुने गर्छन्। बओनिसले दुई-तीन घण्टाको समय लिएर उत्तरदातामुखी खुला अन्तर्वार्ता लिन्छिन्। उनमा आफूप्रति लक्षित केही विशिष्ट रणनीतिहरू वा सीमाङ्कनसँग सम्बन्धित ठूलो समूहसँग अन्तर्वार्ता लिने अनुभव थिएन। त्यसकारण, बओनिस बनावटी अवस्थामा बोलिएका शब्दहरूमा भर परिन्, परिणामस्वरूप उनी आफ्नो अवस्थाको विश्लेषण गर्न असक्षम भइन्। सम्भ्रान्त वर्गका सदस्यहरूलाई उनीहरूको सानो सामाजिक घेराभित्र अनुसन्धानकर्ताहरूसँग पुनः भेट हुन सक्ने सम्भावना कम हुने कुरा थाहा भएकोले अन्तर्वार्ताका क्रममा उनीहरू आफू समान स्तरको हो भन्ने बहाना बनाउन वा स्वाङ पार्न सक्छन्। माथिल्लो राणा सम्भ्रान्तसँग दुई घण्टा लामो अन्तर्वार्तामा उनीहरूसँग नजिकको सम्बन्धको अनुभूति दिलाउन उनीहरूको पहिलो नामबाट बोलाउने अनुमति मलाई थियो। यो सुविधा र पारिवारिक जमघटमा हुने व्यवहारमा भने एक प्रकारको अमिल्दोपन थियो, जहाँ उस्तै प्रकारका व्यक्तिहरूले मसँग टाढा हुने प्रयास गर्दथे। सहज अन्तर्वार्ताका अवस्थामा उनीहरू एक ठूलो सोफामा बस्थे। एउटा हातमा एक ग्लास रक्सी र अर्कोपट्टि

चाँदीको थालीमा सजिएको स्यान्डविच हुने गर्थ्यो। मानवशास्त्रीहरूको लागि यो एक प्रकारको अस्वाभाविक कार्यथलो हुन सक्छ तर यस्तो अवस्थामा देखा पर्ने आतिथ्य सत्कार र आत्मीयताबाट झुक्किनु भने हुँदैन। सम्भ्रान्तहरूका पालेहरू अझै पनि त्यहीं नै हुन्छन् र मानवशास्त्रीले दुई घण्टा लामो अन्तर्वार्ता लिइसकेपछि पुनः नफर्किने मानसिकताका साथ उक्त ठाउँ छाड्नुपर्ने हुन्छ। मैले पतोन्मुख राणावंशहरूको अध्ययन गर्दै थिएँ र कम प्रभावकारी नातेदारहरूसँग घुलमिल हुँदै थिए जहाँ प्रभावकारी सम्भ्रान्तहरूकै निश्चित सामाजिक स्थान देख्न सक्दथें। कम प्रभावकारी नातेदारसँगको भेलाहरूमा छलफल गर्न सक्षम हुँदा कसरी उच्च सम्भ्रान्तहरूले तिरस्कार गर्छन् भन्ने कुराको अनुभव कृत्रिम अन्तर्वार्ताका अवस्थाहरूभन्दा पृथक् स्टडिङ अप अवधारणाको एक भाग थियो।

उत्तरविहीन रहँदा, बेलाबेलामा आफूलाई पीठ फर्काइँदा र वाक्यको बीचैमा आफूलाई छाडिँदा म हाँसोउठ्दो पनि देखिएको हुन सक्छु तर मैले सम्भ्रान्तहरू र उनीहरूको अवनतिको सम्बन्धमा अनुसन्धान गर्दा हाँसोउठ्दो देखिनु शक्तिविमुख सम्भ्रान्तरूसँगको साझा अनुभव थियो। समग्रमा स्थलगत कामको सीमा, ज्यादै छोटा अन्तर्वार्ता तथा प्रभावकारी सम्भ्रान्तहरूद्वारा प्रदर्शित हुने स्वप्रतिनिधित्वको चरित्रले गर्दा यिनीहरूसँग काम गर्न निकै चुनौतीपूर्ण छ। समयसीमा र बनावटी अन्तर्वार्ताको अवस्थाका कारण प्रायःजसो पूर्व निर्धारित भेटघाटे मानवशास्त्रमा आधारित अध्ययनको तरिका अपनाइन्छ त्यसैले यस खाले कृत्रिम अन्तर्वार्ताका अवस्थाहरू र समयसीमाहरू हटाउनका लागि म मिश्रित सहभागीहरूको भेलामा जोडदिन्छु जहाँ पालेहरूको पनि अवलोकन गर्न सकियोस्। बहिर्गमनको अर्थ बुझ्दै आन्तरिक रूपमा सम्भ्रान्तहरूसँग काम गर्नु भनेको उनीहरूको कार्यपद्धति बुझाइका लागि एक कदम नजिक पुग्नु हो।

*नोटः यो लेखको अङ्ग्रेजी संस्करण http://www.anthropologymatters.com मा पाउन सकिन्छ तर लेखिकाको सहमतिमा यसका केही भागमा आवश्यक थपघट गरिएको छ।*

## सन्दर्भसामग्री

Amin, S. Gandhi as Mahatma: Gorakhpur District, Eastern UP, 1921-2. In *Selected subaltern studies* (eds) R. Guha & G.C. Spivak. Oxford: Oxford University Press, 1988

Bourdieu, P. (franz. original 1979). *Die feinen Unterschiede.* Frankfurt a. M.: Suhrkamp,1982

Bourdieu, P. *The logic of practice*. Cambridge: Polity Press, 1990.

Bourdieu, P. *Wie die Kultur zum Bauern kommt.* Schriften zur Politik und Kultur 4. Hamburg: VSA-Verlag, 2001.

Böhnisch, T. *Gattinnen: Die Frauen der Elite. Kritische Theorie und Kulturforschung Bd. 2 Zugleich Frankfurt/Main Dissertation 1999.* Münster: Westfählisches Dampfboot, 1999.

de Lima, A. P. 'How did I become a leader in my family firm?' assets for succession in contemporary Lisbon financial elites. In *Elites: choice leadership and succession* (eds) J. de Pina-Cabral & A.P. de Lima. Oxford: Berg, 2000.

Dumont, L. *Homo hierarchicus: the caste system and its implications.* Chicago and London: University of Chicago Press, 1966

Eade, J. How far can you go? English Catholic elites and the erosion of ethnic boundaries. In *Elite cultures: anthropological perspectives* (eds) C. Shore & S. Nugent. ASA Monographs v.38. London: Routledge. 2002.

Evers, S.J.T.M.. The construction of elite status in the extreme Southern Highlands of Madagascar. In *Elite cultures: anthropological perspectives* (eds) C. Shore & S. Nugent. ASA Monographs v.38. London: Routledge, 2002

Frankenberg, P. Anthropologists: lions and/or foxes. An afterword. In *Elite cultures: anthropological perspectives* (eds) C. Shore & S. Nugent. ASA Monographs v.38. London: Routledge, 2002

Gusterson, H.. Studying up revisited. *Political and Legal Anthropology Review* 20: 114-19, 1997

Harvey, P, Elites on the margins: mestizo traders in the southern Peruvian Andes. In *Elite cultures: anthropological perspectives* (eds) C. Shore & S. Nugent. ASA Monographs v.38. London: Routledge, 2002.

Herz, R. & J.B. Imber, Fieldwork in elite settings. *Journal of Contemporary Ethnography* 22: (1): 3-6, 1993

Herzfeld, M. Uncanny success: some closing remarks. In *Elites: choice leadership and succession* (eds) J. de Pina-Cabral & A.P. de Lima. Oxford: Berg, 2000

Hunter, A. Local knowledge and local power: notes on the ethnography of local community elites. *Journal of Contemporary Ethnography* 22: (1) 36-58, 1993.

Luhrmann, T. *The good Parsi: the fate of a colonial elite in a postcolonial society.* Cambridge, Massachusetts: Harvard University Press, 1996.

Marcus, G.E. The deep legacies of dynastic subjectivity: the resonances of a famous family identity in private and public space. In *Elites: choice leadership and succession* (eds) J. de Pina-Cabral & A.P. de Lima. Oxford: Berg, 2000.

Marvick, D. Elites. In *The social science encyclopaedia* (eds) A. Kuper & J. Kuper. London: Routledge, 1996.

Nader, L. Up the anthropologist—perspectives gained from studying up. In *Reinventing anthropology* (ed) D. Hymes. New York: Pantheon Books,1969.

Nugent, S. Gente boa: elites in and of Amazonia. In *Elite cultures: anthropological perspectives* (eds) C. Shore & S. Nugent. ASA Monographs v.38. London: Routledge. 2002.

Rana, Diamond S. *Wake of the white tiger.* (English translation of *Seto Bagh*, translation by Greta Rana). Kathmandu: Balika Rana, 1984.

Rana, Daman S.J.B. *Rana rule and misrule.* Delh, 1978.

Rana, Greta, *Distant hills.* Kathmandu, Nepal: Sharda Prakashan Griha, 1977.

Rana, Greta, *Guests in this country: a third world fantasy.* Delhi: Book Faith India, 1994.

Rana, Jagadish, *Nepal: a concise history of the cultural scenario of the Himalayan kingdom*: South Asia Books, 1995.

Rana, Padma J.B. *Life of Maharaja Sir Jung Bahadur of Nepal.* Kathmandu: Ratna Pustak Bhandar, 1909.

Rana, Pashupati S.J.B., Rana, Prabhakar S.J.B., & Gautam S.J.B Rana. *The Ranas of Nepal.* Geneva: Naef. Kister S.S. Editeur, 2002.

Rana, Pramode S. *Rana Nepal: an insider's view.* Kathmandu: Rama Rana, 1978.

Rana, Pramode S. *Rana intrigues.* Kathmandu: Rama Rana, 1995.

Rana, Pramode S. *A chronicle of Rana rule.* Kathmandu: Rama Rana, 2000.

Rana, Purushottam S.J.B.. *Jung Bahadur Rana: the story of his rise and glory.* Kathmandu: Book Faith India, 1998

Ranabhumi (alias Deepak Rana) n.d. *The bending reed.* Kathmandu.

Rose, D. *Living the ethnographic life.* Newbury Park: Sage, 1990.

Schwerin, K. Gräfin Rana-Herrschaft und Paläste im Kathmandu-Tal 1846- 1951. *Saeculum* 44: 243-64, 1993.

Sever, A. *Nepal under the Ranas.* Delhi: Oxford and IBH publisher, 1993.

Shore, C. & S. Nugent (eds). *Elite cultures: anthropological perspectives* (ASA Monographs v.38. London: Routledge, 2002.

Sobral, J.M. Family, power and property: ascendancy and decline of a rural elite. In *Elites: choice leadership and succession* (eds) J. de Pina-Cabral & A. Pedroso de Lima. Oxford: Berg, 2000.

Spivak, G.C. 1988a. Can the subaltern speak? In *Marxism and the interpretation of culture* (eds) C. Nelson & L. Grossberg, 271-313. Chicago: University of Illinois Press.

Spivak, G. C. 1988b. Practical politics of the open end. *Canadian Journal of Political and Social Theory/Revue canadienne de théorie politique et sociale* 12:104-11.

Thompson, J.J. *Unmasking culture: women and beauty salons in Kathmandu Nepal.* Unpublished PhD: University of Wisconsin-Madison, 1997.

von der Heide, S. *Changing faces of Nepal: The glory of Asia's past.* Kathmandu: Ratna Pustak Bhandar, 1997.

पाञ्चायन टेम्पल, *कुवँर राणाजीहरूको बृहत् वंशावली,* काठमाडौं, पाञ्चायन पब्लिकेसन, सन् १९९९।

राणा, डायमण्डशमशेर, *सत्प्रयास,* काठमाडौं, बालिका राणा, सन् १९८१।

# शक्ति र दृश्यः विकास तथा तेस्रो विश्वको सिर्जना र व्यवस्थापन


## आर्तुरो एस्कोबार



यो लेखले स्पष्ट गरेका आधारभूत तर्क र मुख्य परिणामहरूले 'तेस्रो विश्व' वा 'अविकसित' भनिएका कैयौं राष्ट्रहरू (मुख्यतः एसिया, अफ्रिका र ल्याटिन अमेरिका) को विधान र त्यसपछि तिनीहरूप्रति गरिएको व्यवहारहरूलाई विश्लेषण गर्ने प्रयास गर्दछ। हालसालैका सङ्कथनहरूको गतिशीलता र शक्तिमा आधारित सामाजिक यथार्थतालाई प्रतिनिधित्व गर्दै यस अध्ययनले देहायका विषयहरूको परीक्षण गरेको छः १. द्वितीय विश्वयुद्धको सुरुको अवस्थामा ती राष्ट्रहरूको सामाजिक-आर्थिक जीवनका बारेमा नयाँ विचारको निर्धारण २. नयाँ विचारलाई पश्चिमा आर्थिक अभ्यासमा जोड्ने तथा ३. 'विकास' का कार्यहरूका माध्यमबाट संस्थागत अभ्यासको साथसाथै सङ्कथन र विस्तारित सांस्कृतिक, सामाजिक सम्बन्धहरूको सिर्जना। कोलम्बियाको अनुभवको आधारमा यसमध्येका केही विषयहरूको चित्रण गरिने छ र अन्त्यमा मानवशास्त्रको सम्वन्धमा केही निचोडहरू प्रस्तुत गरिने छ।


## विकासको रचना

पुनर्संरचना र विकासका लागि विश्वब्याङ्कले गठन गरेको आर्थिक मिशनले बहुग्राही विकास रणनीति तयार गर्ने उद्देश्यका साथ जुलाई ११ देखि नोभेम्बर ५, १९४९ सम्म कोलम्बियाको भ्रमण गर्‍यो। विश्वब्याङ्कद्वारा अविकसित राष्ट्रहरूमा पठाइएको यो पहिलो मिशन थियो। यस मिशनमा समावेश गरिएका १४ अन्तर्राष्ट्रिय सल्लाहकारहरूमा अन्तर्राष्ट्रिय विनिमय, यातायात, उद्योग र ऊर्जा, सडकमार्ग, रेलमार्ग, जलमार्ग, सामुदायिक सुविधाहरू, कृषि, स्वास्थ्य र कल्याण, वित्त, ब्याङ्क, राष्ट्रिय ढुकुटी र पेट्रोलियम इन्जिनियरिङजस्ता विषयगत क्षेत्रहरूसँग सम्बन्धित व्यक्ति थिए। यस मिशनको नजिक रहेर कार्यसम्पादन गर्न कोलम्बियन सल्लाहकार र विशेषज्ञहरूको पनि एक समूह थियो।

मिशनले देखेका कार्यहरू र सो को लागि प्रस्तावित कार्यक्रमहरूको नमुना यस्तो थियोः

> हामीले व्याख्या गरेको हाम्रा सर्तहरूमा असम्बन्धित सिफारिसहरूभन्दा बहुग्राही र आन्तरिक रूपमा अनुकूल कार्यक्रमहरूलाई जोड दिएका छौं। हामीले कोलम्बियन अर्थतन्त्रका विविध क्षेत्रहरूको जटिल सम्बन्धमा अनुकूल अवस्था निर्माण गर्न ती सम्बन्धहरूको व्यापक विश्लेषण गरेका छौं। कोलम्बियामा आमूल रूपमा नयाँ नियम ग्रहण गर्न सुझाउ दिने हाम्रो चाहना होइन। तैपनि विद्यमान अवस्थाको रूपान्तरण र परिवर्तनका लागि केही अन्य उपायमा जोड दिन उन्नति र सुधारका लागि बहुआयमिक सुझाउहरू दिन चाहन्छौं। यो नै सम्पूर्ण विकास कार्यक्रमहरूको कारण र पक्षपोषक हो। क्रमिक र टालटुले प्रयासहरूले सामान्य प्रभाव पार्न सक्दछन्। पूरै अर्थतन्त्रअन्तर्गतका शिक्षा, स्वास्थ्य, आवास, खाद्यान्न र उत्पादकत्वमा गरिएको एकनासको हस्तक्षेपले मात्र गरिबी, अज्ञानता, अस्वस्थ्यता र न्यून उत्पादकत्वको कुचक्रलाई पूर्ण रूपमा तोड्न सक्दछ। त्यसपछि मात्र

आर्थिक विकासको प्रक्रियाले दिगोपन प्राप्त गर्न सक्दछ। (पुनर्सरचना र विकासका लागि अन्तर्राष्ट्रिय व्याङ्क १९५०:१५)।

यस कार्यक्रमले अर्थतन्त्रका सबै पक्षहरू समेटी 'उन्नति र सुधारका बहुआयमिक' आवश्यकतामा जोड दिएको थियो। यस अवधारणाद्वारा सबैभन्दा बढी जोड दिइएको तरिका र यसको लक्षणले बहुग्राही र एकीकृत विशेषता बोकेको थियो। कार्यक्रमको बहुग्राही प्रकृतिले सबैखाले महत्त्वपूर्ण सामाजिक र आर्थिक पक्षहरूमाथि हस्तक्षेप, सावधानीपूर्ण योजना तर्जुमा, स्रोतहरूको बाँडफाँड गर्नुका साथै एकीकृत चरित्रको सफल कार्यान्वयनका लागि सुनिश्चितता प्रदान गरेको थियो। उक्त प्रतिवेदन ('विशेषज्ञहरूको रुचिका' दस प्राविधिक परिशिष्टहरूमा प्रस्तुत गरिएको) ले उपलब्धि र सङ्ख्यात्मक लक्ष्यहरू, क्षेत्रगत लगानी, मापदण्डको परिकल्पना, कार्यप्रणालीलगायतका विस्तृत निर्देशन सुझाएको थियो। छोटकरीमा यसले देशको सामाजिक र आर्थिक कार्य व्यवस्थापनमा मौलिक रूपमा नयाँ अवधारणा प्रस्तुत गरेको थियो।

युद्धपछि 'अविकसित' भनेर चिनिएका र समस्या भोगिरहेका राष्ट्रहरूका लागि यो पूर्णतः नयाँ रणनीति थियो भने कोलम्बियाका लागि ठोस प्रस्फुटीकरणसहितको एक मात्र पहिलो मिशन थियो। विश्वव्यापी नयाँ परिस्थितिमा देखा परेका (उत्पन्न) सबै राष्ट्रहरूको उद्देश्य समान थियो, औद्योगिक सभ्यताद्वारा सिर्जना भएको जीवनपद्धितका लागि छिटो पहुँच हुन सक्ने भौतिक र संस्थागत तत्त्वहरूले सजिएको समाजको निर्माण गर्नु। 'अविकास' भन्ने स्पष्टतः काल्पनिक रचनाको वरिपरि, एक सङ्कथन उब्जाइयो र बिस्तारै सबै राष्ट्रहरूलाई उक्त लक्ष्य प्राप्तिका लागि उत्साहित गरियो। तिनीहरूलाई लक्ष्यहरूको वर्गीकृत गरी प्रविधिसमेत उपलब्ध गराइयो। दोस्रो विश्वयुद्धपछिको रूपान्तरण अर्थात् सन् १९४५ र १९५५ बीचको समयमा यो सङ्कथनको उत्पत्ति भयो र यसले निश्चित आकार पायो। यसले धनी र गरिब राष्ट्रहरूबीचको सम्बन्धमा मात्र नभई समाज र सरकारहरूको चरित्र र कार्यक्षेत्रहरूमा समेत आमूल परिवर्तन ल्यायो।

दोस्रो विश्वयुद्धपछि प्रकट भएको विश्वव्यापी राजनैतिक पुनर्व्यवस्थाभित्र यस नयाँ रणनीति ('विकास') को ऐतिहासिक मुहानहरू पहिल्याउन सकिन्छ। विश्वव्यापी शक्ति संरचना[१]लाई पुनर्परिभाषित गर्ने क्रममा पश्चिमीहरूले (र पूर्वीय) 'अविकास' र 'तेस्रो विश्व' को विचार तथा सोसम्बन्धी कार्यगत धारणाहरू प्रकट गरेका थिए। हामी यहाँ विकासका रणनीतिहरूलाई सम्भव तुल्याउने ऐतिहासिक परिस्थितिको विश्लेषण गर्न सक्दैनौं जसअन्तर्गत पुरानो औपनिवेशिक व्यवस्थाहरूको अन्त्य, जनसङ्ख्या र उत्पादनका संरचनाहरूमा परिवर्तन, विश्वका केही भागहरूमा साम्यवादको विस्तार र पुँजीवादी विश्वमा साम्यवादले जन्माएको त्रास पर्दछ। यसका साथसाथै विज्ञान र प्रविधिमा विश्वास, मार्शल प्लानको सफलताले जन्माएका सम्भावनाहरू, आर्थिक ज्ञानको

१ 'विकास' र 'तेस्रो विश्व' को विचारहरूको प्रारम्भका बारेमा अर्डन्ट (१९८१), वाइन्डर (१९८६), मिन्ज (१९७६), प्लेस्च (१९८१), वालेर्सटाइन (१९८४), र वोर्सली (१९८४) हेर्नुहोस्। विकासको मूल्यवान् आलोचनाहरूमा केही हदसम्म सम्वन्धित विषयहरू गेन्जियर (१९८५) र मोरान्डे (१९८३) मा पाउन सकिन्छ।

नयाँ विधा र क्षेत्रीय अध्ययनको विकास (उदाहरणका लागि 'ल्याटिन अमेरिकन स्टडिज'), तथा जल समाज व्यवस्थापनका लागि विकसित भएका अनुभवहरूसमेत पर्दछन्। युद्धताका अमेरिकी औद्योगिक उत्पादकत्व क्षमता झन्डै दोब्बर वृद्धि भएको परिस्थितिमा युद्धको अन्त्यपछि उन्नत राष्ट्रहरू विशेषतः संयुक्त राज्य अमेरिकाका लागि समुद्रपारमा लगानीका अवसरहरू र उत्पादनका लागि बजार खोज्ने अवस्था आइपऱ्यो। आर्थिक विकास, विशाल निगमहरूको तत्त्वावधानमा व्यापारिक उदारीकरण र बहुपक्षीय आर्थिक संस्थाहरू (जस्तै विश्वब्याङ्क र अन्तर्राष्ट्रिय मुद्रा कोष, १९४४ मा स्थापना गरियो) नै ती आवश्यकताहरू पूरा गर्न र नयाँ रणनीतिलाई मूर्तरूप दिने मुख्य साधनहरू थिए।[२]

यद्यपि विकास ती तत्त्वहरूको परिणाम वा तिनीहरूको संयोग र क्रमिक विस्तारीकरणमा मात्र आधारित थिएन। यो न त नयाँ किसिमको ज्ञान वा संस्थाहरूको उपज थियो न पुँजीको गतिशील अवस्था परिवर्तनको प्रतिक्रिया वा गरिबीको अन्तर्राष्ट्रिय स्तरमा नयाँ संवेदनशीलताको प्रतिरूप वा मार्शल प्लानको सफलता। मूलतः यो एउटा व्यवस्थाको स्थापनाको परिणाम थियो जसले ती तत्त्व, संस्था तथा क्रियाकलापलाई एकै ठाउँ ल्यायो र तिनीहरूबीचको सम्बन्धको सिर्जना गऱ्यो र यसको निरन्तर अस्तित्वको प्रत्याभूति दियो। 'विकास', एक सोचाइ र अभ्यासको स्रोतको रूपमा सर्वव्यापी मान्यता बन्न गयो। गरिब राष्ट्रहरू अनगिन्ती कार्यक्रम र हस्तक्षेपहरूको सिकार बने, जुन पूर्ण रूपमा नियन्त्रित र छुटकाराविहीन देखिन्थे। ती राष्ट्रहरूको सामाजिक र आर्थिक जीवनका लागि महत्त्वपूर्ण रहेका हरेक कुराहरू (जनसङ्ख्या, पुँजी आर्जनको प्रक्रिया, प्राकृतिक स्रोत, कृषि र व्यापार, प्रशासन, सांस्कृतिक मूल्यहरू, आदि) विज्ञहरूका लागि बाह्य गणनाका वस्तु भए। सो उद्देश्यका लागि नयाँ विज्ञानको विकास भयो र बृहत् रूपमा नवनिर्मित संस्थाहरूद्वारा हस्तक्षेपको खाका तयार भयो। केही वर्षभित्र नै समाजिक संस्थाका सबै पक्षमा पुग्ने गरी यस अपूर्व रणनीतिको विस्तार भयो।

## विकासको व्यावसायीकरण र संस्थाकरण

सङ्कथनहरूको उत्पादन र प्रचारप्रसार शक्ति अभ्यासको एक अभिन्न अंश हो जुन समकालीन विद्वान्हरूले (उदाहरणका लागि हेर्नुहोस् फुको (१९८०, १९८१), फ्रो (१९८५), सइद (१९७९) प्रशस्त व्याख्या गरेका छन्। सङ्कथनको रूपमा विकासले एक उत्कृष्ट भूमिका निर्वाह गरेको छ। यसबारेमा दुई मुख्य प्रक्रियाहरू छन्। ती हुन्:

---

२ विकास स्थापित भएको ऐतिहासिक एवं राजनीतिक प्रसङ्गको सारांश गेन्जियर (१९८५) मा पाइन्छ। चोम्स्की (१९८७), लिटल (१९८२), मियर (१९८४) र सीर्स (१९८२) पनि हेर्नुहोस्।

### १ विकासको व्यावसायीकरणः

व्यावसायीकरणको धारणाले प्रविधि र विधागत अभ्यासलाई जनाउँदछ जसअनुसार ज्ञानको सिर्जना, प्रसार तथा प्रमाणीकरणलाई संस्थापन, व्यवस्थापन र नियन्त्रण गरिन्छ। अर्को शब्दमा यो यस्तो प्रक्रिया हो जसमा सत्यको राजनीति सिर्जना गरिन्छ र यसलाई कायम राखिन्छ। विकासको सम्बन्धमा उपलब्ध विधाहरूको प्रयोगद्वारा वा नयाँ उपविधाहरू (हामीले देखेअनुसार विकास अर्थशास्त्र अति महत्त्वपूर्ण विषय बनेको छ तर योलगायत अन्य क्षेत्रहरू जस्तै स्वास्थ्य, जनसङ्ख्या, शहरी योजना, शिक्षा, पोषण मानवशास्त्र, आदि पनि महत्त्वपूर्ण विषयहरू हुन्।) को सिर्जनाद्वारा तेस्रो विश्वका समस्याहरूलाई सम्बोधन गरिन्छ। यसरी उत्पादित सिद्धान्तहरूले परिस्थिति, व्यवहार आदिलाई मान्यता दिन सफल पनि भएका छन्। निश्चित उपचारका लागि यो एउटा देखिने सुझाउको रूपमा रहेको छ।

ल्याटिन अमेरिकामा १९५० पछाडि विकासवादी राष्ट्रहरूको आवश्यकता सुहाउने गरी सम्पूर्ण ज्ञानका संस्थाहरू र शैलीहरूले पुनर्सङ्गठनका लागि स्थान पाए। नयाँ व्यवसायीहरूले अमेरिकामा प्रतिपादित अनुसन्धानको व्यावहारिक समाजविज्ञानको नमुना र शिक्षण अनुसरण गरे (फ्युनजालिडा १९८३, १९८५)। 'विकास अध्ययन' को घनीकरणले तेस्रो विश्वका बारेमा सत्यता र मान्यताहरू प्रकाश पार्न यी मुलुकका विश्वविद्यालयहरूमा शक्तिशाली प्रणालीको स्थापना गऱ्यो। तेस्रो विश्वका विद्यार्थीहरूलाई अमेरिका र युरोपियन विश्वविद्यालयहरूमा दिइने तालिम र अन्तर्राष्ट्रिय सल्लाहहरू (जस्तै विश्वब्याङ्कका मिशनहरू) र तेस्रो विश्वका विश्वविद्यालयहरूमा व्यावहारिक समाजविज्ञान नमुनाको सामाजिक व्यवसायीकरणका महत्त्वपूर्ण अंशहरू थिए।

### २ विकासको संस्थाकरणः

यस पद्धतिले सङ्कथन र प्रविधिहरूको उत्पादन, संरक्षण, स्थापना, रूपान्तरण र कार्यान्वयनका लागि संस्थागत क्षेत्रहरूलाई निर्देश गर्दछ। यस्ता असरहरूको विस्तारमा विकास संस्थाहरूको सन्जाल अन्तर्राष्ट्रिय सङ्गठनहरू (जस्तै अमेरिका र यसका प्राविधिक नियोगहरू), द्विपक्षीय संस्थाहरू (जस्तै अन्तर्राष्ट्रिय विकासका लागि अमेरिकी नियोगहरू) र स्वयंसेवी नियोगहरू (जस्तै CARE) देखि तेस्रो विश्वका राष्ट्रिय, क्षेत्रीय र स्थानीय नियोगहरू जिम्मेवार छन्। ती संस्थाहरूद्वारा विकास ज्ञानको उपयोग व्यावहारिक कार्यक्रमहरू, सम्मेलन, विशेषज्ञका मिटिङ, परामर्शदाता र यस्तै-यस्तै अन्य माध्यमहरूद्वारा गरिन्छ। निश्चित ज्ञानको प्रयोग र हस्तक्षेपहरूले ती संस्थाहरूमा एक सन्जाल संस्थापन गर्दछ जसले परिस्थितिलाई अनुकूल बनाउनुका साथै शक्ति अभ्यास सम्भव बनाउँदछ।

व्यावसायीकरण र संस्थाकरणका प्रक्रियाहरू अभिमुख विकास योजनाको प्रमुख प्रविधि थियो। विश्वब्याङ्क मिशनको प्रतिवेदन १९४९, द वेसीस अफ अ डेभलप्मेन्ट प्रोग्राम फर

कोलम्बिया, विगत ४० वर्षदेखि उक्त देशमा बनिरहेको शृङ्खलाबद्ध योजनाहरूमध्येको पहिलो कार्यक्रम थियो। १९५० मा नेसनल कमिटी अन प्लानिङ र इकोनोमिक डेभलप्मेण्ट कमिसन दुवै थिए र उपयुक्त क्रियाकलापहरूका बाबजुद, समग्र योजना तर्जुमालाई १९५० को दशकको अन्त्यतिर मात्र स्थान दिइयो। क्षेत्रीय योजना आयोगहरू पनि १९५० को मध्य दशकमा स्थापना गरिएको थियो (उदाहरणका लागि दक्षिणपश्चिम कोलम्बियाको उर्बर काउका रिभर भ्यालीमा विश्वब्याङ्क र टेनेसी भ्याली अथोरिटी (TVA) को संलग्नतामा TVA नमुना अनुसरण गरी एक क्षेत्रीय विकास निगमको स्थापना गरिएको थियो)। योग्य कोलम्बियन कर्मचारीहरूको अभाव साँच्चै नै खड्किएको थियो जसले गर्दा पहिलो राष्ट्रिय योजना वैदेशिक मिशनद्वारा विस्तार गरियो र "योजना वर्ष" का दुई दशकसम्म काम गर्ने राष्ट्रिय योजना समितिहरू वैदेशिक विशेषज्ञहरूद्वारा विशेष रूपमा निर्देशित भए। नयाँ प्रविधिहरूको ज्ञान र नयाँ उद्यमका लागि आवश्यक मानसिक उपाय हासिल गर्न कोलम्बियन विद्यार्थीहरूलाई अमेरिका पठाइयो।[३]

विकासको नयाँ दुनियाँमा योजनाकर्ता र अर्थशास्त्रीहरूले विशेष भूमिका खेलेका थिए। तर योजना सैद्धान्तिक ज्ञानको प्रयोग मात्र थिएन, यो त एक साधन थियो जसले अर्थशास्त्रलाई उपयोगी बनायो र यो राज्य तथा नीतिहरूसँग प्रत्यक्ष रूपमा संलग्न रह्यो। विकास अर्थशास्त्रीहरू विकासका बारेमा अति आधारभूत तथ्यहरू पैदा गर्नमा सर्वोत्कृष्ट विशेषज्ञ कहलिए। बिस्तारै यो सोचिन थाल्यो कि अविकासका रहस्यहरूले निष्पक्ष र वस्तुगत रूपमा अर्थशास्त्रीहरूको ध्यान खिच्यो। अर्को भागमा यस असामान्य तर शक्तिशाली परिदृश्यका बारेमा छोटकरीमा व्याख्या गरिन्छ।

## विकास-अर्थशास्त्रको नयाँ विज्ञान

१९४० को दशकको अन्त्यतिर हावर्ड युनिभर्सिटीमा 'गरिबीको अर्थशास्त्र र आर्थिक-विकास' विषयमा प्रशिक्षण सुरु गर्दा सहकर्मीहरूले उल्लेख गरेका 'स्केप्टिसिजम' का बारेमा जोन केनेथ गालब्राइथले १९७९ मा यसरी सम्झना गरेका छन्। उनी निष्कर्षमा भन्छन्, ''गरिब राष्ट्रहरूको विशेष अर्थशास्त्र निरन्तर अस्तित्वका लागि नभई अध्ययनको एक भिन्न क्षेत्रका रूपमा स्वीकार गरियो'' (गालब्राइथ १९७९:२७)। १९५५ देखि यस अवस्थामा पूरै परिवर्तन आएको थियो।

३ कोलम्वियन योजना प्रणालीका महत्त्वपूर्ण विदेशी सल्लाहकारहरू वा मिशनहरूमाः एल. कुरिअर/विश्वव्याङ्क, १९४९, ए. हिर्स्चम्यान, पूर्वाद्ध १९५० को दशक, लेब्रेट. १९५७. वाटरसन/विश्वव्याङ्क. १९९६-६४, हावर्ड मिशन. १९६०-७०, संयुक्त राष्ट्रसङ्घको (सिइपिएएल) मिशन, १९५९-६२, डि. आव्रामोविक/विश्वव्याङ्क, १९७०. डि. सिर्स/आइएलओ, १९७० पर्दछन्। यी सवै मिशनहरूको प्रमुख भूमिका कोलम्वियाको विकास योजना रहेको थियो। यसवाहेक 'विशाल' र असंङ्ख्य मिशनहरू, सल्लाहकारहरू, विज्ञ वा परामर्शदाताले छोटो समयका लागि कोलम्वियाको अवलोकन गरेका छन्।

यस सम्बन्धमा गालब्राइथको सम्झनालाई निरन्तरता दिने हो भने 'कुनै आर्थिक विषयले धेरै गरिब राष्ट्रका मानिसहरूलाई उनीहरूको गरिबीबाट छुटकारा दिलाउन ध्यानाकृष्ट गर्न सकेन' (१९७९:२९)। एक नयाँ क्षेत्र, 'विकास अर्थशास्त्र' जन्माइयो र सम्पूर्ण विकास प्रक्रियालाई दिशानिर्देश गर्न लगाइयो। यस ऐतिहासिक घटना बुझ्नलाई यो जीवन्त बन्नुका सर्तहरू विश्लेषण गर्न आवश्यक हुन्छः पहिले नै अस्तित्वमा रहेको आर्थिक सिद्धान्तमा आधारित भई यो कसरी उत्पन्न भयो? विकास अर्थशास्त्रीहरूले कसरी 'अविकसित अर्थतन्त्रको' निर्माण गरे र कसरी उनीहरूका सिद्धान्तहरूले पुँजीवादी विश्वअर्थव्यवस्था र उन्नत राष्ट्रहरूको संस्कृतिको सङ्कथन-विशेषताहरू ग्रहण गरे? अन्त्यमा, युद्ध पूर्वको कुन रूपको आर्थिक सङ्कथनलाई यसले स्थानान्तरित गऱ्यो वा तेस्रो विश्वमा आफै समाहित भयो?

मौलिक रूपमा सूत्रबद्ध गरिएको विकास अर्थशास्त्र, शास्त्रीय र नवशास्त्रीय अर्थशास्त्रको परिणाम थियो। विश्व अर्थव्यवस्थाको यो सङ्कट प्रथम विश्वयुद्धसँगै सुरु भयो। तापनि सङ्गठित केनेसियनिजम र एक नयाँ उत्पादनमुखी अर्थशास्त्रभित्र सङ्गठित रही यसले आर्थिक सिद्धान्त कार्यावलीमा पूर्वभावको एक नयाँ उदाहरण प्रस्तुत गऱ्यो। १९३० को दशकको अन्त्य र ४० को दशकको मध्यतिर इङ्ल्यान्ड र अमेरिकामा उत्पादनमुखी अर्थशास्त्र विकसित भएको थियो। यो सिद्धान्त विकास अर्थशास्त्रको अति महत्त्वपूर्ण प्रारम्भ थियो। यस सिद्धान्तअनुसार विकासका लागि अर्थव्यवस्थाहरूमा उत्पादनको केही अंशको बचत र लगानी हुनु अनिवार्य हुन्छ। कुनै खास अवस्थामा बचत र लगानीको वृद्धिदर नयाँ लगानीको उत्पादनशीलतामा निर्भर रहन्छ। अर्कोतिर लगानीले उत्पादन क्षमता सिर्जना गर्दथ्यो जसले आम्दानी र नयाँ माग वृद्धि गरी सन्तुलन ल्याउने गर्दथ्यो। यसरी अर्थव्यवस्थाहरूको विकास हुन्छ र तदनुसार उत्पादन र जीवनस्तर पनि माथि उठ्ने गर्दछ। जसका लागि कुल राष्ट्रिय उत्पादन (GNP)मा चाहिएको वृद्धिदर हासिल गर्न आवश्यक 'बचत अनुपात' स्थापनाजस्ता उपाय आवश्यक हुन्छ।

विकास अर्थशास्त्रीहरू यस सिद्धान्तलाई भर्खरै पत्ता लगाइएका 'गरिब' राष्ट्रहरू अर्थात् बचत स्तर साह्रै सीमित भएका देशहरूमा प्रयोग गर्न प्रयासरत थिए तर छिट्टै नै उनीहरूले त्यस्ता मुलुकहरूमा बचतको वृद्धि प्रक्रियाको तह साह्रै सीमित (बचत खाडल) भएको पाए। उनीहरूले लगानीका लागि औद्योगिकीकरणजस्तो सम्पन्न अखडा फेला पारे, जसमा पुँजी सञ्चयको फाइदा कुनै अन्य क्षेत्रमा भन्दा धेरै थियो। विकास अर्थशास्त्री, डब्लु.ए. लेविसले १९४६ मा जमैकाको औद्योगिकीकरण कार्यक्रमको (मियर १९८४:१४३ मा उद्धृत गरिएको) प्रसङ्ग दिँदै लेखेअनुसार औद्योगिकीकरण विकासको कुँजी थियो भन्ने कुरा घाम जस्तै छर्लङ्ग थियो। औद्योगिकीकरणले पिछडिएको आर्थिक अवस्थाको विकास तथा आधुनिकीकरणको बाटो मात्र नखुलाई लुइसले (मियर १९८४:१४३) भने झैं स्थानीय समुदायलाई 'सीप प्रशिक्षण र कारखाना अनुशासनमा अभ्यस्त' पनि बनाउँछ। अति अभावको अवस्थामा फ्याँकिएका अतिरिक्त जनसङ्ख्याका ठूला

समूहहरू उत्पादनमा क्रियाशीलता ल्याउन र अन्तर्राष्ट्रिय व्यापारमा बढी प्रतिष्पर्धी हुनका लागि उत्तमा मार्ग हुन सक्दथे। वास्तवमा औद्योगिकीकरण प्रक्रियाको चुरोका रूपमा सन् १९५० को दशकमा प्रतिपादित गरिएका मोडलहरू रहेका थिए। औद्योगिकीकरण स्वःस्फूर्त नहुने हुँदा योजना भित्र्याइयो, 'बचत खाडल' भर्न र आवश्यक प्रविधिहरू भित्र्याउन वैदेशिक सहयोग, ऋण र लगानी आवश्यक थिए। गरिबी, न्यून उत्पादकत्व, पुँजीको अभाव आदिको दुष्चक्र तोड्नलाई एक बृहत् प्रारम्भिक प्रयास आवश्यक पर्ने कुरामा केही अर्थशास्त्रीहरू विश्वास गर्दथे। उनीहरू सो कार्य उचि थियो भन्ने मान्दथे। यदि प्रयाप्त पुँजी र सही प्रविधिहरू सुरक्षित गर्न सकिए पिछडिएका अर्थव्यस्थाहरू आधुनिक हुन सक्छन् भन्नेमा उनीहरू सबैको सहमति थियो।[४]

ल्याटिन अमेरिकामा युद्ध पूर्वको आर्थिक-सङ्कथन फरक प्रकृतिको थियो। त्यस समयसम्म आर्थिक सङ्कथन १९५० पछि त्यहाँ परिचित गराइएको व्यावहारिक अर्थशास्त्र वा समाजशास्त्रजस्तो नभई १९औं शताब्दीको निबन्धजस्तो थियो जसमा आर्थिक, सामाजिक र राजनैतिक तत्त्वहरू अभिन्न थिए। जुन व्यावहारिक अर्थशास्त्र वा समाजशास्त्रले १९५० पछि त्यहाँ परिचित गरायो। विशेषतः १९२० र १९३० को दशकमा निश्चय नै परिवर्तनहरू आएका थिए, जसले विकास अर्थशास्त्र (पोजिटिभिजमको शेष र बढ्दो औद्योगिक वर्ग, 'आधुनिकीकरण' र औद्योगिकीकरणको पहिलो दशक) का लागि आधार तयार पाऱ्यो। तर त्यस बेला नववैज्ञानिक जोसले ओतप्रोत भई अगाडि ल्याइएका प्रस्तावहरू विकासको अवधारणापछि आएका प्रस्तावहरूभन्दा धेरै फरक थिए। कोलम्बियामा विश्वव्याङ्कको मिशन १९४९ आगमनसम्म यो सत्य थियो र युद्धपछि आर्थिक संकथनको रचनामा मात्र परिवर्तन भयो। उक्त समयावधिमा नयाँ संरचना प्रस्तुत गरिएको थियो जसले सैद्धान्तिक सङ्ग्रह (विकास अर्थशास्त्र), धेरै अभ्यासहरू (जस्तै नीति र योजना) र अन्तर्राष्ट्रिय तथा राष्ट्रिय संस्थाहरूका साथ राजनैतिक र आर्थिक घटनाक्रमहरूमा एक नयाँ आर्थिक सङ्कथन स्पष्ट पार्दै संङ्गठित पनि बनायो। यसरी एउटा नयाँ प्रणाली अस्तित्वमा आयो जसले आर्थिक सङ्कथनमा आधारित लक्ष्य, धारणा र रणनीतिहरूलाई रूपान्तरण गऱ्यो। जे होस्, अविकसित समाजमा सुधार ल्याउने प्रयासको नेतृत्व गर्न अर्थशास्त्र अगाडि आयो। यसले आर्थिक र सामाजिक जीवनलाई पूर्णतः भिन्न पथबाट विकास अभ्यासमा प्रवेश गराउनु थियो।

---

४ १९५० को दशकमा प्रस्तावित मोडलहरूमा नुर्क्से (पुँजी निर्माण र 'सन्तुलित वृद्धि' गरिबीको कुचक्र तोड्ने साधनको रूपमा), डब्लु ए लेविस ('द्वैध अर्थव्यवस्थाको' मोडल), पि रोसेन्सटेइन रोडन (औद्योगिकीकरणका लागि ग्रामीण अविकासको परिचालनमा लगानी गर्न 'ठूलो धक्का' मा जोड दिएका छन्), एच.लिबेन्सटेइन ('तल्लो तहको सन्तुलन अवस्था'को अस्तित्वको पूर्वधारणा दिन्छन्)। रोस्टोको प्रसिद्ध स्टेजेज अफ इकोनोमिक ग्रोथ(रोस्टो १९६०)ले धेरै किसिमबाट ती प्रयासहरूलाई पुष्टि गर्दछ। आर्थिक विकासका सम्बन्धमा १९५०को दशकमा लेखिएका उत्कृष्ट लेखहरू अग्रवाल र सिं (१९५८) मा पाइन्छ। मियर (१९८४) र सिर्स र मियर (१९८४) मा पनि पूर्वाद्धका केही सिद्धान्तहरूको चर्चा गरिएको पाइन्छ।

### खाद्यान्न र पोषण योजनाः विकासको कार्यमा एक नमुनागत घटना

कसरी 'विकास' ले अभ्यास व्यवस्था सङ्गठित गऱ्यो भन्नेबारेमा चर्चा हुनु पर्दछ। विकासको परीक्षण गर्नु भनेको स्थापित सिद्धान्तहरू र संस्थागत व्यवस्थाहरूबाट उत्पन्न हुने निश्चित समस्याहरूका बारेमा परीक्षण गर्नु हो। ती समस्याहरू स्थापित सिद्धान्त र संस्थागत व्यवस्थाबाट स्वतन्त्र छैनन्। म अब कसरी एकअर्कामा सम्बन्ध राख्ने निश्चित ज्ञान र शक्तिको प्रविधि प्रयोग गरी समस्या र भोक जन्माउन सकिन्छ भन्ने देखाउन चाहन्छु।

विगत ४० वर्षमा तेस्रो विश्व मुलुकहरूमा लगातार देखिएका समस्याहरू कुपोषण, भोकमरी आदिसँग जुध्न अपनाइएका रणनीतिहरूले ती समस्याहरू उन्मूलन गर्न नसके पनि कम गर्न सफल भएको छ। सन् १९७० सम्म कुपोषण हुनाको कारणमा फरक स्तरका अपर्याप्त खाद्यान्न उत्पादन, स्वास्थ्य, सरसफाइ, शिक्षालाई ठहराइएको थियो र सामान्यतः ती कारणहरूलाई पृथक्-पृथक् रूपमा व्यवहार गरियो। १९७० को दशकको सुरुतिर गरिएका हरित क्रान्तिलगायतका बृहत् रणनीतिक प्रयासहरूले के विश्वास दिलायो भने व्यापक र एकीकृत रणनीतिहरूले मात्र जटिल रूपमा रहेको कुपोषण र भोकमरीका कारणहरूको सामना सफलतापूर्वक गर्न सक्दछ। नयाँ सिद्धान्तका अनुसार खाद्यान्न र पोषण नीति राष्ट्रिय विकासको अभिन्न भाग हुनु पर्दथ्यो भने खाद्यान्न र पोषण प्रणाली सञ्चालनका सबै मुख्य पक्षहरू — खाद्यान्नको पूर्ति (उत्पादन, मूल्य, आयात र निर्यात आदि), खाद्यान्नको माग (आम्दानी, खाद्यान्न रुचि, शिक्षा, आर्थिक सहायता र खाद्यान्नको जैविक उपयोगिता) स्वास्थ्य, (वातावरणीय तत्त्वहरू, उमेर, लिङ्ग र अरू यस्तै) लाई महत्त्व दिनु पर्ने हुन्थ्यो। यसरी पोषणको क्षेत्रमा पहिलोपटक एउटा योजना ल्याइयो। यस अतिरिक्त एक नयाँ विधाको आवश्यकता स्पष्टतः किटान गरियो।

यो विधालाई खाद्यान्न र पोषण नीति तथा योजना (FNPP) नामाकरण गरियो। १९७० को दशकमा उत्पत्ति तथा विकास भई दस वर्ष पूरा नपुग्दै ओरालो लाग्ने यस रणनीतिक प्रक्रियाले तेस्रो विश्वमा कसरी विकासको नाममा त्यहाँ विद्यमान सामाजिक सम्बन्धलाई बदल्दै ज्ञानको विधा, अनगिन्ती कार्यक्रम तथा नयाँ संस्थाहरू स्थापित गरिन्छ? भन्ने प्रमाणित गर्दछ। १९७१ मा एमआइटीमा भएको बैठकले 'पोषण नीति र योजना गतिविधिमा विशेष रूपले अन्तर्राष्ट्रिय समुदायको ध्यानाकर्षण गर्ने काम गऱ्यो' (स्क्रिम्शँ र वालेस्टाइन १९८२:१२)। यो विधालाई १९७३ मा औपचारिक रूपमा दुई भागका पुस्तकहरू प्रकाशित गरी अझ परिष्कृत गरियो। यसमध्ये एउटा भाग १९७१ मा एमआइटीमा सम्पन्न बैठकमा आधारित थियो (बर्ग १९७३, बर्ग, स्क्रिम्शँ र कल १९७३)। सन् १९८२ मा यो विधाको अन्त हुनुभन्दा पहिल्यै यस विधाअन्तर्गत कम्तीमा पनि छ भाग पुस्तक, विशिष्ट अध्ययनहरू तथा FNPP मा जर्नल लेखहरू

प्रकाशित भइसकेका थिए।[५] १९७२ को शरद ऋतुमा रकफेलर फाउन्डेसन तथा युएसएडको आर्थिक सहयोगमा अन्तर्राष्ट्रिय पोषण योजना कार्यक्रम एमआइटीमा सुरुआत गरियो। यस कार्यक्रमले प्राकृतिक वैज्ञानिक, इन्जिनियर र समाज वैज्ञानिकहरूलाई एकै ठाउँमा ल्याएर तेस्रो विश्वमा खाद्यान्न र पोषणमा देखिएका समस्याबारे पहिलोपटक छलफल गरायो। १९७५ देखि नै FNPP को मुख्य प्राथमिकताका रूपमा रहेका अनुसन्धान र तालिमलाई सरकार र अन्तर्राष्ट्रिय संस्थाहरूले पहिचान गरिसकेका थिए भने इङ्ल्यान्ड र अमेरिकाका कैयौं विश्वविद्यालयहरूमा विशेष कार्यक्रमहरू सञ्चालित हुँदै थिए जहाँ विश्वभरिका विद्यार्थीहरूलाई नयाँ विधामा तालिम प्रदान गर्ने गरिन्थ्यो।

यही दिशामा अगाडि बढ्ने क्रममा सन् १९७१ मा संयुक्त राष्ट्रसङ्घका धेरै नियोगहरूद्वारा ल्याटिन अमेरिकामा राष्ट्रिय खाद्यान्न तथा पोषण नीतिहरू प्रवर्द्धनका लागि अन्तरनियोग परियोजना (PIA/PNAN)को स्थापना गरिएको थियो। PIA/PNAN नियोग ल्याटिन अमेरिकामा नयाँ सिद्धान्त फैलाउने कार्यका लागि जिम्मेवार (उत्तरदायी) थियो। यस नियोगले विशाल विधिशास्त्र निर्देशिकाद्वारा सुसज्जित भई धेरै देशहरूमा योजनाकारहरूको समूह र पोषणविद्हरूको सल्लाहमा राष्ट्रिय खाद्यान्न र पोषण योजनाहरू सूत्रबद्ध गर्नलाई सक्रियता देखाउने काम गर्‍यो। लिमामा १९७३ मा आयोजित कोलम्बियाली युवा योजनाकर्ताहरूको PIA/PNAN को क्षेत्रीय बैठकमा ल्याटिन अमेरिकाको व्यापक राष्ट्रिय खाद्यान्न र पोषण योजनामा के काम हुन गइरहेको थियो भन्नेबारे धारणा प्रस्तुत गरिएको थियो। दुई वर्षपछि सरकारका उच्च अधिकारिहरूद्वारा उक्त योजनालाई पारित गरियो र १९७६ मा कार्यान्वयनमा लगियो। यसको खर्च कोलम्बियाली सरकार र विश्वव्याङ्कको ऋण, क्यानेडियन अन्तर्राष्ट्रिय विकास नियोग, र युएसएडले बेहोरेका थिए। त्यसै अवधिमा ल्याटिन अमेरिका र एसियाका अरू धेरै राष्ट्रहरूमा पनि यस्तै किसिमका योजनाहरूको विकास भयो।

कोलम्बियाली राष्ट्रिय खाद्यान्न र पोषण योजना (NFNP) कार्यक्रमका आयोजकहरूले 'खाद्यान्न प्रणाली' का प्रमुख तत्त्वहरूलाई असर पार्ने चेष्टा गरेका थिए। अति प्रभावित जनतासम्म पुग्ने लक्ष्य सबै कार्यक्रमहरूमा होसियारीसाथ राखिएको थियो। विशेष गरी विश्वव्याङ्कका अभियानहरूका माग सुहाउँदो गरी राष्ट्रका सबै नगरहरूबाट पहिले कहिल्यै नगरिएको हिसाबले सामाजिक-आर्थिक तथ्याङ्क सङ्कलन गरी व्यवस्थित गरियो र उक्त योजनामा एकीकृत ग्रामीण विकास, साना किसान केन्द्रित तथा प्रयोगात्मक स्वास्थ्य, पोषण र खाद्यान्न कार्यक्रमहरू (प्राथमिक

५ यहाँ उद्धरण गरिएको FNPP को कार्य विश्वव्याङ्कद्वारा १९७३ मा प्रस्तुत 'एकीकृत ग्रामीण विकास' (IRD) को रणनीतिमा आधारित साहित्यमा समावेश छैन। मेरो शोधपत्रमा IRD का शब्दशैली र अभ्यासहरूसमेत नजिकबाट परीक्षण गरिन्छ।

स्वास्थ्य, पोषण शिक्षा, खाद्य प्रमाणीकरण, पारिवारिक बगैंचा, इत्यादि)। समावेश थिए। उक्त योजनाको विस्तृत विश्लेषण गर्न यहाँ असम्भव छ तर विकास नीति अभ्यासहरूको परीक्षणमा आउने यस प्रवृत्तिका केही सामान्य विशेषताहरू केलाउने जमर्को भने यहाँ गर्दैछौं।

प्रायः पोषणको विषयमा, पहिलो कदम उपविधाको निर्माण हो जसलाई परिणामतः विशेष संस्थागत अवयवहरूको आवश्यकता पर्दछ। क्षेत्रहरूको सीमाङ्कन र विज्ञहरूलाई कार्यभार सुम्पनु निश्चय नै नयाँ होइन। यो आधुनिक राष्ट्र निर्माण र यसलाई मजबुत बनाउने प्रक्रियाको विशेषता हो। यद्यपि संस्थाहरूले समस्यालाई विद्यमान तरिकाको आधारमा कसरी परिभाषित गर्छन् भन्ने कुरालाई यहाँ जोड दिनु पर्दछ। जसका आधारमा यिनीहरूले नीतिगत विषयहरूको नियन्त्रण गर्छन्, असमावेशी नीतिहरू थोपर्छन् र सामाजिक सम्बन्धलाई प्रभावित पार्दछन्। ती उपविधाहरू र अवयवहरूबाट कार्यक्रम सञ्चालनमा समस्याहरू उत्पन्न हुन्छन्। यस प्रकारको एउटा उदाहरणमा केही विशेषणहरू ('साना किसान', 'निरक्षर कृषक', 'गर्भवती र सुत्केरी महिलाहरू', आदि) को उत्पादन गरिनुलाई लिन सकिन्छ जसलाई उपयुक्त कार्यक्रमहरूद्वारा सुधार र व्यवस्थापन गरिन्थ्यो। यस्ता विशेषणहरू (सामान्यतया व्यावसायिक सङ्गठनहरूले तिनीहरूलाई दिगो बनाउँछ) ले संस्था र 'आश्रित' बीच देखिने असमानजस्यतालाई ठोस आकार प्रदान गर्दछ र यस प्रक्रियाद्वारा आश्रित (कृषकहरू) को स्थानीय वास्तविकतालाई संस्थाद्वारा उच्च र फराकिलो पारिन्छ। यो प्रक्रियामा विकासका उपकरणद्वारा कृषकहरूलाई उत्पादक, विस्थापन गर्नु पर्ने तत्त्व र परिवर्तन वा आधुनिकताका तत्त्वहरूको रूपमा अथवा राष्ट्रिय अर्थतन्त्रमा एकीकृत गर्नु पर्ने विषयको रूपमा लिइन्छ। अर्को शब्दमा उनीहरूलाई संस्थाको सीमितताभित्र व्यवस्थित र नियन्त्रित गरिन्छ।[६]

तेस्रो विश्वमा खाद्यान्न सङ्कट (मुख्यतः गरिबी र भोकमरी) बारे व्याख्या गर्ने राजनैतिक अर्थशास्त्रीहरू यसलाई विश्वस्तरमा पुँजीको गतिशीलताको नियमसँग हेरी तर्क राख्छन् — दोस्रो विश्वयुद्धपछि पुँजीवादी विकास अवधारणा अवलम्बनको अनिवार्य असर किसानहरूको पूरा वा आंशिक सर्वहाराकरण थियो। उनीहरूले पुँजी सञ्चयका लागि किसानहरूलाई श्रमको सस्तो स्रोतको रूपमा लिनु आवश्यक थियो भन्ने तर्क आत्मसात् गरिरहे (हेर्नुहोस् उदाहरणका लागि बर्किन १९८७, डि जनवरी १९८१)। यद्यपि पुँजीवादमा परिधि क्षेत्रबाट सस्तो खाद्यान्न र श्रमको

६ अभ्यासहरूको व्यवस्थाको रूपमा विकास नीति र योजनाको विश्लेषण क्ले र शाफ्फर (१९८४) र वुड (१९८५) मा पाइन्छ। स्मिथले सामाजिक संवन्धहरूको विधायकको रूपमा संस्थागत अभ्यासहरूलाई अनुसन्धान गर्नाका लागि प्रभावशाली विधिशास्त्रको विकास गरेका छन् (हेर्नुहोस् डि.स्मिथ १९७४, १९८४, १९८६)। सङ्गठन र अभ्यासहरूका सम्बन्धमा विकासको आलोचना प्रयोग गर्ने स्मिथको विधिको एक अनुप्रयोग मुल्लर (१९८६, १९८७) मा पाइन्छ। हेर्नुहोस् एस्कोबार (१९८४-८५)।

निरन्तर आपूर्ति आवश्यक पर्दछ तर विकास नै यस्तो कुरा हो जसले यी अवस्थामा पूर्णता दिन सङ्कथन र उनीहरूको वास्तविकता सामना गर्ने शृङ्खलाबद्ध कार्यक्रमहरूको माध्यमद्वारा किसानलाई महत्त्वपूर्ण भूमिकामा राख्दछ।

गाउँले जनजीवनका सामाजिक सम्बन्धहरूलाई समन्वय गर्दै (जस्तै किसान, व्यावसायिक कृषि, कृषि व्यापार संस्थानहरूका बीचमा) अन्य सम्बन्धहरूलाई उल्झाउँदै (जस्तै लैङ्गिक) र व्यावसायिक सङ्कथनहरूको पूरै वर्गीकरण हुन्छ। जहाँ सबै पात्रहरूको अन्तर्क्रियाहरूद्वारा जबाफदेहीता जुटाउँदै एकअर्कालाई आत्मसात् गर्छ। प्रभावकारी विकास (जस्तै 'हरित क्रान्ति', 'एकीकृत ग्रामीण विकास कार्यक्रम') का माध्यमबाट 'कुपोषित' र 'निरक्षर किसान' को दृष्टिमा देखिएका समस्याहरू निर्मूल गर्नु पर्दछ भन्ने तथ्य उजागर हुन्छ। ती किसानका सङ्घर्ष र संस्कृति वा समस्या समाधानका लागि गरिएको प्रतिरोधका उदाहरणहरू त्यस्ता उपायमा कसैले पाउँदैन। यस्ता कुराहरू विकासका अवयवका बिन्यासद्वारा अवरुद्ध पारिन्छन्।

NFNP को एउटा प्रमुख अंश कोलम्बियाको एकीकृत ग्रामीण विकास कार्यक्रमले स्थानीय क्षेत्रका कर्मचारीहरू (कार्यक्रम विस्तारक, स्वास्थ्यकर्मी, योजनाकर्ताहरू) र विभिन्न प्रकारका साना किसानहरूबीच नयाँ शैलीको अन्तरक्रिया आरम्भ गऱ्यो। त्यस्ता अन्तरक्रियाहरू संस्थाहरूको संलग्नतामा कर्मचारीतन्त्रद्वारा स्वतः संरचित हुन्छन्। जो परिणामतः प्राथमिक रूपमा विश्वब्याङ्क र अमेरिका तथा युरोपका केही विश्वविद्यालयहरूद्वारा उत्पादित FNPP/ग्रामीण विकासका सङ्कथनका आधारमा सञ्चालित हुन्छन्। त्यसै गरी बोगोटाका राष्ट्रिय योजनाकारहरू लगानीका लागि पुँजी प्राप्त गर्न विश्वब्याङ्कका सर्तहरूबीचको अन्तरद्वारा निर्देशित हुन्छन्। यस्ता क्रियाकलापहरूको परिणामस्वरूप कोलम्बियन कृषि क्षेत्रको संरचना पुनर्परिभाषित भएको छ। यस्ता परिणाम निश्चय नै तार्किक र न्यायसङ्गत अभ्यासहरूको सामान्य प्रतिफलजस्तो देखिन्छ जुन प्रायः कुनै क्षेत्रका लागि पनि आपत्तिजनक ठहरिएन। म के कुरामा जोड दिन चाहन्छु भने ती अभ्यासहरू जनमानसमा प्रत्यक्ष प्रभाव पार्ने राजनीतिक क्रियाकलाप मात्र थिएनन्। यदि हामीले विकास कार्यक्रमहरूको काम गराइलाई शक्ति र ज्ञानका साधनहरूको रूपमा बुझ्ने हो र वैकल्पिक परिकल्पना र अभ्यासहरू खोज्ने हो भने त्यसलाई चिरफारसमेत गर्नुपर्ने हुन्छ।

FNPP सङ्कथनको आकर्षणले गर्दा प्रतिपादित योजनाहरू (दुई पुस्तकहरू, एउटा विश्वब्याङ्कको उच्च कर्मचारीद्वारा लेखिएको र अर्को विश्वब्याङ्कका लागि हावर्ड र स्टानफोर्डका प्राध्यापकहरूको टोलीद्वारा तयार पारिएको) ले पुरानो सङ्कथनको चक्र पूरा गरी एउटा अर्को सुरुआत गऱ्यो। यसपटकको नयाँ सङ्कथनले व्यावहारिक तर कम समेटिने नीति प्रतिपादन गऱ्यो (हेर्नुहोस् बर्ग (१९८१), टिम्मर, फ्याल्कन र पियरसन (१९८३)। विकास कसरी गर्न सकिन्छ भन्ने कुराको उदाहरण FNPP भएको भनी हामी दावा गर्दछौं। उपविधाहरूसँग सम्बन्धित कार्यक्रमहरूले विकासका सबै क्षेत्रहरू सम्पन्न देखिन्छन्। अघिल्लो भागमा हामीले एउटा प्रमुख क्षेत्र, विकास

अर्थशास्त्र र त्यसको एक महत्त्वपूर्ण उपविधा, FNPP का बारेमा छलफल गऱ्यौं। बृहत् अनुसन्धान रणनीतिको अंशका रूपमा द्वितीय विश्वयुद्धको उत्तरार्द्धको तेस्रो विश्वको अवस्था चित्रण गर्ने तथा बुझ्ने प्रयास अन्य क्षेत्रहरूमा गरिने सोही खालका खोज अनुसन्धानहरूबाट पनि शायद गर्न सकिन्छ।

## पश्चिममा मानवशास्त्रीकरणः प्रतिरोधको इथ्नोग्राफी, विकास र पश्चिमा अर्थव्यवस्था

१९४५ को उत्तरार्द्धको समयावधिलाई हेरेर विकासको सम्पूर्ण लेखाजोखा गर्न सकिँदैन। 'विकास' उत्पत्तिको सुरुआतदेखि नै अस्तित्वमा रहेका अन्य घटनाहरूसँग जोडिएको हुन्छ। विशेष गरी यसलाई पश्चिमा आर्थिक अभ्यासहरूको बनावट र उपयुक्तता (आर्थिक मानवसँगको सम्बन्ध देखाउन हामी अभ्यस्त छौं) तथा तिनीहरूको तेस्रो विश्वसम्मको विस्तारसँग हेर्नु पर्दछ। प्रथमतः ती अभ्यासहरूले विकास अर्थशास्त्रलाई एउटा ढाँचा प्रदान गऱ्यो।[७]

कोलम्बियन समाजशास्त्री अर्नाल्डो फल्स बोर्डाले एटलान्टिक किनारा क्षेत्रमा अमेरिकन कम्पनीहरूद्वारा गरिएको एउटा घटनाको उल्लेख गरेका छन्। यी कम्पनीहरूद्वारा गरिएका काँडेतारको हानिरहित प्रयोग धेरै क्रियाकलापहरूमध्येको एक थियो तर यसको धेरै महत्त्वपूर्ण असर भने स्थानीय जनमानसमा रह्यो।

विदेशीहरू भूमिको सामुदायिक प्रयोगको कडा रूपमा विरोध गर्दथे। तर यो व्यवस्था स्थानीय सांस्कृतिक परिचय र अर्थव्यवस्थाको मूल अंश थियो। कृषि उत्पादनका लागि विदेशी काँडेतारको प्रयोग (पहिलोपटक १८७५ र १८८० मा देशमा भित्र्याइएको थियो) उचित र प्राकृतिक अभ्यासको रूपमा बढाइयो। तथापि उक्त अभ्यासले लोबाका कृषकहरूलाई विशेष गरी वितृष्णातर्फ उन्मुख बनाइराख्यो। जीवनका बारेमा उनीहरूको तर्क फरक थियो— जब उनीहरूले आफ्नो सामुदायिक भूमिलाई काँडेतारले घेरेको देख्दथे र प्रचलित रीतिरिवाजहरूको घेरा काटिन्थ्यो, तब नीजि स्वामित्वसम्बन्धी पवित्र सिद्धान्तको रक्षाका खातिर उनीहरूको क्रोध झन् बढेको अनुमान गर्न सकिन्थ्यो (फल्स बोर्डा १९८४:१७२बी)।

समकालीन सांस्कृतिक प्रतिरोधका सम्बन्धमा पश्चिमी कोलम्बियामा गरिएको अर्को अध्ययनमा, मानवशास्त्री माइकल तोसिगले निश्चित अभ्यासहरूको व्याख्या यसरी गरेका छन्:

> कृषकहरूले प्रतिनिधित्व गर्ने अप्राकृतिक दुष्ट अभ्यासका कारण हामीले वस्तुपरक समाजमा हाम्रा दैनिक आर्थिक कारोबारहरूलाई प्राकृतिक रूपमा अवलम्बन गरका छौं र यो विश्वभरि

---

७ 'विकासको वंशक्रम' लाई फुकोको अर्थमा लिनु पर्दछ। फुको (१९८४:३-२६)मा वंशक्रमको प्रकृति सम्बन्धमा स्पष्ट उल्लेख भएको छ मेरो शोधपत्रमा तर्क गरिए झैं विकासको वंशक्रमको अभिन्न अङ्गका रूपमा पश्चिमी अर्थव्यवस्थाको विधान र बाँकी विश्वमा यसको विस्तारलाई हेरिनु पर्दछ।

> नै यस्तै छ। यस प्रकारको प्रतिनिधित्व तब देखा पर्दछ जब तिनीहरू सर्वहाराकरण गरिन्छन् र यसले महत्त्व दिने जीवनपद्धति उत्पादनको पुँजीवादी सम्बन्धहरूमा स्थापित हुन्छ। कृषकका जीवनपद्धतिमा न त यो देखा पर्दछ न महत्त्व राख्दछ (तोसिग १९८०:३)।

तोसिगका अनुसार यस प्रकारका अभ्यासहरू (निश्चित भूतप्रेतप्रतिको विश्वासमा आधारित) को सुरुआत पुँजीवाद पूर्वको अभिमुखीकरणको परिणामस्वरूप वस्तुवादी परिस्थितिसँगै कृषकहरूले बढ्दो रूपमा सामना गर्नु पर्ने अनुभवमा आधारित हुन्छ। कैयौं लेखकहरूले अन्य क्षेत्रहरूमा प्रतिरोधको अध्ययन गरेका छन्। उदाहरणका लागि ग्वाटेमालामा पूर्ण पुँजीवादी उत्पादनको विकल्पका रूपमा 'सामान्य उपयोगका वस्तु' उत्पादनको सत्यता, एन्डियन मानिसहरूले व्यापारिक र पुँजीवादी दखलका अगाडि आफ्नो समुदायहरूको रक्षा, इत्यादि (मेलोन १९८३, सि. स्मिथ १९८४) पाइन्छ।

तसर्थ तेस्रो विश्वसमुदायद्वारा पुँजीवादको विस्तारलाई दिइएका प्रतिक्रियाहरू हाल महत्त्वपूर्ण मानवशास्त्रीय चासो बनेका छन्। प्रतिरोधको प्रश्नसँग सम्बन्धित कार्यहरूको शृङ्खला देखा परेको छ। जसमा ऐतिहासिक प्रक्रियाको अनुसन्धान, सामाजिक अभ्यास र साङ्केतिक मध्यस्थताहरू त्यस्ता प्रतिक्रियाहरूको उत्तरमा एकअर्कासँग सम्बन्धित छन् (हेर्नुहोस् माथि उल्लेख गरिएका तोसिग, फल्स बोर्डा र स्मिथका साथै कोमारोफ (१९८५), नाश (१९७९), र स्कट (१९८५))। मानवशास्त्रमा यस धारको समीक्षाका लागि मार्कस र फिस्कर (१९८६: भाग-४) र एस्कोबार (१९८८) हेर्नुहोस्। तर यस विषयलाई यसको बृहत् अर्थमा बुझ्नु पर्दछ। अर्थात् आधुनिक संस्कृतिमा दिइएको व्यवहारद्वारा चरित्रचित्रण गरिएको विषय र निश्चित अभ्यासमा भिजेको सिर्जनाको रूपमा लिनु पर्दछ। तसर्थ हामीले पुँजीवादको मूल्याङ्कन राजनैतिक अर्थव्यवस्थाले गर्ने गरेको सीमित परिभाषा जस्तै उत्पादनको अर्थमा मात्र नगरी प्रस्फुटीकरणको रूपमा गर्नु पर्दछ। जसलाई शायद पश्चिमी अर्थव्यवस्था भनिन्छ। जुन व्यवस्था अठारौं शताब्दीको अन्त्यतिर उत्तरपश्चिमी युरोपमा गठबन्धित तीन प्रणालीहरूको समायोजनः उत्पादन प्रणाली (मुख्य रूपमा, पुँजीवादी विश्वअर्थव्यवस्था), शक्तिको व्यवस्था (विधागत र साधारणीकरण प्रणाली) र महत्त्वको व्यवस्था (आदर्श, विज्ञान र प्रतिनिधित्व, उदारवाद र उपयोगितावादजस्ता दार्शनिक विचारहरू तथा श्रम र उत्पादनको प्राधान्य विचारहरूको समावेश) भई परिचालित थियो। यस प्रकार पश्चिमी अर्थव्यवस्थाको प्रकृति र बाँकी विश्वमा यसको विस्तारको महत्त्वलाई बुझ्न सकिन्छ।

यस प्रकृतिको अनुसन्धानले यस्ता प्रक्रियाहरू मन्द थिए भन्ने देखाउँछ। यस्ता आर्थिक अभ्यासहरू अहिले आएर समाजहरूमा समुदायका सामूहिक सम्पत्ति भएका छन्। तिनीहरू साधारण क्रियाकलाप र व्यवहारपद्धतिमा पारदर्शी देखिन आएका छन्। यथार्थमा यी अभ्यासहरू र अहिले ठूलो मात्रामा विकास प्रक्रियाका माध्यमबाट तेस्रो विश्वमा प्रवेश पाइरहेका छन्। विकास

बृहत् रणनीति भएको छ तर यो अहिलेसम्म पनि ल्याटिन अमेरिका/तेस्रो विश्वमा हुन सकेको छैन। यसरी लामो समय देखिका सांस्कृतिक अभ्यासहरू र उद्देश्यका साथसाथै उनीहरूद्वारा संरक्षित सामाजिक सम्बन्धहरू विकृत गरिन्छन्। यसका परिणामहरू व्यापक छन्। मुख्य रूपमा समुदायका आधारभूत आकाङ्क्षा र अभिलाषाहरू तोडमरोड गरिन्छन्। यसैले विकासको प्रवेशको असर सामाजिक र आर्थिक प्रभावको सीमामा रहेर मात्र हेर्नु हुँदैन। मुख्यतः यसलाई सांस्कृतिक अर्थ र अभ्यासहरूमा ल्याउने परिवर्तन र विकृतिसँग पनि हेर्नु पर्दछ।

उत्पादन शक्ति र महत्त्वका प्रणालीहरूको समायोजनको रूपमा पश्चिमी अर्थव्यवस्थाको विश्लेषण पहिले नै उल्लिखित मानवशास्त्रीय चासोका विषयहरूमा महत्त्वपूर्ण हुन जान्छ। निश्चित किसिमका सामाजिक प्राधान्यतालाई अर्थशास्त्रका प्राधान्य सङ्कथनहरूको परिचय, संस्थाहरूमा तिनीहरूको अभिलेख र अभ्यास (उदाहरणका लागि विकासद्वारा) र यी प्रक्रियाहरूका प्रतिरोध समावेश गरी स्थानीय ऐतिहासिक अवस्थाहरूमा तिनीहरूको प्रभावहरूबीचको अन्तरसम्बन्धको विश्लेषण गर्न सकिन्छ। यस रणनीति 'पश्चिमी मानवशास्त्रीकरण' (पश्चिममा सर्वव्यापक हुने विषयहरूः ज्ञानमिमांशा-दर्शन र अर्थशास्त्रको ऐतिहासिक चरित्र - रेन्बो १९८६:२४१) मा मात्र नभई परिचय र विविधताको भूसांस्कृतिक वितरण र फरक-फरक मानिसहरूका भौतिक र सांस्कृतिक सम्बन्धका बारेमा जानकारी राख्नका लागि समेत उपयोगी हुन्थ्यो।

यति हुँदाहुँदै पनि आधुनिकताको मानवशास्त्र, फुकोका अनुसार, आर्थिक मानव (Homo oeconomicus) को हो। जसले निश्चित रूपमा अनुशासित व्यक्ति जनाउँदछ। प्राप्त गरिएको परिपाटी तोकिएको तर्क पुँजीको नियमको परिपाटीमा आधारित छ। आधुनिकता प्राथमिक रूपमा आफैमा युरोपियन अनुभव भएको छ जुन सर्वव्यापी हुन खोजेको छ। विकास प्रक्रियाबारे हालका आलोचनाहरूले खोक्रो नभई आशा लाग्दो स्पष्ट आन्तरिकता, ज्ञान र शक्ति का प्रश्नहरूलाई सम्बोधन गर्दछ। यी आलोचनाहरूबाट बढ्दो सङ्ख्याका सामाजिक आन्दोलनहरूले ऊर्जा प्राप्त गरिरहेका छन् जसले विकासको आर्थिक चरित्रलाई नकार्दछन्। तर अन्य चासोका विषयहरूमा (पर्यावरणीय र शान्ति र महिलाका विषयहरू र आदिवासी समुदायहरू) भित्रैदेखि सचेत छन्, अन्तरनिहित शक्तिको निर्माणकला परिवर्तनमा स्थानीय ज्ञानको प्रयोगलाई महत्त्व दिन्छन्। यी नयाँ आन्दोलनहरूको आन्तरिक शक्तिमा ४० वर्ष पुरानो विकासका अवयवहरू जुन अझै अस्तित्वमा रहेका छन्, को आवसान तर आउँदो नयाँ युगमा बढी बहुलवादी र कम दमनकारी विकास प्रक्रिया देख्न सकिन्छ।[८]

---

८ इस्टिवा (१९८७), फाल्क (१९८७), फल्स वोर्डा (१९८५, १९८८), कोथारी (१९८४, १९८७), नान्डि (१९८७), राहनेमा (१९८६, १९८८), शेठ् (१९८४, १९८७), शिवा (१९८६) मा यी तल्लो तहका नयाँ सामाजिक आन्दोलनहरूको प्रारम्भिक प्रतिविम्व पाइन्छ। मेरो शोधपत्रको निश्कर्षमा यी कार्यहरूका सार र व्याख्या प्रस्तुत गरिन्छ।

## सन्दर्भसामग्री


Agrawala, A.N., and S.P. Singh,
*The Economics of Underdevelopment*. Bombay: Oxford University Press, 1958.

Ardnt, H.W.
Economic Development: A Semantic History. *Economic Development and Cultural Change* 29(3): 457-466, 1981.

Barkin, D.
The End to Food Self-sufficiency in Mexico. *Latin American Perspectives* 14(3): 271-297, 1987.

Berg, A.
*The Nutrition Factor*. Washington, D.C.: The Brookings Institution, 1973.
*Malnourished People: A Policy View*. Washington, D.C.: The WorldBank, 1981.

Berg, A., N. Scrimshaw, and D. Call, eds.
*Nutrition, National Development and Planning*. Cambridge: MIT Press, 1973.

Binder, L.
The Natural history of Development Theory. *Comparative Studies in Society and History* 28(1): 3-33, 1986.

Caille, A.
The Two Myths: Scarcity and Rationality. *Development: Seeds of Change* 1986 (3)68-73, 1986.

Chomsky, N.
On Power and Ideology. *The Managua Lectures*. Boston: South End Press, 1987.

Clay, E. J., and B. Shaffer, eds.
Room to Manoeuvre. *An Exploration of Public Policy Planning in Agricultural and Rural Development*. Rutherford, N. J.: Fairleigh Dickinson University Press, 1984.

Comaroff, Jean
*Body of Power, Spirit of Resistance: The Culture and History of South African People*. Chicago: University of Chicago Press, 1985.

de Janvry, A.
*The Agrarian Question and Reformism in Latin America*. Baltimore: Johns Hopkins University Press, 1981.

Escobar, A.
Discourse and Power: Michel Foucault and the Relevance of His Works for the Third World. *Alternatives* 10(3):377-400, 1984-85
*Power and Visibility: The Invention and Management of Development in the Third World*. Unpublished Ph.D. dissertation, University of California, Berkeley, 1987.
Post-War Development in Columbia: Implications for Anthropology. Paper read at the Stanford University Anthropology Colloquium, March 11, 1988.

Esteva, G.
Regenerating People's Space. *Alternatives* 12(1):125-152, 1987.

Falk, R.

The Global Promise of Social Movements: Explorations at the Edge of Time. *Alternatives* 12(2):173-196, 1987.

Fals Borda, O.

Historia Doble de la Costa. Vol.3. *Resistencia en el San Jorge*. Bogota: Carlos Valencia Editores, 1984.

The New Social Movements in Latin America. Regent's Lecture, University of California, Santa Cruz, May 5, 1988.

Foucault, Michel

*The Order of Things: An Archaeology of the Human Sciences*. New York: Vintage Books, 1970.

*The History of Sexuality. Vol. I*. An Introduction. Robert Hurley, trans. New York: Vintage Books, 1980.

*Power/Knowledge*. New York: Pantheon Books, 1981.

*The History of Sexuality. Vol. II*. The Use of Pleasure. Robert Hurley, trans. New York: Vintage Books, 1985.

Frow, J.

Discourse and Power. *Economy and Society* 14(2):193-214, 1985.

Fuenzalida, E.

The Reception of Scientific Sociology in Chile. *Latin American Research Review* 18(2):95-112, 1983.

The Reorganization of Knowledge Institutions in Latin America Between 1950 and 1980. Paper presented at the Conference, "Michel Foucault: History of the Present" University of California, Berkeley, March 30, 1985.

Galbraith, Kenneth

*The Nature of Mass Poverty*. Cambridge: Harvard University Press, 1979.

Gendzier, I. L.

*Managing Political Change: Social Scientists and the Third World*. Boulder, Colo.: Westview Press, 1985.

International Bank for Reconstruction and Development

*The Basis of a Development Program for Columbia*. Baltimore: Johns Hopkins University Press, 1950.

Kothari, R.

The Non-Party Political Process. *Economic and Political Weekly* 19(5):216-224, 1984.

Masses, Classes, and the State. *Alternatives* 11(2):167-184, 1987.

Little, I. M.

*Economic Development: Theory, Policy and International Relations*. New York: Basic Books, 1982.

Mallon, F.

*The Defense of Community in Peru's Central Highlands*. Princeton: Princeton University Press, 1983.

Marcus, George E., and Michael M. J. Fischer

*Anthropology as Cultural Critique: An Experimental Moment in the Human Sciences*. Chicago: University of Chicago Press, 1986.

Meier, G.

*Emerging From Poverty*. New York: Oxford University Press, 1984.

Mintz, S. W.
On the Concept of a Third World. *Dialectical Anthropology* 1(4): 377-382, 1976
Morande, P.
*Cultura y Modernizacion en America Latina.* Santiago: Pontificia Universidad Catolica de Chile, 1983.
Mueller, A.
The Bureaucratization of Feminist Knowledge: The Case of Women in Development. *Resources for Feminist Research* 15(1):36-39, 1986.
*Peasants and Professionals: The Social Organization of Women in Development.* Unpublished Ph.D. dissertation, Ontario Institute for Studies in Education, University of Toronto, 1987
Nandy, A.
Cultural Frames for Social Transformation: A Credo. *Alternatives* 12(1):113-124, 1987.
Nash, June
*We Eat the Mines and the Mines Eat Us: Dependency and Exploitation in Bolivian Tin Mines.* New York: Columbia University Press, 1979.
Pletsch, C. E.
The Three Worlds, or the Division of Social Scientific Labor, circa 1950-1975. *Comparative Studies in Society and History* 23(4):565-590, 1981.
Rabinow, Paul
Representation are Social Facts: Modernity and Post-Modernity in Anthropology. *In Writing Culture.* James Clifford and George E. Marcus, eds. Pp.234-261. Berkeley: University of California Press, 1986.
Rahnema, M.
Under the Banner of Development. *Development: Seeds of Change* 1986(1/2):37-46, 1986.
Power and Regenerative Processes in Micro-Spaces. *International Social Science Journal* (in press), 1988.
Rostow, W. W.
*The Stages of Economic Growth: A Non-Communist Manifesto.* Cambridge: Cambridge University Press, 1960.
Said, Edward
*Orientalism.* New York: Vintage Books, 1979.
Scott,J.C.
Weapons of the Weak. *Everyday Forms of Peasant Resistance.* New Haven: Yale University press, 1985.
Scrimshaw, N., and M. B. Wallerstein
*Nutrition Policy Implementation.* New York: Plenum Press, 1982.
Seers, D
*The Political Economy of Nationalism.* Oxford: Oxford University Press, 1982.
Seers, D., and G. Meier
*Pioneers in Development.* Oxford: Oxford University Press, 1984.

Sheth, D. L.
Grassroots Initiatives in India. *Economic and Political Weekly* 19(6):259-262, 1984.
Alternative Development as Political Practice. *Alternatives* 12(2): 155-172, 1987.
Shiva, V.
Ecology Movements in India. *Alternatives* 11(2):255-273, 1986.
Smith, C.
Local History in Global Context: Social and Economic Transition in Western Guatemala. *Comparative Studies in Society and History* 26(2):193-228, 1984.
Smith, D.
The Social Construction of Documentary Reality. *Sociological Inquiry.* 44(4):257-268, 1974.
Textually Mediated Social Organization. *International Social Science Journal* 36(1):59-75, 1984.
Institutional Ethnography: A Feminist Method. *Resources for Feminist Research* 15(1):6-13, 1986.
Stikkers, K. W.
The Life-World Roots of Economy. *Journal of the British Society of Phenomenology* 17(2):167-176, 1985.
Taussig, Michael
*The Devil and Commodity Fetishism in South America.* Chapel Hill: University of North Carolina Press, 1980.
Timmer, P. W. Falcon, and S. R. Pearson
*Food Policy Analysis.* Baltimore: Johns Hopkins University Press, 1983.
Vint, J.
Foucault's Archaeology and Economic Thought. *Journal of Interdisciplinary Economics* 1:69-85, 1986.
Wallerstein, Immanuel
*The Politics of the World Economy.* Cambridge: Cambridge University Press, 1984.
Wood, G.
The Politics of Development Policy Labelling. *Development and Change* 16:348-359, 1985.
Worsley, P.
The Three Worlds. *Culture and World Development.* Chicago: University of Chicago Press, 1984.

# डा. के.आई. सिंह र नेपालको राजनीति : एक समीक्षा

चुरामणि मरासिनी




**पुस्तक:** डा. के.आई. सिंह र नेपालको राजनीति (२००७-२०१७)
**लेखक:** डा. भवेश्वर पंगेनी
**प्रकाशक:** अड्रोईट पब्लिसर
**पृष्ठ:** ४६१
**प्रकाशन मिति:** सन् २००५
**मूल्य:** रु ५५०
**ISBN:** 81-87392-64-9

डा. के.आई. सिंहका नामले परिचित कुँवर इन्द्रजित सिंह नेपाली राजनीतिको एक कालखण्डका अत्यन्त चर्चित व्यक्तित्व हुन्। २००७ सालको राजनीतिक क्रान्तिमा पश्चिम क्षेत्र भैरहवाबाट आन्दोलनलाई एउटा उचाइमा पुऱ्याउन महत्त्वपूर्ण योगदान दिने सिंहको साङ्गोपाङ्गो परिचय दिने गरी त्रि.वि. इतिहास केन्द्रीय विभागका डा. भवेश्वर पंगेनीले *के.आई. सिंह र नेपालको राजनीति (वि.सं. २००७-२०१७)* नामक पुस्तक पाठकसामु ल्याएका छन्। विद्यावारिधिको शोधपत्रलाई विस्तृत रूपमा परिमार्जन गरी पुस्तकाकारका रूपमा बाहिर ल्याइएको यस पुस्तकले श्री सिंहका बारेमा जिज्ञासा राख्ने पाठक वर्गहरूलाई महत्त्वपूर्ण जानकारी दिन सक्ने छ। ६ परिच्छेदमा विभक्त गरिएको प्रस्तुत पुस्तक ४६१ पृष्ठको छ। लेखकले उपसंहार खण्डसमेत राखेका छन्। जसले गर्दा पुस्तक पढेर बुझ्न अझ सजिलो भएको छ।

इतिहास लुकेका कुराहरूको खोजी कार्य हो। यो जटिल छ। अझ कुनै कालक्रममा कुनै कारणले चिनिएका व्यक्तित्वका बारेमा खोज अनुसन्धान गर्नु साहसिक तथा चुनौतीपूर्ण काम हो। कतिपय घटनाक्रममा आधारित रही आ-आफ्नो तर्कहरू राख्ने गरिन्छ भने आ-आफ्ना विश्लेषण र निष्कर्षहरू पनि हुने गर्छन् र यस्ता खाले तर्क र विश्लेषणको आधारहरू खोजमूलक अनुसन्धानमा आधारित सामग्री हुने गर्छन्। यसै सन्दर्भमा यो खोजमूलक पुस्तक प्रकाशनमा आएको छ। यद्यपि यस पुस्तक खोजमूलकभन्दा बढी वर्णनात्मक पद्दतिमा आधारित रहेको देखिन्छ। मौखिक भनाइ, अन्तर्वार्ता, टेपवार्ता एवं तात्कालिक स्वदेशी तथा विदेशी पत्रपत्रिकाको अध्ययन गरी पुस्तक तयार भएको छ। लेखकले महत्त्वपूर्ण प्रसङ्गमा आफ्नो पक्षबाट मूल्याङ्कन गरेका छन्। तर उक्त मूल्याङ्कन सिंहका सबल पक्षतर्फ बढी केन्द्रित भएकाले लेखक निष्पक्ष हुन नसकेको पाइन्छ। तापनि

सिंहलाई पढ्ने र बुझ्ने विषयमा रहेको अभावलाई पुस्तकले केही हदसम्म कम भने अवश्य गरेको छ। यस परिप्रेक्ष्यमा श्री पंगेनीले गर्नु भएको यो प्रयास सहानीय छ।

सिंहको सामान्य पारिवारिक परिचय र मुख्य रूपमा राजनीतिमा उनको आगमन कसरी भयो? भन्ने विषयमा परिच्छेद एक केन्द्रित रहेको पाइन्छ। लेखकले सिंहको पारिवारिक पृष्ठभूमिलाई भन्दा राजनीति प्रवेश, राजनीतिमा सक्रियता, आन्दोलनका विषय, नेपाली काङ्ग्रेस पार्टीको सदस्यताजस्ता कुराहरूमाथि जोड दिएका छन्। यस अतिरिक्त उनको व्यक्तित्व एवं व्यवसाय आदि पक्षमा पनि थोरै-धेरै प्रकाश पारेका छन्।

डा. के. आई. सिंहको जन्मतिथिका बारेमा गोरखापत्रको भनाइलाई लेखकले सही मानेका छन्। कतै वि.सं. १९५५ वैशाख, कतै वि.सं. १९६० मा जन्मिएको भनिए पनि (पृष्ठ-१) सरकारी मुखपत्रलाई सही मान्नु लेखकको दृष्टिकोण ठिकै देखिन्छ। भारतीय आर्मीमा 'पे-हवलदारको' जागिर खाएका सिंहले नौतनवामा नेपाली दवाखाना नामको व्यवसाय पनि गर्दथे। 'दवाखानाको डा.' नामले स्थानीय स्तरमा परिचित भएपछि सबैले डा. भनेर चिन्न थाले। तत्पश्चात् उनले डा. के.आई. सिंह नामले प्रसिद्धि कमाएको रोचक प्रसङ्गलाई प्रस्ट पारिएको छ।

आफ्नो जीवनको चार दशक विदेशमा बसे पनि स्वदेशको मायाममता र वस्तुस्थितिका बारेमा उनी परिचित थिए भन्ने विषयको प्रमाणस्वरूप एउटा साप्ताहिकमा डा. सिंहको नाममा छापिएको 'दुःखी नेपाल' नामक लेखलाई लेखकले विभिन्न प्रसङ्गमा उठाएका छन् (पृष्ठ-५)। यसकै आधारमा २००५ सालसम्म उनी कुनै राजनैतिक पार्टीसँग सम्बन्धित थिएनन् भने पनि सिंहका भान्जा वारबहादुरले २००५ मा ने.रा. काङ्ग्रेसको कार्यसमितिमा सिंह पनि थिए भनेका छन् तर रा. काङ्ग्रेसले गरेको कामको बाँडफाँडमा (आन्दोलनको सिलसिलामा) समेत सिंहको नाम नभएको कारण वारबहादुरको भनाइसँग लेखक सहमत हुन सकेका छैनन्। सुरुमा डा. सिंह पार्टी राजनीतिमा लाग्न अनिच्छुक रहे पनि ने.रा. काङ्ग्रेसले भैरहवा क्षेत्रमा खटाएका भोलानाथ तिवारीले बारम्बार नेपाली राष्ट्रिय काङ्ग्रेसको सदस्य बन्नका लागि आग्रह गरेपछि पछि २००५ सालतिर मात्र उनी यसका सदस्य भएका हुन्। तिवारीले नै उनलाई सदस्यता दिलाएका थिए भनेर लेखकले डा. सिंहले प्रधानमन्त्री भएपछि एक भारतीय पत्रिकालाई दिएको अन्तर्वार्तालाई आधार मानेका छन्।

पार्टीभित्र सभापति पदका लागि डिल्लीरमण रेग्मी र वीपीबीचको द्वन्द्वमा डा. सिंहलगायतहरूले कोइरालालाई समर्थन गरेका थिए। त्यसकारण नौतनवा क्षेत्र कोइरालाको पकड मानिन्थ्यो। सम्भवतः यही कुरालाई बुझेर डा. डिल्लीरमण रेग्मीले नौतनवामा सम्बोधन गर्ने कार्यक्रम राखे। सिंहले डा. रेग्मीले सम्बोधन गर्ने क्रममा मञ्चमा गई पूर्वयोजनाबमोजिम माइक खोसेर आफैले भाषण गरी विरोध गरे (पृष्ठ-११)। यस घटनाले डा. सिंह पनि राष्ट्रिय काङ्ग्रेसको सदस्य हुन् भन्ने कुरा व्यापक प्रचार भयो। तत्कालीन राणा सरकारले उनका विरुद्ध पक्राउ पुर्जी काट्यो। उनी औषधी

व्यवसाय छाडेर भूमिगत भए। यही घटनापछि उनी सक्रिय राजनीतिमा संलग्न हुन पुगेका हुन् भन्ने लेखकले ठहर गरेका छन्।

राष्ट्रिय काङ्ग्रेसले २००६ सालदेखि सुरु गरेको दोस्रोपटकको आन्दोलनमा सिंहले हिन्दी र नेपालीमा पर्चा-पम्लेट तयार पारी वितरण गरी अहिंसात्मक आन्दोलनमा सबैलाई समाहित हुन आह्वान गर्न थाले (पृष्ठ-१३)। उनी नेपाली राष्ट्रिय काङ्ग्रेस र नेपाल प्रजातन्त्र काङ्ग्रेस मिली बनेको नेपाली काङ्ग्रेस पार्टीमै संलग्न भए। वैरगनियाँ सम्मेलनमा राणाशाहीविरुद्ध सशक्त आन्दोलन गर्नु पर्नेमा जोड दिइयो। स्मरणीय छ, वैरगनियाँ सम्मेलनले सशस्त्र आन्दोलन गर्ने निर्णय गरेको थियो। मातृका, वीपीमध्ये जो कोहीलाई पनि आन्दोलनको सर्वशक्तिमान् नेता मान्ने प्रस्तावको उनले विरोध गरे र आफू पूर्वसैनिकसमेत भएको कारण सर्वशक्तिमान् नेता आफैं हुन पर्ने प्रस्ताव गरे (पृष्ठ-१७)। पार्टीले मातृकालाई सो जिम्मेवारी सुम्पियो। यसअघि कोइराला बन्धुका निकट रहेका डा. सिंहले यही नेतृत्वको चयनको विषयमा मतभिन्नताका कारण कोइराला विरोधी हुन पुगे भन्ने तथ्य दिए पनि सर्वशक्तिमान् नेता बन्ने डा. के.आई. सिंहको राजनीतिक उच्च महत्त्वकाङ्क्षा थियो भन्ने कुरा लेखकले मान्न सकेका छैनन्। बरु यही घटनाका कारण पार्टी नेतृत्वले गोपालशमशेरलाई भैरहवा क्षेत्रको कमान्डर बनाई श्री सिंहलाई बेवास्ता गरेको र अहोरात्र काममा खटिरहने डा. सिंहजस्ता योद्धालाई युद्धका बखत गोपालशमशेरले सहयोग नगरेको प्रसङ्ग यसै परिच्छेदमा उल्लेख गरिएको छ। तर दुई-दुईपटकसम्मको भैरहवामाथि श्री सिंहले गरेको असफल आक्रमण र त्यसबाट पार्टीमाथि परेको असरका बारेमा श्री पंगेनी मौन देखिन्छन्। मूलतः पार्टी नेतृत्वले पाल्पाका बडाहाकिमसमेतको सहयोग र समर्थन जुटाउन गोपालशमशेरलाई नेतृत्वको जिम्मा दिएको विषयलाई गौण मानी लडाकू स्वभावका श्री सिंहको कामकारबाहीतिर लेखकको ध्यान अलि बढी गएको हो कि भन्ने भान पाठक वर्गमा पर्न सक्छ। कतिपय पर्चा-पम्पलेटको पुछारमा श्री सिंह आफैंले आफ्नो नाम उल्लेख गरेका थिए भनेर लेखकले भने पनि त्यो पार्टी नीतिअनुरूप थियो वा थिएन भन्ने विषयमा भने लेखक मौन देखिन्छन्। यस्ता विषयहरूले श्री सिंहमा केही राजनीतिक महत्त्वकाङ्क्षा थियो कि भन्ने भान पर्छ जसका बारेमा लेखकले प्रस्ट पारिदिएको भए पुस्तक अझ परिष्कृत हुन सक्थ्यो।

मोहनशमशेरको ८ बुँदे सुधारको घोषणालाई काङ्ग्रेसले अस्वीकार गरे पनि भारत र त्रिभुवनले स्वागत गरेको प्रसङ्ग लेखकले औंल्याएका छन्। यता सिंह स्वयंले आफ्नो नामबाट वक्तव्य जारी गरी आन्दोलन जारी राखे। सन् १९५१ जनवरी १६ मा मातृकाप्रसाद कोइरालाले आन्दोलन स्थगित गर्ने घोषणा गरे जसलाई पटना सम्मेलनले पारित गऱ्यो। यहींबाट २००७ सालको आन्दोलन समाप्त भयो। तर डा. सिंहले यस घोषणालाई नमानी आफ्नो आन्दोलन जारी राखे। यसै सन्दर्भमा "... केन्द्रले पठाएका हातहतियारहरू बाटैबाट पाल्पाका कमान्डर-इन-चिफका छोराहरूले रोकिदिए। हामीसँग यस्तो गरेपछि हामीले कसरी केन्द्रीय नेतृत्वलाई मान्ने?" (वीपीको आत्मवृत्तान्त पृष्ठ-१३६) भनी सिंहले वीपीलाई भनेको र "त्यो स्वाभाविक कुरा पनि थियो" (ऐऐ पृष्ठ-१३६) भनी के.आई.

सिंहको कार्यप्रति वीपीको सहानुभूतिलाई लेखकले यस प्रसङ्गमा टिपोट गरेको देखिँदैन। यसअघि दिल्लीमा राणा-काङ्ग्रेस सम्झौता-वार्ता चलिरहेको थाहा पाउनासाथ शमरबहादुर हस्ते डा. सिंहले कुनै सम्झौता हुनु परेमा स्वदेशमै हुनु पर्दछ भनी राजा त्रिभुवनलाई चिठी पठाएका थिए भनेर लेखकले औंल्याएका भए पनि यसको पुष्टि हुन सकेको छैन (पृष्ठ-६१)। दिल्ली सम्झौतालाई सिंहले स्वीकार गरेनन्। उनले पश्चिम क्षेत्र भैरहवामा सशस्त्र विद्रोह जारी राखे। त्यहाँका जमिनदारमाथि सशस्त्र कारबाहीसमेत चलाए। यही कारण मर्चवार क्षेत्रका जमिनदारहरूले डा. सिंहमाथि — "डा. सिंहले एउटा मृत्यू कूप बनाइराखेका छन् जसमा उनले आफ्ना विरोधीहरूलाई पुरिदिन्छन् ..." (पृष्ठ-६४) समेत भनेका थिए। तर "... के.आई. सिंहले मारेका होलान् मर्चवारका जिमदारहरूलाई। तर जति भयानक चित्रण गर्थे, त्यो भएको थिएन जस्तो लाग्छ। मर्चवारमा त भयानक अत्याचार गरेका थिए ठूलाठालुहरूले" (वीपीको आत्मवृत्तान्त पृष्ठ-१३६) भन्ने वीपीको विचारलाई पनि लेखकले महत्त्व दिएको पाइँदैन। उनलाई भारत विरोधी भनिएको, सशस्त्र सङ्घर्ष गरिरहेको र अन्य खाले घटनाका कारण फागुन ११, २००७ मा भारतीय र नेपाली सैनिकहरूद्वारा उनी पक्रिए (पृष्ठ ६७)। लेखकले दिल्ली सम्झौताविरुद्ध एक्लै हतियार उठाउनु सिंहको कमजोरी रहेको प्रसङ्ग छाड्दै परिच्छेद १ को अन्त गरेका छन्। लेखकले मूलतः दिल्ली सम्झौता हुँदाका बखत सिंहलाई समेत सहभागी गराएको भए उनले विद्रोह गर्दैनथे भन्ने ठानेको पाइन्छ।

उनको गिरफ्तारी, बयान, झ्यालखानाबाट फरार भएको र पुनः गिरफ्तारीका विषयहरू परिच्छेद २ मा समावेश छन्। उनलाई गिरफ्तार गर्न भारतीय सैनिकहरू दुई-दुईपटक नेपाल आएको, यसबारेमा गृहमन्त्रीलाई समेत थाहा नभएको, दुईपटक आए पनि उनलाई पक्डन नसकेको, भारतीय सैनिकहरूलाई बयान दिन इन्कार गर्दै "राष्ट्रसङ्घबाट प्रतिनिधि आएर बयान लिए मात्र म बयान दिन्छु, नत्र किन दिने?" (पृष्ठ-७१) भनी सिंहले भनेका कुरा समावेश भए पनि त्यसको स्रोत खुलेको भने देखिँदैन। भारतीय सैनिक सिंहलाई पक्डन आएका थिए वा अन्य उद्देश्य प्राप्तिका लागि? भन्ने प्रश्नलाई भने लेखकले अनुत्तरित नै छाडेका छन्। वैरगनियाँ सम्मेलनमा डा. सिंहले कोइराला बन्धुहरूको विरोध गरेकाले कोइराला बन्धुहरूले त्यसको रिस फेर्न यसो गरेको हो भन्नेतर्फ लेखकले आफूलाई झुकाएको भान पर्दछ। देस्रोपटक भारतीय सैनिक लगाई डा. सिंहलाई पक्डन खोजेको घटनालाई लेखकले सार्वभौम राष्ट्रमाथिको हस्तक्षेप भने पनि यस विषयमा आधिकारिक सामग्रीको अभाव लेखक स्वयंले महसुस गरेका छन।

सिंहसँगै गिरफ्तार भएका मध्ये करिब २०० जना बन्दीहरूलाई मात्र सरकारले २००८ जेठ २० गते मुक्त गऱ्यो। बाँकी बन्दीहरू अनिश्चित भविश्यप्रति आतङ्कित बन्न पुगे। फलस्वरूप उनका सहयोगी लक्ष्मीनारायणलगायतले जेलबाट भाग्ने सम्बन्धमा डा. सिंहसँग सल्लाह माग्दा "सक्दछौ भने बाहिर निस्क" (पृष्ठ-७४) भनी दिएको सहमति बमोजिम जेठ २५ गते सिंह भैरहवा झ्यालखानाबाट भागे। यस घटनापछि उनले भैरहवा क्षेत्रमा कब्जा गरेको, समस्त क्षेत्रीय राज्यको इन्चार्ज भएको, राज्य

कोषको एक पैसा पनि हिनामिना नगरेको विषय औंल्याएका छन्। २००८ साउन १२ गते सरकारले उनलाई डाँकू घोषणा गरेको, विभिन्न ठाउँमा लुक्दै हिँडेको प्रसङ्ग, पाल्पा क्षेत्रमा सरकारी सेनासँगको मुठभेड, उनको नजिकको मान्छे खडानन्द जैसीलाई सिंहलाई खान-बस्न दिएको आरोपमा सरकारले पक्डेको जस्ता प्रसङ्गहरू रोचक ढङ्गले लेखिएको छ। जैसीलाई मुक्त गरिदिने प्रलोभन देखाएर धवलागिरिको फेद ठाकुरबारीमा शान्ति सम्झौता गर्ने निहुँमा सिंहलाई पुनः गिरफ्तार गरियो। यस प्रसङ्गलाई पंगेनीले सिलसिलाबद्ध ढङ्गले प्रस्तुत गर्नु भएको छ। गिरफ्तारीपछि सिंहलाई काठमाडौं चलान गरियो। लेखकले यहाँ दुई-दुई पटक भारतीय सैनिक लगाएर गिरफ्तार गरिनुपर्ने डा. सिंह महान् साहसी र क्रान्तिकारी नेताको रूपमा परिचित भएको प्रसङ्गलाई आफ्नो तर्फबाट पुष्टि गर्न खोजेको देखिन्छ। तर पछिका घटनाले यो विश्लेषणलाई पुष्टि गरेको देखिँदैन। तोरणशमशेरले डा. सिंहका बारेमा उनको कमजोरी रक्सी र महिला भएको (पृष्ठ १०८) भनी सिंहको गिरफ्तारीपछि दिएको एउटा भनाइलाई लेखकले केही दृष्टान्तहरू प्रस्तुत गरेर सिंहको पक्षमा दरिलो वकालत गरेको पाइन्छ (पृष्ठ ९-१०)। उनलाई धोकाद्वारा गिरफ्तार गरिएको थियो भन्ने विषयलाई विभिन्न पक्षबाट प्रस्टयाउन खोजेका छन्। यसका लागि उनले हवलदार तेजबहादुरको भनाइ र शान्तिवार्ता गर्न भनी सहमतिमा लिइएको मान्छेलाई धोका दिएर पक्डनु ठीक थिएन। यसकारण सिंहलाई मुक्त गर्नु पर्ने नभए आफूले हवलदार पदबाटै राजीनामा गर्ने भनी दिएको वक्तव्यलाई महत्त्वका साथ प्रस्तुत गरेका छन् (पृष्ठ ११३)। डा. सिंह जस्ता राजनीतिक व्यक्तिलाई धोकाद्वारा पक्डनु राज्यले गरेको व्यवहारलाई उचित मान्न नसकिने उनको तर्क छ।

डा. के.आई सिंहभन्दा बढी अनुदार राजनीतिक व्यक्ति भरतशमशेरलाई रिहा गरियो। तर सिंहको रिहाइ भएन। यस घटनाले राष्ट्रिय र स्थानीय स्तरबाट सरकार त्यसमा पनि गृहमन्त्री वीपीको आलोचना भएको तर्फ लेखकले आफ्नो लेखनीलाई जोड दिएका छन। सोही समयमा सिंहदरबार काण्ड घट्यो। डा. सिंह जेल मुक्त भए। यस विषयमा लेखकले सविस्तार वर्णन गरिदिनाले पाठकसामु सिंहदरबार काण्ड के थियो भन्ने विषयमा इतिहास बुझ्न मदत पुगेको छ। जेल मुक्त भएपछि डा. सिंहले सिंहदरबार कब्जा गरेको घटनालाई यो काण्ड उनैले गरेका हुन् वा अरू नै कसैको हात अथवा स्वार्थ थियो त भन्ने विषयमा लेखकले विभिन्न पक्षबाट व्याख्या गर्ने प्रयास परिच्छेद ३ मा गरेका छन् जुन सह्रानीय भए पनि यथार्थ के थियो त भन्नेतर्फ पूर्ण रूपमा पुष्टि हुन सकेको छैन।

गोरखादलको जन्म, मुक्ति सेनालाई पुलिसफोर्समा रूपान्तरण गर्ने वीपीको निर्णय, सिंहदरबारको सैनिक नारायणहिटीमा स्थानान्तरण हुनु एवं राजाले मन्त्रिमण्डललाई थाहा नै नदिई सैनिकको तलब वृद्धि गरिदिने जस्ता प्रसङ्गहरूले राजा शक्तिका लागि बढी इच्छुक बन्दै गएको सङ्केत दिन्छ जुन राजनीतिक इतिहास जान्न-बुझ्न खोज्ने पाठकका लागि ज्यादै महत्त्वपूर्ण देखिन्छ। डा. सिंहलाई छुटाउन युवराज महेन्द्रले आफ्ना ससुरा हरिशमशेरसँग मिलेर विद्रोह रचेको अपुष्ट जानकारी पनि लेखकले समावेश गरेका छन् भने डा. सिंहले आफू प्रम भएका बखत सिंहदरबार काण्डमा आफ्नो कुनै संलग्नता नभएको भनी सार्वजनिक अभिव्यक्ति दिएको विषय पनि पुस्तकमा उल्लेख हुनुले त्यस

प्रकारसँग सुव्यवस्थित तरिकाले जेल मुक्त भई १२ घण्टासम्म सिंहदरबार कब्जा गर्न सक्ने घटना थप अध्ययन र अनुसन्धानको विषय भएको तर्फ जोड दिन्छ। सिंहदरबार काण्डमा डा. सिंहले एउटा पनि गोली नचलाएको बरु रक्षादलका मान्छेले चलाएको गोलीबाट एक जना सिपाही मारिएको भन्ने वर्णन टेपवार्ताको आधारमा गरिएकाले भैरहवा विद्रोहमा आफैले जमिनदारहरूमाथि गोली चलाउने सिंहले सिंहदरबार कब्जा गर्दा गोली चलाएनन् अथवा त्यसो गर्न आदेश दिएनन् भन्ने विषय शङ्काको घेरामा देखिन्छ। डा. सिंह दरबारबाट भागेपछि १० माघ २००८ मा श्री ५ त्रिभुवनबाट प्यारा प्रजाको नाममा बक्सेको शाही घोषणामा "... माघ ९ गते बुधबारका दिन डा. के.आई. सिंहले रक्षादलका केही जवानहरूको सशस्त्र मदतले सिंहदरबारको नजरबन्दीबाट छुटेर सरकारी काममा दखल दिने चेष्टाले काठमाडौंमा गडबड पैदा गरे ..." (नेपालको राजनीतिक दर्पण भाग-१, गृष्मबहादुर देवकोटा, पृष्ठ-१०२) उल्लेख छ। यसकारण यस प्रसङ्गमा लेखक डा सिंहप्रति अलि बढी नै कृतज्ञ भएको भान पर्दछ। यस्ता खाले वर्णनको अध्ययनले पछिल्लो पुस्ताले इतिहास एकपक्षीय ढङ्गले मात्र बुझ्ने हुन् कि? भन्ने डर मान्नु पर्ने देखिन्छ। सिंहदरबार काण्डका कारण दरबार शक्तिशाली हुन पुगेको, राजनीतिक पार्टीका नेताहरू (मन्त्रिमण्डलका केही सदस्यहरू) नारायणहिटी दरबारमा शरण लिन पुगेको जस्ता विषयको चिरफारले पुस्तक रोचक बनेको छ। रक्षादललाई आर्म्ड पुलिस नामाकरण गरी उनीहरूको रेखदेखको जिम्मा सैनिकलाई दिइएको प्रसङ्गले त्यस बेलादेखि नै सैनिक बढी शक्तिशाली बन्दै गएको प्रसङ्ग बुझ्न कठिन हुँदैन। माघ ९ को घटनामा सिंहसँग मिली शान्ति व्यवस्थामा खलल पुऱ्याएको र सरकारको विरोध गरेको कारणले अखिल नेपाल कम्युनिस्ट पार्टी र राष्ट्रिय महासभालाई प्रतिबन्धित गरिएको प्रसङ्ग र राजा शक्तिशाली बन्न चाहिरहेको घटनाक्रम अति महत्त्वपूर्ण विषयवस्तुको रूपमा रहेका छन्। यस समयमा घटेका अप्रिय घटना जस्तो— चिनियाकाजी काण्ड, सैनिक/सिपाही मरेका आदि घटनामा लेखकले काङ्ग्रेसको शक्ति रक्षादलको मात्र हात रहेको मानेका छन्। आम जनताले उक्त दललाई राक्षसदलको रूपमा चिन्न थालेका थिए भन्नेतर्फ लेखकले जोड दिएका छन्। उक्त घटनाको समयमा डा. सिंहले शान्ति व्यवस्था राख्न निर्देशन दिएका थिए भनेर उल्लेख गरे पनि शान्तिका पक्षपाति डा. सिंह जेल मुक्त भएको १२ घण्टापछि तिब्बततर्फ किन पलायन भए? भन्ने प्रश्नतर्फ भने लेखको ध्यान गएको देखिँदैन। सधैं धोका पाएका सिंहका लागि यो विद्रोहको विकल्प थिएन भन्ने लेखकको निष्कर्ष रहेको बुझ्नलाई कुनै कठिनाइ हुँदैन।

पुस्तकको परिच्छेद ४ मूलतः डा. सिंहको राजनीतिक गतिविधिमा केन्द्रित रहेको छ। राजा महेन्द्रको प्रत्यक्ष शासन एवं सिंहलाई आम माफी दिएर स्वदेश फिर्ता गराउन राजाले दिएको सहमति र स्वदेश आगमनपछि सिंहको राजनैतिक गतिविधिका कारण क्रान्तिकारी इतिहास समाप्त भएको र उनी राजाको गोटी बनेको ठहर लेखकको छ। खास गरी सिंहदरबार काण्डपश्चात् तिब्बत-चीनतर्फ जाँदा नेपाली काङ्ग्रेसबाहेकका अन्य पार्टीहरूले सिंहको समर्थनमा वक्तव्य र गतिविधिहरू जारी राखे। चीनमा माओत्सेतुङ, चाउ एन लाईलगायत अन्य नेताहरूसँगको भेटघाट, नेपालको शरणार्थी नेताको रूपमा कोरियामा भाग लिएको घटनाक्रम आदिको वर्णनले चीनले डा. सिंहलाई सम्मान गरेको पाइन्छ।

यता स्वदेशमा उनलाई फिर्ता गर्नु पर्ने माग राख्दै लक्ष्मीप्रसाद देवकोटाहरूद्वारा 'डा. के.आई. सिंह मित्र हितैषी सङ्घ' नामक सङ्गठन खोलिएको प्रसङ्गलाई अति महत्त्वका साथ उल्लेख गरेका छन्।

यसै समयमा राजा महेन्द्रले राजदरबारमा राजनीतिक सम्मेलनको आयोजना गरे। १२९ ओटा पार्टीहरूले भाग लिएको यस सम्मेलनलाई प्रमुख पार्टीहरूले बहिष्कार गरेका थिए भने डा. सिंहका समर्थकहरूले राजा महेन्द्रसमक्ष उनलाई स्वदेश फिर्ता गर्नु पर्ने बिन्तीपत्र जाहेर गरेका थिए (पृष्ठ २३५)। उनका समर्थकहरूले राजासँग यस्तो भेट पटकपटक गरे। यसैबीच २०१२ भदौ २६ गते राजाबाट डा. सिंहसहित उनका अनुयायीहरूलाई आम माफीको घोषणा भयो। नुवाकोट दरबार हुँदै सिंह भदौ २८ गते राजधानी भित्रिए (पृष्ठ २५३)। लेखकले सिंह राजधानी आउँदा आम जनताले भव्य स्वागत गरेको बताएका छन्। भदौ ३१ मा उनले राजाको समर्थनमा पत्रकार सम्मेलन गरी आफ्नो धारणा सार्वजनिक मात्र गरेनन् वीपीको कटु आलोचना गर्न पनि चुकेनन्। चीन गएपछि डा. सिंह पनि कम्युनिस्ट भएको भन्ने हल्ला त्यतिखेर निराधार भयो जब उक्त पत्रकार सम्मेलनमा उनले राजाको समर्थनमा आफ्नो वक्तव्य दिए। त्यसपछि मात्र प्रतिबन्धित कम्युनिस्ट पार्टीले उनलाई अप्रजातान्त्रिक र पुनरुत्थानवादी भनी टिप्पणी गऱ्यो। सिंहको नेपाल आगमन, वक्तव्य र गतिविधि सम्बन्धमा गणेशमान सिंहले "आफ्नो स्वार्थपूर्तिका निम्ति मात्र राजा महेन्द्रले डा. सिंहलाई नेपाल फर्काएका हुन्" (पृष्ठ २६४)। भनी गरेको टिप्पणीलाई पुस्तकमा महत्त्वका साथ उठाइएको छ।

सङ्गठित रूपमा आफ्नो विचार राख्न सिंहलाई मञ्चको अभाव थियो। त्यसको अभाव पूर्ति गर्न २०१२ कात्तिकमा उनले 'संयुक्त प्रजातन्त्र पार्टी' (पृष्ठ २६६) नामक दल गठन गरी देशव्यापी भ्रमणमा हिँडेको सन्दर्भलाई लेखकले सिंहले आफ्नो स्वार्थपूर्ति गर्न यसो गरेका हुन् भनेका छन्। उनी देशव्यापी दौडाहामा भारतको कट्टर समर्थक मात्र बनेनन् कोइराला बन्धुहरूको कटु आलोचक र राजा महेन्द्रको घोर समर्थकका रूपमा देखा परे (पृष्ठ २७३)।

राजा महेन्द्रले स्थापित दलहरूलाई मूलधारबाट किनारा लगाउन चाहन्थे। त्यस निम्ति तत्कालीन ठूला पार्टीहरूको विरोध गर्ने हिम्मतिलो तर बौद्धिक अभिव्यक्ति दिन नसक्ने मान्छेलाई प्रयोग गरेर आफू शक्तिको केन्द्र बन्न चाहन्थे। यही भित्री चाहनालाई पूरा गर्न उनले डा. के.आई. सिंहलाई प्रयोग गरेका हुन् भन्ने लेखकको विश्वास रहेको छ।

परिच्छेद ५ मा डा. सिंह प्रधानमन्त्रीमा नियुक्त, प्रमुख राजनीतिक पार्टीहरूको विरोध, आफ्नो पार्टीका सहयोद्धाभन्दा गैरराजनीतिक व्यक्तिहरूको सहभागितासहितको मन्त्रिमण्डलको गठन, देशवासीका नाममा प्रमको हैसियतले गरेको सम्बोधनमा विकास योजना प्रस्तुत, प्रधानमन्त्रीकालमा भएका घटनाक्रमहरूको सिलसिलाबद्ध प्रस्तुति, निर्वाचन स्थगन, सुवर्णशमशेर राणाको प्रमुखत्वमा निर्वाचन आयोगको पुनर्गठन, भाषा विवादजस्ता विषयवस्तुहरू समावेश छन्।

तत्कालीन प्रम टङ्कप्रसाद आचार्यले चुनाव गराउन असमर्थता देखाएपछि उनको मन्त्रिपरिषद् विघटन गरी भर्खरै मात्र संयुक्त प्रजातन्त्र पार्टी खोलेका डा. के.आई. सिंहलाई १५ दिनभित्र मन्त्रिमण्डल बनाउन छलफल गरी श्री ५ मा जाहेर गर्न राजाबाट आह्वान भएपछि (पृष्ठ २७४) प्रमुख पार्टीहरूले यसको विरोध गरे। सात सालको सम्झौतालाई 'क्रान्तिप्रति विश्वासघात गरेको' (पृष्ठ ६२) एवं 'रद्दीको टोकरीमा मिल्काउनु पर्छ' (पृष्ठ २४८) भनी भैरहवा क्षेत्रमा सोको विरोधमा हतियार नबिसाउने घोषणा गर्ने सिंहलाई चीन निर्वासनबाट मुक्त गरी राजा महेन्द्रले २०१४ साल साउन ११ मा प्रधानमन्त्री नियुक्ति गर्दा सबै दलहरूसँग छलफल र सहकार्य गर्ने आदेश भए पनि सिंहबाट त्यस किसिमको पहल भएन। उनले वीपी कोइरालालाई समयसीमा तोकेर भेट गर्न आफैकहाँ बोलाउनुले सहमतिका लागि केही पहल गरेजस्तो देखिए पनि वास्तवमा त्यसो गर्न नचाहेको वा नसकेको भन्नेतर्फ पुस्तकमा प्रस्ट हुन सकिने देखिँदैन।

यहाँ महत्त्वपूर्ण कुरा के देखिन्छ भने दिल्ली सम्झौतापछि उनको क्रियाकलापलाई तत्कालीन सरकारले आतङ्कको सङ्ज्ञा दिई डाँकू घोषित गर्दा विरोध गर्ने पार्टी र तिनका नेताहरूले समेत उनी प्रममा नियुक्ति भएपछि निकै विरोध गरे। डा. रेग्मीले डा. सिंहलाई देशभक्त भनी पहिले दिएको वक्तव्यमा आत्मालोचना (पृष्ठ २९९) गरे भने टङ्कप्रसाद आचार्यले इन्डियाको पेड एजेन्टसम्म भने (पृष्ठ ३००)। वीपीले राजाको नियतमाथि नै शङ्का व्यक्त गरे (पृष्ठ २९८)। कुनै पनि स्थापित राजनैतिक दलहरूले उनलाई समर्थन गरेनन् र वार्ता गरी सहमतिमा ल्याउन गरेको प्रयास विफल भयो। यस प्रसङ्गले उनमा शासकीय क्षमताको कमी रहेको बुझ्न सकिन्छ।

टङ्कप्रसाद आचार्यको सरकारले निर्वाचन गराउन नसकेको र सोही कारण उक्त सरकार विघटन गरी डा. सिंहलाई प्रममा नियुक्त गरिए पनि राजाले उनलाई चुनाव गराउने मुख्य कामको अभिभारा भने दिएका थिएनन्। वीपी कोइरालाले 'राजाले चुनाव चाहिबक्सन्न' भनेर राजाको नियतमाथि शङ्का व्यक्त गरे (पृष्ठ २९८)। यता सिंह सरकारले चुनाव स्थगनको घोषणा गर्‍यो। यसको चारैतिरबाट विरोध भयो। सुवर्णशमशेरको प्रमुखत्वमा निर्वाचन आयोगको पुनर्गठन गरियो। अन्तरिम शासन विधान २००७ सालको प्रतिबद्धताबमोजिम चुनाव हुनुपर्ने विषयमा भएका प्रयासहरू एकपछि अर्को गर्दै निर्वाचन नहुने वातावरण सिर्जना उत्पन्न हुन गएको वा गराइएको विषय एवं सिंह सरकारले निर्वाचन स्थगनको घोषणा गर्नुलाई लेखकले उनको सबैभन्दा विवादास्पद र आलोच्य विषय भएको ठहर गरेका छन्।

मातृकाप्रसाद कोइरालाले "हिन्दी भाषालाई राष्ट्रभाषा बनाउनु पर्छ। यसमा वीपीको समेत समर्थन रहेको" (पृष्ठ ३३३) भनी दिएको अभिव्यक्ति र आफूले त्यस किसिमको अभिव्यक्ति नदिएको वीपीको भनाइ एवं भरतशमशेरले वीपीको भनाइप्रति गरेको शङ्का र सिंह सरकारले नेपाली भाषालाई विद्यालयमा पठनपाठनको माध्यम भाषा घोषणा गरेको विषयलाई महत्त्वका साथ उठाइएको छ। त्यसै गरी खाद्य समस्या समाधान गर्न सम्बन्धित सरकारी अधिकारीको स्वीकृतिमा मात्र निकासा गर्न पाउने निर्णयलाई लेखकले सिंह सरकारको अर्को महत्त्वपूर्ण उपलब्धि ठानेको देखिन्छ।

उग्र स्वभावका डा. सिंहको प्रधानमन्त्रीत्वकालमा निजामती प्रशासन, पुलिस एवं सेनासँगको सम्बन्ध राम्रो थिएन भन्ने प्रसङ्गलाई पुष्टि गर्ने सामग्रीको रूपमा प्रधानमन्त्रीले गृहसचिवलाई फायलले हिर्काएको घटनालाई उठाएका छन्। सो घटनाका कारण सरकारी उच्च पदस्थ पदाधिकारीहरू उनको विरोधी बने भने राजासमेत असन्तुष्ट भई त्यसो नगर्न निर्देशन दिएका थिए (पृष्ठ ३६५-६६)। यद्यपि उक्त समाचारलाई सरकारले कपोलकल्पित भनी खण्डन गऱ्यो तर यी घटनाक्रमहरूले उच्च पदस्थ प्रशासनिक पदाधिकारीसँग उनको सम्बन्ध सुमधुर नभएको देखिन्छ। तोरणशमशेर र गोपाल शमशेरहरूले राजासमक्ष सिंहसँग बसेर काम गर्न नसक्ने बेहोराको राजीनामा पेस गरेको अति महत्त्वपूर्ण सन्दर्भ पेस गरेका छन्। "... प्रधानमन्त्री डा. सिंहले राजासमेतलाई वास्ता नगरी मुलुकको राजकाजसम्बन्धी सम्पूर्ण अधिकार आफ्नो हातमा लिने योजना बनाएका थिए।" (पृष्ठ ३६८-६९) भनेर पूर्वप्रहरी महानिरीक्षक नरशमशेरको भनाइलाई लेखकले उतारेका छन्। तर नरशमशेरको भनाइ हुबहु स्वीकार्न नहुने तर्क लेखकको छ।

डा. सिंहलाई सत्ताबाट हटाउन वीपी कोइराला, डिल्लीरमण रेग्मी एवं भद्रकाली मिश्र र टङ्कप्रसाद आचार्यहरूले 'प्रजातन्त्रिक मोर्चा' (पृष्ठ ३८४) गठन गरी देशव्यापी आन्दोलनको तयारी गरेको एवं नेताहरूले राजतन्त्रविरुद्ध भाषण दिँदा जनकपुरमा वीपी र रेग्मीहरू २४ घण्टा थुनिएको घटनालाई लेखकले प्रस्तुत गरेका छन्। यसै सन्दर्भमा गणेशमान सिंहले "राजालाई जनताको माया भए आफूले लिने गरेको रकम कट्टा गरी रु. २०००, २५०० मा गुजारा चलाउनु पर्दछ" (पृष्ठ ३९०) भनेर अभिव्यक्ति दिए भन्ने विषयले राजा र राजनीतिक दलबीच विश्वासको दरार परम्परादेखि नै चल्दै आएको देखिन्छ।

डा. सिंहको प्रधानमन्त्रीत्वकाल शीर्षकमा केन्द्रित परिच्छेद ५ सम्भवतः पुस्तकको केन्द्रीय तत्त्व हो भन्न सकिन्छ। सिंह प्रमको रूपमा सफल भएनन्। २०१४ कात्तिक २९ मा मन्त्रिमण्डल विघटन भयो। राजाको गोटी बनेर उनी प्रम बने पनि एकातर्फ राजा, अर्कोतर्फ पुलिस, प्रशासन एवं पत्रकार जगत् उनको विरोधी बने। फलतः २००७ सालपछिको मन्त्रिमण्डलमध्ये सबैभन्दा कम समय ११० दिनमा नै विघटन हुने मन्त्रिमण्डल पनि उनकै भयो। यति हुँदाहुँदै पनि खाद्य समस्या, नेपाली भाषा राष्ट्रभाषाको रूपमा रहने निर्णय, हिसाब जाँच कमिसनको गठनजस्ता कामहरू महत्त्वपूर्ण रहे। यस विषयलाई कसैले पनि दुःख वा असन्तोष व्यक्त नगरेको बरु डा. सिंहको निरङ्कुश महत्त्वकाङ्क्षालाई राजाले समयमै ठेस लगाएका भनी राजाको समर्थन भएको विषयलाई लेखकले उठाएका छन्। पदच्युतपछि तीनधारा पाठशालामा उनले आफ्ना विरुद्ध उच्च पदस्थ अधिकारीले षडयन्त्र गरेको मात्र भनेनन् बरु सरकारी सम्पत्ति अपहरण गरेको कुरामा छानबिन गरी दण्ड दिन ६८ जनाको एउटा समिति गठन गर्न आफ्नो मन्त्रिमण्डलले पास गरे पनि आफूले राजीनामा दिने बेलासम्म सो निर्णयले शाही सहमति नपाएको (पृष्ठ ४०८) भन्ने अति महत्त्वपूर्ण अभिव्यक्ति टिपोट गरिएको छ। उनको भाषणलाई लिएर एसपी मानबहादुरले २०१५ वैशाख २० गते मुद्दा हालेका थिए। तर मुद्दाको सुनुवाइ भएन। राजा नै सर्वेसर्वा भएको बखत उक्त कारबाही किन भएन? जिज्ञासा उत्पन्न हुन सक्छ। पंगेनीज्यूले

पूर्वप्रधानमन्त्री डा. सिंहको नमीठो टिप्पणीलाई राजाले बिउँझाउन नचाहेको स्पष्ट देखिन्छ (पृष्ठ ४०९) भनेर बिट मारेका छन्। तर जेठ २ मा सुवर्णशमशेरको अध्यक्षतामा गठन भएको मन्त्रिपरिषद्ले उक्त मुद्दाको विषयमा प्रक्रिया सुरु गरे पनि कुनै कारबाही भने भएन। मुद्दाको विषय टुङ्गिएपछि पूर्वप्रम एवं संयुक्त प्रजातन्त्र पार्टीको अध्यक्षका हैसियतले उनी राजनीतिमा सक्रिय भए। २०१५ फागुन ७ गतेबाट मुलुकमा चुनाव हुने शाही घोषणा हुनअघि नै संसद्का लागि चुनाव भन्ने पार्टीहरूको निर्णय भएकाले चुनाव केका निम्ति भन्ने विषयमा सिंहले विमति राखेनन्।

भगवतीप्रसाद सिंहको संविधान मस्यौदा समितिलाई डा. सिंहले एक सदनात्मक संसद्, संसदीय राजतन्त्रात्मक शासन व्यवस्था, राष्ट्रभाषा नेपाली एवं राजाको सुरक्षा व्यवस्था संसद्ले गर्ने, राजाले मुलुकको सार्वभौमसत्ता र स्वतन्त्रता हरणसम्बन्धी षडयन्त्र गरेको वा गर्ने षडयन्त्र गरेमा संसद्ले निजलाई पदच्युत गरी निजको वंशको हकदारलाई गादीमा राख्न सक्ने (पृष्ठ ४१४) जस्ता सुझाउ दिएबाट संसदीय सर्वोच्चता एवं संवैधानिक राजतन्त्रको पक्षमा देखिए तापनि उनका यसअघि र पछिका राजनीतिक गतिविधिहरू राजाको सक्रिय नेतृत्वलाई दृढ समर्थन गर्ने देखिएका छन्।

उनको पार्टीले २०१५ को आमचुनावमा १०९ स्थानमध्ये ८६ स्थानमा उम्मेदवार दिएर ५ स्थानमा विजयी हासिल गऱ्यो। तर निर्वाचनमा डा. सिंह पराजित भए। उनको पार्टीका ६७ जनाको जमानत जफत भयो। यसले उनको लोकप्रियतामाथि प्रश्न उठ्न सक्नेतर्फ लेखकको ध्यान पुग्न नसकेको देखिन्छ। यद्यपि उनले निर्वाचनमा अराष्ट्रिय तत्त्व, नेपाली काङ्ग्रेसले धाँधली गरेको, गणेशमान एवं सुवर्णशमशेरहरूले पैसाको बाढी नै बगाएको, वीपीले डा. अवधनारायणलाई पैसा ख्वाएर निर्वाचन जितेको, नेपाली काङ्ग्रेसजस्तो आत्माबेचुवा, विदेशी दलाल, देशद्रोही पार्टीले धन, जन, बल, बुद्धि तथा अन्य घृणित तरिकाबाट राजतन्त्र समाप्त पारी देशद्रोहीहरूको सरकार गठन गर्ने, यही लक्ष्य पूर्ति गर्न नेपाली जनताको इच्छा विरुद्ध विजयी गराएको ... आदि आरोप लगाए (पृष्ठ ४२२)। उक्त भाषणका सम्बन्धमा स्थानीय प्रशासनले उनीमाथि पुर्जी पठाएर स्पष्टीकरण लियो। काठमाडौं मजिस्ट्रेट अफिसबाट विशेष अदालतमा मुद्दा पठाइयो तर उनीमाथि कुनै कारबाही भएन। यसकारण उनले लगाएको आरोप सत्य थियो भन्ने लेखकको आशय झल्किन्छ। तर प्रश्न स्वाभाविक छ, के नेपाली काङ्ग्रेस उनले भनेजस्तो देशद्रोही, अराष्ट्रिय तत्त्व नै थियो त? काङ्ग्रेसले १०९ मध्येमा ७४ सिटमा विजय हासिल गर्ने आधार सिंहले भनेजस्तै पैसा र धाँधली मात्र नै थियो त? चुनावी सरकारमा सुवर्णशमशेरको नेतृत्व भए पनि उक्त सरकार बहुपक्षीय थियो। यसकारण डा. सिंहको भनाइ राजनीतिक पूर्वाग्रह र चुनाव हारेको झोंकभन्दा बढ्ता केही देखिँदैन। यसलाई लेखकले अरू बढी विश्लेषण गरिदिएको भए डा. सिंहको बौद्धिक स्तर र उनका आरोपहरूका सम्बन्धमा आम पाठकहरू अझ लाभान्वित हुन सक्ने थिए। साथै यसले पुस्तकको गरिमालाई अझ बढाउने थियो।

डा. सिंहले सम्पूर्ण निर्वाचन गैरकानुनी र भ्रष्टाचारी तरिकाले भएको हुँदा बदर गर्ने माग गर्दै २०१६ असार ७ (पृष्ठ ४२३) मा पुनः महानिर्वाचन गराउनु पर्ने माग गरी सर्वोच्च अदालतमा निवेदन दर्ता गरे।

उनको पक्षबाट १० जना नेपाली र भारतीय वकिलसमेतले बहस गरे (पृष्ठ ४२४)। तर सर्वोच्च अदालतबाट उनी पराजित भए। लेखकले यस मुद्दामा भारतीय वकिलले बहस गरेको प्रसङ्ग र डा. सिंहले अङ्ग्रेजी बहसलाई नेपालीमा उल्था गर्न सकेको विषयलाई महत्त्व दिई डा. सिंहको बौद्धिक व्यक्तित्व झल्केको तर्क पेस गरेका छन् (पृष्ठ ४२५)।

काङ्ग्रेसको एकमना सरकारले अन्य पार्टीहरूलाई तिरस्कार गर्न थालेपछि टङ्कप्रसाद आचार्य, डा. के.आई. सिंह र रङ्गनाथ शर्माहरूले काङ्ग्रेस सरकारको विरोध गर्ने उद्देश्यले "राष्ट्रिय प्रजातान्त्रिक मोर्चा" को गठन गरे। यस मोर्चामा पछि कर्मवीर महामण्डलसमेत समावेश भएको थियो। यसैबीच भारतीय प्रम जवाहारलाल नेहरू नेपाल आउँदा (२०१५ जेठ २८) डा. सिंहले विरोध नगरे पनि नेहरूको भ्रमणले नकारात्मक सन्देश दिएको उनको पार्टीसमेत संलग्न मोर्चाको ठहर थियो। यस्तैमा सरकारले भारतसँग गरेको गण्डक सम्झौता रद्द हुनु पर्ने माग राखी मोर्चाले आन्दोलन गरेको थियो। नेपाल र भारतबीच भएको व्यापार तथा पारवहन सन्धिलाई पनि मोर्चाले विरोध गरेको देखिएबाट कोइराला सरकारले भारतसँग लिएको नीति एवं व्यवहारप्रति मोर्चा आरम्भ देखिनै विरोधी रहेको देखिन्छ। तर चीनले सगरमाथा मेरो हो भन्दा डा. सिंह चुप भए भन्ने लेखकको भनाइ रहे पनि मोर्चाका अध्यक्ष रङ्गनाथ शर्माले त्यसको विरोध गरेका थिए। वस्तुतः वीपी कोइराला र नेहरूको सुमधुर सम्बन्ध र सहयोगबाट कोइराला मुलुकको राजनीतिमा हैकम चलाइरहन सक्ने र यस्तोमा आफ्नो कुनै हैसियत नरहने देखेर नै डा. सिंहले भारत विरोधी नीति लिएको हुनु पर्दछ (पृष्ठ ४३०)।

काङ्ग्रेस सरकारको विरोध गर्न गठन भएको मोर्चालाई पार्टी एकीकरणमा ढाल्ने नेताहरू खास गरी सिंहको प्रयास सफल नभएपछि सिंह मोर्चाबाट अलग्गिए। २०१७ साल पुस २१ गते मोर्चाको कार्य पूरा भएकोले अब यसको आवश्यक छैन भन्दै विघटनसमेत गरियो (पृष्ठ ४३२)। मूलतः मोर्चाले विपक्षी दलको काम गरी सरकरलाई सचेत बनाउन महत्त्वपूर्ण भूमिका खेलेको थियो।

१७ सालको कदमलाई डा. सिंहले पूर्ण समर्थन गरे। राजाले डा. तुलसी गिरीसमेतको संलग्नतामा आफ्नै अध्यक्षतामा गठन गरेको मन्त्रिपरिषद्लाई सिंहले २००७ सालपछिको सबैभन्दा राम्रो माने भने दलमाथिको प्रतिबन्धलाई पनि राजा महेन्द्रको घोषणामध्ये सर्वोत्तम बताए (पृष्ठ ४३४)। वास्तवमा यो डा. सिंहको सैद्धान्तिक विचलनको पराकाष्टा नै थियो। उनले २०१५ सालमा संविधान निर्माण गर्दा संसदीय सर्वोच्चता र संवैधानिक राजतन्त्रको पक्षमा दिएका सुझाउ र उनको पछिल्लो व्यवहारबीचमा तालमेल खाएन। नेपाली काङ्ग्रेस र त्यसमा पनि वीपी कोइरालाको पराजय उनको निम्ति विजय र त्यही नै राजनीति सिद्धान्त हुने देखिन्छ। यद्यपि उनले राजनीतिक बन्दीहरूलाई छाडिनु पर्ने, जनताको मैलिक हक बहाली हुनु पर्ने आदि माग राखी सत्याग्रहसमेत गरे। तर राजाको २०१७ को कदमलाई समर्थन गरेर पनि आन्दोलन गर्नुलाई लेखकले अप्रत्यासित मानेका छन्। यही कारण उनी २०२० फागुनमा नजरबन्दमा परे भने २०२२ सालसम्म राजनीतिमा निष्क्रिय रहे र २०२४

सालदेखि पञ्चायत प्रवेश गरे। २०२८ मा राष्ट्रिय पञ्चायतको सदस्य बने। २०३६ सालको जनमत सङ्ग्रहमा पाल्पामा उनले बहुदलको पक्षमा प्रचार गरे पनि सुधारिएको पञ्चायतमै सक्रिय रहे (पृष्ठ ४३७) भन्ने लेखकको भनाइ विरोधाभाषपूर्ण रहेको देखिन्छ। यसरी २०३९ असोज १९ गते घाँटीको क्यान्सरबाट ७६ वर्षमा सिंहको मृत्यु भएसम्मका घटनाक्रमहरूलाई पुस्तकमा समेटिएको छ।

देशको राजनीतिमा बहुदलीय प्रजातन्त्र र संवैधानिक राजतन्त्रका पक्षमा कठोर सङ्घर्ष गरेका सिंह एक साहसी र लडाकू योद्धा भए पनि सफल सत्ता सञ्चालक र कूटनीतिक चातुर्य नभएका एवं पछिल्ला दिनहरूमा आफ्नो स्वार्थ पूर्तिका निम्ति राजनैतिक सिद्धान्त र आदर्शलाई समेत तिलाञ्जली दिई संसदीय व्यवस्थाको अन्त्य हुँदा त्यसलाई समर्थन गरी आफ्नो अतीतको गौरवलाई स्वार्थसँग समाहित गरेको देखिन्छ। यद्यपि आफ्नो प्रधानमन्त्रित्वकालमा हिसाब जाँचबुझ कमिसन गठन गरी मुलुकलाई भ्रष्टाचारबाट मुक्त राख्न गरेको प्रयास दूरगामी महत्त्व राख्ने निर्णय थियो। तर पछिल्लो समयमा उनमा आएको सैद्धान्तिक विचलनले उनी शक्ति आकाङ्क्षी रहेको प्रस्ट हुन्छ। समग्रमा नेपालको राजनीतिमा सिंहको योगदान कति थियो? सात सालपछिको भैरहवा काण्ड एवं सिंहदरबार काण्ड र उनका विषयमा टिप्पणी हुने रहस्यात्मक राजनीतक घटनाहरूको बारेमा बुझ्न र नेपाली प्रजातान्त्रिक आन्दोलनमा देखा परेका उतारचढाव तथा विचलनहरूबारे थाहा पाउन प्रस्तुत पुस्तक महत्त्वपूर्ण हुने कुरामा सहमत हुन सकिन्छ।

मूलतः यस पुस्तकले राजनीतिमा सिंहको आगमन र अवसानलाई बुझ्न, पदसहितको सिंह र पदबाहिरको विद्रोही, लडाकू तथा आलोचक के.आई. सिंहको चरित्र उजागर गरेको छ। तर पनि पुस्तकमा ठोस, वस्तुगत तथ्यभन्दा भावनात्मक दृष्टिकोणको प्रधानता रहेको पाइन्छ। यसैकारण पुस्तकमा सिंहको प्रासङ्गिकभन्दा स्वेच्छिक प्रशंसा र तारिफ बढी देखिन्छ। उनको व्यक्तित्व, भूमिका एवं क्रियाकलापलाई बढी महत्त्व दिएर लेखिएको हुँदा पुस्तक इतिहासको अन्वेषणभन्दा पनि सिंहको परिचय दिने जीवनी बन्न पुगेको छ। यसमा प्रस्तुत भएका चिठ्ठीपत्र, पर्चा-पमप्लेट एवं अन्य दस्तावेजहरूलाई उतारिएको मात्र छ, सँगालिएको छैन। कतिपय महत्त्वपूर्ण प्रसङ्गहरूमा आधिकारिक सामग्रीको अभाव रहेको महसुस स्वयं लेखकले नै गरेका छन्। इतिहासको सत्यान्वेषणमा खोज गरिएका चिठ्ठीपत्र र दस्तावेजहरूलाई जस्ताको तस्तै पुस्तकमा समावेश गर्नु पर्थ्यो। यसो गरिदिएको भए इतिहास बुझ्न चाहने पाठकहरूले पुस्तक अध्ययन गर्दा आफूहरूप्रति अझ न्याय भएको महसुस गर्न सक्थे। यदि अझ बढी विश्लेषण र समालोचना पक्षलाई समेत महत्त्व दिएको भए पुस्तकको 'मन्तव्य' शीर्षकमा लेखक निष्पक्ष हुन नसकेको र सिंहको सकारात्मक पक्षलाई नै जोड दिइएको भन्ने भनाइले ठाउँ पाउने थिएन। जे होस्, डा. सिंहका बारेमा छुट्टै अध्ययन सामग्री नभएको परिप्रेक्ष्यमा यस किसिमको पुस्तकले आम पाठक र सिंहको बारेमा बुझ्न चाहने प्रत्येक नेपालीलाई ठूलो गुण लगाएको छ। यस अर्थमा डा. भवेश्वर पंगेनी साधुवादका पात्र हुनुहुन्छ।

# नेपाली इतिहास : विगतदेखि वर्तमानसम्म

**आई.के. महर्जन**



**पुस्तकः** अ हिस्ट्री अफ नेपाल
**लेखकः** जोन ह्वेल्पट्न
**प्रकाशकः** क्याम्ब्रिज युनिभर्सिटी प्रेश
**पृष्ठः** xxiii + २९६
**प्रकाशन मितिः** सन् २००५
**मूल्यः** रु ६००
**ISBN:** 0-521-67141

२०० वर्षअघि एक एकीकृत राज्यका रूपमा स्थापित नेपालको इतिहास केलाउने क्रममा जोन ह्वोल्पट्नको पुस्तक *अ हिस्ट्रि अफ नेपाल* को एक भाग यस राज्यको उत्पत्तितर्फ केन्द्रित छ भने अर्को भाग राणाशासनको अन्त्यपछिका घटनाक्रममा केन्द्रित छ। राज्यको उत्पत्तिसँगसँगै यसको विकासक्रममा यहाँका विविधतामूलक सामाजिक परिवेशका जनताहरू र राज्यबीचको सम्बन्धलाई वातावरणीय, सामाजिक, राजनीतिक अवस्थामा आधारित अनुसन्धानका माध्यमद्वारा प्रस्टयाउने प्रयास गरिएको छ। जहाँ लेखकले नेपाललाई एक असाधारण प्रकृतिको देशका रूपमा चित्रित गरेका छन्। इतिहास र मानवशास्त्रीय अवधारणामार्फत नेपालको विगतदेखि वर्तमानसम्मका घटनाक्रम र उक्त घटनाक्रमसँग प्रत्यक्ष सरोकार राख्ने जनताहरूलाई एउटै पुस्तक (भोल्युम) मा समेटिएको छ। राणाशासन र त्यसपछिका घटनाक्रमलाई बढी ठाउँ दिँदै पुस्तकको धेरै भाग यस सन्दर्भका घटनाक्रममा केन्द्रित छ। सानाभन्दा साना घटनाक्रमहरूलाई सिलसिलेवार तवरले उठाउँदै, केलाउँदै र विश्लेषण गर्दै वर्णनात्मक रूपमा पुस्तक *अ हिस्ट्री अफ नेपाल* तयार गरिएको छ जुन नेपाली इतिहास बुझ्न चाहनेहरूका लागि महत्त्वपूर्ण स्रोतका रूपमा आएको छ।

सन् १९५१ पछाडिका घटनाक्रमलाई विशेष महत्त्व र धेरै ठाउँ दिइए पनि उक्त शासनअगाडिका घटनाक्रमलाई पनि उत्तिकै महत्त्वका साथ उठाइएको छ। इतिहास भन्नेबित्तिकै राजा, महाराजा, राजनैतिक व्यक्ति वा खास कुनै घटना र अवस्थाको मात्र वर्णन गरी लेखिने नेपाली इतिहासका पुस्तकभन्दा पृथक् रही यो पुस्तक बाहिर आएको छ। जहाँ नेपालको सामाजिक अवस्था, भौगोलिक, राजनैतिक, आर्थिक वातावरणसहित वर्तमानका विविध समस्याहरू,

घरेलु राजनैतिक अवस्था, विदेशी सम्बन्ध, विकासका सफलता र असफलताका कथा, नेपालीहरूको जीवनपद्धतिमा मूल्य-मान्यता, पहिचान र समग्रमा नेपाली समाजको चित्रण गरिएको छ। शिक्षा, मिडिया, राजनैतिक संस्कार, जातीयता, राष्ट्रियताका बारेमा उठेका बहस, माओवादी विद्रोहको उदयका साथसाथै नेपालमा सङ्कटको सुरुआत कसरी भयो र नेपालको भविष्य कस्तो हुन सक्छ भन्नेबारेमा पनि चर्चा र विश्लेषण गरिएको छ। वास्तवमै नेपालको इतिहासमा आएका प्रत्येक नयाँ मोडहरूसँग प्रत्यक्ष वा परोक्ष सम्बन्ध राख्ने राजनीति मात्र होइन, विविध किसिमका सामाजिक, आर्थिक, वातावरणीय विषयहरूलाई पनि पुस्तकले समेटेको छ अर्थात् नेपाली इतिहासका विविध पक्ष बुझ्नका लागि यो एउटै पुस्तकले निकै सघाउ पुऱ्याएको छ।

देशको वर्तमान स्थिति बुझ्न विगत कस्तो थियो भन्ने कुराले मात्र होइन बरु त्यो विगतलाई वर्तमानमा कसरी बुझाइन्छ वा त्यसलाई कसरी व्याख्या गरिन्छ र अर्थ लगाइन्छ भन्ने कुराले प्रभावित पारेको हुन्छ।

संसारका धेरै मुलुकका पाठ्यक्रममा प्राधान्य विचार वा दृष्टिकोणको बाहुल्यता देख्न सकिन्छ र कतिपय अवस्थामा जनता तथा कुनै विशेष क्षेत्रको एकीकरणले आधुनिक राज्यको रचना गरेको हुन्छ भन्ने मान्यता राखिन्छ। यस्तै मान्यता र विश्लेषणका साथ पुस्तकको परिचय सुरु गरिएको छ। नेपाली इतिहासमा पृथ्वीनारायण शाहको अभियानलाई किन एकीकरण भन्ने नाम दिइयो र किन दिग्विजय अभियान भन्ने नाम दिइएन? प्रश्न उठ्नु स्वाभाविक नै हो। 'एकीकरण' भएको यति पछाडि मात्र उक्त विषयका बारेमा तर्कहरू गरिन थालेका छन्, प्रश्न उठाउन र अनुसन्धान गरिन थालिएको छ।

करिब ७ करोड वर्ष पुरानो हिमालय क्षेत्रको इतिहास र भौगोलिक बनावट, उत्पत्ति तथा यस क्षेत्रमा मानव अस्तित्वका बारेमा चर्चा गर्दै पुस्तकको पहिलो अध्याय सुरु भएको छ (पृष्ठ ६)। पुस्तकको पहिलो अध्यायमा हिमालय क्षेत्रको वातावरण, राज्य र समाज मानव जाति र बसाइँसराइको इतिहास, फरक-फरक समुदायले प्रयोग गर्ने भाषा, संस्कृतिको चर्चा गरिएको छ। प्राचीनकाल र मध्यकालीन समयमा राज्यको संरचना, निर्माणको प्रक्रियाबारे पनि विस्तृत वर्णन गरिएको छ (पृष्ठ ९)। यसै अध्यायमा हालसम्म पनि कृषि प्रणालीमा आधारित रहेको देशमा कृषि प्रणालीको सुरुआत कसरी भयो भन्ने व्याख्या मात्र गरिएको छैन बरु सिकारी र गोठालायुगका चर्चा पनि गरिएका छन्। यस क्षेत्रमा हुने सुरुका मानवीय क्रियाकलापहरूको प्रमाणहरूमध्ये महाभारत क्षेत्रमा हाते बन्चरो पाइनु थियो र इसापूर्व २००० तिर नै नेपालका केही क्षेत्रमा कृषि प्रणालीका लागि आवश्यक कृषि औजारहरूको विकास भइसकेको र गोठालाहरूले पनि आफ्नो व्यवसाय सुरु गरेको हुन सक्ने र काठमाडौं उपत्यकामा गाईगोठाला र भैंसीगोठाला रहेको अनुमान लेखकको छ (पृष्ठ १५-१८)।

प्राचीन तथा मध्यकालमा राज्यको स्थापना र विकास कसरी हुँदै गयो, कुन वंशका राजाहरूको प्रभुत्व रह्यो र यिनीहरूले राज्य व्यवस्थालाई कसरी सञ्चालन गर्दै थिए? पुराना राज्यहरूको पतन तथा नयाँ राज्यहरूको उदय र यसका कारणहरूको विश्लेषण गरिएको छ। यी कारणहरूको चर्चा गर्ने क्रममा संसाधनहरूमाथिको नियन्त्रण, (विशेष गरी भूमि, व्यापार र मानव संसाधन) यसको महत्त्व र यिनीहरूको नियन्त्रणका लागि अपनाइएका प्रक्रियाहरूलाई उदाहरणसहित वर्णन गरिएको छ। विशेष गरी दक्षिण एसियामै राजाहरूले आफ्नो सुखसुविधाका लागि आवश्यक दरबारहरू बनाउन अथवा समुदायकै लागि गरिने विशेष कार्यक्रमहरूमा समुदायका मानिसहरूलाई सहभागी गराउने चलन थियो र यस प्रथाबाट नेपाल पनि पछि परेन। नेपालमा पनि राणाशासनको अन्त्य हुनु पूर्वसम्म शासकहरूले चाहेअनुसार नै मानव संशाधनको प्रयोग गरे। अठारौं शताब्दीमा गोर्खा राज्यको सुरुआतपछि पश्चिमी पहाडी क्षेत्रका समुदायहरू दासका रूपमा प्रयोग गरिए। त्यसो त यसभन्दा पहिले नै तामाङहरू यस्तो अन्यायमा परिसकेको हुन सक्ने मान्यता लेखकको छ पृष्ठ १८-२८)। यसै प्रसङ्गमा सामाजिक बनोटको कुरा उठाइएको छ र कुन क्षेत्रमा कस्तो किसिमको सामाजिक बनोट थियो कुन सम्प्रदायको प्रभुत्व थियो भन्नेजस्ता महत्त्वपूर्ण सामाजिक अवस्थाहरूलाई केलाउने प्रयास गरिएको छ।

दोस्रो अध्यायमा सन् १७४३ देखि १८८५ सम्मको 'एकीकरण' अभियान तथा संस्कृतिकरण प्रक्रियामा गोर्खालीको विजय अभियान तथा राज्य विस्तार, राणाशासनको उदय, राज्य र समाज तथा जातीय, भाषिक पहिचानका सम्बन्धमा महत्त्वपूर्ण अवधारणाहरूसहित व्याख्या गरिएको छ।

पृथ्वीनारायण शाहले गरेको 'एकीकरण' प्रक्रिया हिन्दू दृष्टिकोणबाट हेर्दा एक हिन्दू शासकले राज्य विस्तारका लागि गर्ने लडाइँ वैध हो र यो उसको अधिकार क्षेत्रभित्र पर्छ भन्ने मान्यतामा आधारित त थिएन? लेखकले प्रश्न गरेका छन्। यसै प्रसँगमा गोर्खालीहरूले कीर्तिपुर विजयपश्चात् गरेका अन्यायहरूलाई पनि लेखकले प्रस्ट रूपमा उठाएका छन् (पृष्ठ ३७)। 'राज्य र समाज' शीर्षकभित्र 'एकतन्त्रीय जहानिया शासनका रूपमा चित्रित राणाशासनको सुरुआत र सन् १८४६ पूर्वको जनताप्रति समर्पित शासनको अन्त्य' भन्ने मान्यताकासाथ शाहवंशीय राजपरिवार र जनताबीचको सुमधुर सम्बन्धलाई जोड्ने प्रयास गरिएको प्रसँग उठाउँदै लेखकले सन् १८४६ को परिवर्तनले त्यति ठूलो परिवर्तनको प्रतिनिधित्व गर्दैन बरु यसले एक सम्भ्रान्त परिवारको प्राधान्यतालाई बढाइदियो र यस प्रकारको प्राधन्यतालाई संस्थागत गरिदियो भनेका छन्। उनको विचारमा यसले राणाशासनहरूलाई बलियो पारिदियो। केन्द्रीय नियन्त्रणलाई प्रोत्साहित गर्‍यो तथा जातपातका माध्यमद्वारा गरिने बन्देजलाई मजबुत पारिदियो। गोर्खाली राज्यको अधीनमा आएको क्षेत्रहरूसँगै उक्त क्षेत्रमा बस्नेहरूका माझ समान पहिचानको भावना कति विकसित भयो भन्ने

महत्त्वपूर्ण प्रश्नलाई सम्बोधन गर्दै कसरी नाम, धर्म, जात, रहनसहन आदिमा संस्कृतिकरण प्रक्रिया सुरु भयो भन्ने व्याख्या गरिएको छ।

राणाशासनको चर्चा गर्दा तात्कालीन सामाजिक, राजनैतिक र आर्थिक वस्तुस्थितिको वर्णन गरिएको छ र ब्रिटिस, राणाबीचको सुमधुर सम्बन्धको पनि चर्चा गरिएको छ। नेपाली भाषालाई कसरी जनतासँग परिचित गराइयो भन्ने कुराको चर्चा गरिएको छ।

राजाकेन्द्रित शासन व्यवस्थाभित्रका विदेश नीति, दलहरूसँगको सम्बन्ध र छिटोछिटो परिवर्तन हुने राजनीतिक परिवर्तनको वर्णन गरिएको छ। राजा महेन्द्र तथा वीरेन्द्रले भारत र चीनसँगको सम्बन्धका लागि अवलम्बन गरिएका रणनीतिहरूका बारेमा वर्णन गरिएको छ।

सन् १९५१-१९९१ सम्म घरेलु राजनीति र विदेशी सम्बन्धको उठान गर्दै पहिलो बहुदलीय प्रजातन्त्रको अनुभवदेखि प्रजातन्त्र पुनर्स्थापनासम्मको अवधिमाथि विश्लेषण गरिएको छ। यसबीचको राजनैतिक चर्चापरिचर्चाबाहेक विकास, विदेशी सहयोग, विकास कार्यक्रमको सफलता-असफलताजस्ता विषयवस्तुहरूलाई समेटिएको छ।

त्यसै गरी सन् १९५१-९१ का बीचमा देखिएका जीवनपद्धति, मूल्य-मान्यता, पहिचान र समग्रमा नेपाली समाजमा देखिएको परिवर्तनको चर्चा गरिएको छ। यसमा बजार, शिक्षापद्धति, मिडिया, राजनैतिक संस्कार, जातीयता, राष्ट्रियता आदिका विषयमा पनि चर्चा गरिएको छ। सन् १९९१ पछिका घटनाक्रमलाई उठाउने क्रममा पार्टी, पार्टीका नीति, माओवादी विद्रोहको उदय र विकासक्रमका साथै नेपालमा देखिएको सङ्कट र यसको सुरुआत तथा नेपाली समाज कता जाँदै छ भन्नेजस्ता वर्तमानका महत्त्वपूर्ण घटनाक्रमको अध्ययन-विश्लेषण गरिएको छ।

विकासको खोजीअन्तर्गत जनसङ्ख्याको वृद्धिदर, स्थानान्तरणको समस्या मात्र होइन वातावरणीय दृष्टिले अति महत्त्वपूर्ण मानिएको भूक्षयीकरण प्रक्रिया, योजना आयोगको स्थापना र पञ्चवर्षीय योजनाको कार्यान्वयनको विषयमा चर्चा गरिएको छ। विशेष गरी सोभियत युनियनको औद्योगिकीकरणबाट प्रभावित भए पनि योजनाको काम भने भारतीय योजनाबाट प्रभावित बन्यो र अर्थव्यवस्थामा राज्यको पूर्ण नियन्त्रण हुन सकेन भन्ने दाबी लेखकको छ।

राजा वीरेन्द्रको कार्यकालमा भएका विकास निर्माणको पहलका बारेमा पनि उल्लेख गरिएको छ। विकास क्षेत्रको विभाजन, जिल्लाको वर्गीकरण र स्वायत्तताका लागि भएका प्रयासहरूको चर्चा गरिएको छ। तर यस प्रकारका वर्गीकरणहरू कुनै संससाधनहरूको उचित बाँडफाँडका लागि वा निश्चित योजनाका लागि थिएन बरु यो सामान्य रूपमा भएका प्राकृतिक खोलानाला वा पहाडलाई आधार मानी गरिएको थियो (पृष्ठ १२६)। सन् १९७२ को शिक्षा प्रणाली र यसअन्तर्गत प्राज्ञिक कामका लागि एक वर्ष गाउँमा बिताउनु पर्ने व्यवस्था (राष्ट्रिय विकास सेवा) तत्कालीन अवस्थाको सकारात्मक कदम भए पनि राजनैतिक पूर्वाग्रहका कारण सरकारले नै उक्त कार्यक्रम स्थगित गरिदियो। यस बेलाका चर्चित नाराहरू 'आधारभूत

आवश्यकता' तथा 'एसियाली मापदण्ड' का प्रसङ्गहरू पनि विकासको खोजीअन्तर्गत उठाइएका छन्। राजा महेन्द्र तथा वीरेन्द्रका कार्यकालको चर्चा गर्ने क्रममा विदेशी आर्थिक सहयोग, भारतसँग गरिएका जलस्रोत सम्झौता (कोसी, गण्डक) र यसअन्तर्गत सिँचाइ तथा बिजुलीका लागि नेपाल-भारतबीच भएका सहमतिहरू तथ्याङ्कसहित उल्लेख गरिएको छ। नेपालका विभिन्न आयोजनाहरूमा रूसी, भारतीय, अमेरिकन सहयोग र पछिल्ला चरणमा यसका लागि अन्य मुलुकहरूको चासो र यस्ता सहयोगमा भएको वृद्धिका विषयमा पनि चर्चा गरिएको छ। वास्तवमा राजा महेन्द्र र वीरेन्द्रले चाहेको वा प्रयास गरेको उदोमुखी विकास क्रान्ति उनीहरूका पुरातनवादी समर्थकहरू र कमजोर प्रशासनिक संयन्त्रका कारण सफल हुन सकेनन्। फलस्वरूप नेपाल विदेशी स्रोततर्फ उन्मुख हुन थाल्यो र आफ्नै देशमा रहेका साधनहरूको उचित प्रयोग हुन सकेन (पृष्ठ १३६) र यो क्रम हालसम्म जारी छ।

शिक्षाका बारेमा चर्चा गर्ने क्रममा लेखक सन् १९५२-५४ मा ५% रहेको साक्षरतादर सन् १९९१ सम्ममा ४०% पुगेको तथ्याङ्क राख्छन् भने मलेरिया उन्मूलन, खोप, सरसफाइ र सामान्य स्वास्थ्यसम्बन्धी जानकारीले स्वास्थ्यमा आएको सुधारका बारेमा चर्चा गर्न पनि छुटाउँदैनन्। राणाशासनको अन्त्य हुँदा २७६ किमिको बाटो १९९० सम्ममा ७३३० किमि बनेको तथ्याङ्क र हवाईमार्ग, सञ्चार, विद्युतीकरण, सामुदायिक वन, निजी क्षेत्रको लगानीको मात्र होइन पञ्चायतकालकै सबैभन्दा सफल व्यवसायमध्येको एक 'कार्पेट व्यवसाय' को चर्चा गर्न पनि उनी छुटाउँदैनन्।

सन् १९५१-९१ बीचमा देखिने नेपालीहरूको दैनिक जीवनपद्धति, मूल्य-मान्यता र पहिचानका विषयलाई पनि पुस्तकमा समावेश गरिएको छ। जातजाति र भाषागत चर्चाका क्रममा नेपाल भाषाको आन्दोलन र भाषाका विषयमा भएका अन्य क्रियाकलापहरूको वर्णन गरिएको छ भने सोही बखत आएका पञ्चायती नाराहरू 'एक भाषा, एक भेष, एक देश' तथा 'हाम्रो राजा हाम्रो देश, हाम्रो भाषा हाम्रो भेष' को चर्चा गरिएको छ। यस प्रकारका कतिपय क्रियाकलापहरूको असर अन्य भाषाहरूमा पर्न थाल्यो उदाहरणका लागि सन् १९५२-५४ सम्म ४९% नेपालीहरूको प्राथमिक भाषाका रूपमा रहेको नेपाली भाषा सन् १९९१ सम्ममा ५८% जनताको प्राथमिका भाषाका रूपमा विकसित हुन पुग्यो।

प्रजातन्त्रपछिको समय सन् १९९१-९९ बीच चर्चामा आएका भ्रष्टाचारसम्बन्धी प्रसङ्गहरू उठाइएको छ जुन प्रजातन्त्र समाप्त पारिँदा सबैभन्दा ठूलो कारणका रूपमा प्रस्तुत भएको छ। एमालेले गर्ने गरेको आन्दोलन र आन्दोलनपछि गरिने सम्झौताहरूदेखि लिएर देउवा सरकारको कार्यकालमा बनेको मन्त्रमण्डल र राजनीतिक क्षेत्रमा भित्रिएको विहारीतन्त्रको पनि चर्चा गरिएको छ। माओवादी सङ्घर्षको उद्भव र विस्तारमा मद्दत पुग्ने गरी प्रहरी, सैनिक र राजनीतिक पार्टीहरूले कहाँ गल्ती गरे भन्ने चर्चा र विश्लेषण गरिएको छ। षडयन्त्रको सिद्धान्तसहित

राजदरबार हत्याकाण्डको वर्णन गरिएको छ, जहाँ आमनेपालीको सोचाइ र मान्यतालाई पनि ठाउँ दिइएको छ।

नेपालको भविष्यका विषयमा चर्चा गर्ने क्रममा विश्वब्याङ्कले सन् १९९८ मा पेस गरेको प्रतिवेदनको उल्लेख गरेका छन् लेखकले। जसले काठमाडौं उपत्यका र बाँकी नेपाल फरक र असन्तुलित देशका रूपमा देखा पर्छ भनेको छ।

यसै सन्दर्भमा नेपाली समाजमा देखिएका, मदिरा, र लागू औषधको प्रभाव, राष्ट्रिय तथा अन्तर्राष्ट्रिय गैरसरकारी संस्था, स्थानान्तरणको समस्या, अर्थव्यवस्थामा रेमिटेन्सको सकारात्मक प्रभाव, आदिको पनि चर्चा उत्तिकै चाखलाग्दो ढङ्गबाट गरिएको छ। सार्कमा खुला व्यापारको अवधारणासँगै भारतीय प्रभावका बारेमा विचार हुनु पर्ने, कृषिमा आधारित दीर्घकालीन नीति, शेरबहादुर देउवाको पालामा भूमि व्यवस्थितिकरण गर्ने प्रयासको असफलता, मदिरा बेचबिखनका विषयमा माओवादीको भगिनी सङ्गठन र सरकारबीच भएको असफल सम्झौता, स्रोत तथा साधनहरूको समस्या र भएका स्रोतहरूको वितरणमा देखिएको असमानता आदिका बारेमा पनि चर्चा गरिएको छ। स्वायत्तताका विषयमा चर्चा गर्दै, हिन्दू राज्यभन्दा पनि बिस्तारै धर्मनिरपेक्षतातर्फ नेपाली समाज ढल्किँदै छ जसलाई माओवादी सङ्घर्षले थप टेवा दिएको छ भन्ने मान्यता लेखकको छ (पृष्ठ २३३)।

समग्रमा यसभन्दा पहिले एउटै पुस्तकमा यति विविध विषयलाई समेटेर नेपाली इतिहासको चर्चा गरिएको थिएन जुन यस पुस्तकको मुख्य विशेषता हो। क्याम्ब्रिज युनिभर्सिटी प्रेसद्वारा प्रकाशित यस पुस्तकमा केही विश्लेषणमा कमी र तथ्यहरूमा गल्ती भने देखिएका छन्।

विशेष गरी दिल्ली सम्झौताका विषयमा लेखकले कम व्याख्या गरेका छन् र यस विषयमा कृष्णप्रसाद भट्टराईको (*हिमालखबर* पत्रिकामा, सन् २००० मा प्रकाशित) एक अन्तर्वार्तालाई सन्दर्भसामग्रीका रूपमा उल्लेख गरेका छन्, जुन कुरा *तरुण* बुलेटिन नं ३, अप्रिल १९७१ र *तरुण* बुलेटिन नं ४, सेप्टेम्बर १९७१ मा विपी कोइरालाद्वारा लिखित लेख, किरण मिश्रको *विपीः लाइफ एण्ड टाइम्स* र *विपी कोइरालाको आत्मवृत्तान्त*को पृष्ठ ११३ र १३८ सँग बाझिएको देखिन्छ। दिल्ली सम्झौता काङ्ग्रेसको आन्तरिक कारण वा सशस्त्र सेनालाई नियन्त्रण गर्न नसकिने कारणले स्वीकार गरिएको हो भन्ने भट्टराईको तर्क अन्य काङ्ग्रेसका नेताहरूले र स्वयं विपीले पनि राखेको देखिँदैन। त्यसै गरी कृतज्ञता ज्ञापन गर्ने क्रममा रामचन्द्र पौडेल हुनु पर्ने मा रामकृष्ण पौडेल हुनु, पृष्ठ ७१ मा युवराज महेन्द्रको दोस्रो छोरो (माइलो) हुनु पर्नेमा राजाको कान्छो छोरो हुनु, पृष्ठ ८२ मा रतन मानको ठाउँमा मरिचमान लेखिनु गम्भिर त्रुटिका केही नमुना हुन्। पृष्ठ १६७ मा बूढानीलकण्टेका ठाउँमा बूढानीलकण्ठ, पृष्ठ १६८ मा सन् १९५६-५७ का बीच के.आई. सिंहको सरकार हुनु पर्नेमा टङ्कप्रसाद आचार्यको सरकार भएको, पृष्ठ २३५ को दोस्रो अनुच्छेदको ११औं पङ्क्तिमा सत्रौं शताब्दीको सट्टामा अठारौं शताब्दी हुनु

पर्ने र २४औं पङ्क्तिमा १६औं शताब्दीको ठाउँमा १८औं हुनु पर्ने देखिन्छ। पृष्ठ २३६ को पारिवारिक वंशवृक्षमा महेन्द्रका छोराहरूको पङ्क्तिमा वीरेन्द्रपछि ज्ञानेन्द्र हुनु पर्नेमा धीरेन्द्र भएको छ भने पृष्ठ २४० मा वामदेव गौतमको सङ्क्षिप्त परिचयमा जीपी मैनालीको ठाउँमा सीपी मैनाली हुनु पर्ने, पृष्ठ २४५ मा सुवर्णशमशेरको परिचयमा छोराको सट्टा नाति हुनु पर्ने, पृष्ठ २५४ मा मरिचमानको ठाउँमा रतनमान, पृष्ठ २४६ मा भएको धीरेन्द्र शाहको परिचयमा माइलो छोराको ठाउँमा कान्छो छोरा हुनु पर्ने र पृष्ठ २४६ मा ज्ञानेन्द्र शाहको परिचयमा कान्छोको सट्टा माइलो हुनु पर्ने देखिन्छ।

यसरी पुस्तकमा केही गल्तीहरू देखिए पनि समग्रमा हेर्दा नेपाली इतिहासमा चाख राखेहरूले पढ्नै पर्ने पुस्तकका रूपमा *अ हिस्ट्री अफ नेपाल* नामक पुस्तक बजारमा आएको छ।

पुस्तक समीक्षाका लागि दुई प्रति पुस्तककहरू निम्न ठेगानामा उपलब्ध गराइदिनुहुन अनुरोध गरिन्छ। (पुस्तकको भित्र वा बाहिर खाममा 'समीक्षाका लागि' भनेर उल्लेख गरिदिनुहोला।)

सम्पादक-मण्डल
बहाः जर्नल
सोसल साइन्स बहाः, हिमाल एसोसिएसन
पाटनढोका, पोस्ट बक्स १६६, ललितपुर, नेपाल

# पुरानो पातो : श्री ५ हरूको सम्बोधन

---

कुनै पनि देशका शासकहरूले गर्ने निर्णयले उक्त देशको राजनीति, आर्थिक, सामाजिक तथा अन्य धेरै सन्दर्भहरूमा महत्त्वपूर्ण प्रभाव पार्ने गर्छ। सबै निर्णयहरूको असर सधैंका लागि नपर्न सक्छ अथवा सामाजिक, राजनीतिक वा आर्थिक दृष्टिकोणले समाजमा उथलपुथल नल्याउन पनि सक्छ र समाजसँग त्यति सरोकार नराख्ने पनि हुन सक्छ। तर कतिपय निर्णयहरूले भने तत्कालीन समयमा मात्र होइन दीर्घकालसम्म उत्तिकै महत्त्व राख्छ। असरहरू छोडेको हुन्छ र वेला वेलामा चर्चापरिचर्चा, बहस, विश्लेषण वा अनुसन्धानको विषय बनिरहेको हुन्छ। यसरी नै सम्बोधन, भाषण, सन्देशका रूपमा आउने निर्णयहरू भविष्यमा गएर अनुसन्धानकर्ता वा विश्लेषकका निम्ति महत्त्वपूर्ण ऐतिहासिक सामग्रीका रूपमा देखा पर्छन्।

विभिन्न समयमा आउने यसखाले निर्णयहरूले प्रायः जनतालाई सम्बोधान गर्ने गरेको हुन्छ। जनताका नाममा, जनताका लागि, जनतालाई सम्बोधित हुने कतिपय निर्णयहरूले जनतालाई प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा असर पारिरहेको हुन्छ। जनतामका निम्ति भनिएका यी विषयहरूमा जनता स्वयंको भने आआफ्नै मत हुने गर्छ र आआफ्नै तरिकाले पक्ष वा विपक्षमा आफ्ना धारणाहरू राख्ने गर्छन्। जनताले व्यक्त गर्ने यस प्रकारका धारणा वा मान्यताअनुरूपको परिवर्तन हुन समय लाग्ने गर्छ। तर कतिपय अवस्थामा जनताले चाहेर वा नचाहेर पनि परिवर्तन भइरहेको हुन्छ र यस्ता परिवर्तनहरू पनि जनताकै नाममा हुने गर्दछन्। यस्तो परिवर्तनको अनुभव जनताले गर्छन् र विश्लेषण पनि आफ्नै किसिमले गर्दछन्।

विश्लेषणको काम, प्राज्ञ, विश्लेषक, वा अनुसन्धानकर्ताहरूको हो। उनीहरू यस खाले घटनालाई लिएर बहस, छलफल, समालोचना, समीक्षा वा अनुसन्धान गर्ने गर्छन् र एक खाले निष्कर्षमा पुग्ने गर्छन्, जसले भविष्यमा मार्ग प्रदर्शकका रूपमा काम गर्न सक्दछ।

यसैलाई मद्दत पुग्न र ऐतिहासिक दृष्टिकोणले महत्त्व बोकेका विविध सामग्रीहरू प्रकाशन गर्ने क्रममा यस जर्नलको पहिलो अङ्कमा राणा प्रधानमन्त्री चन्द्रशमशेरले संवत् १९८१ साल मङ्सिर १४ गते शुक्रबारका दिन 'करियाहरूलाई अमलेख गराउनेबारेमा बक्सेको सम्बोधन' लाई समावेश गरेका थियौं।

यसपल्ट हामीले शाहवंशीय राजाहरूमध्येबाट चार राजाहरू (श्री ५ त्रिभुवन, महेन्द्र, वीरेन्द्र र ज्ञानेन्द्रवीरविक्रम शाहदेव) ले फरक-फरक समय र परिवेशमा व्यक्त गरेका शाही सम्बोधनहरूलाई समावेश गरेका छौं। सबै राजाहरूबाट व्यक्त शाही सम्बोधनमा जनताको हितलाई सर्वोपरी मानेको र जनताको चाहनाअनुरूप नै यी निर्णयहरू भएको उल्लेख छन् तर सबै सम्बोधनका प्रकृति र उद्देश्यहरू भने एकै छैनन्।

श्री ५ त्रिभुवनको २००७ साल फागुन ७ गतेको शाही घोषणा गृष्मबहादुर देवकोटाको *नेपालको राजनैतिक दर्पण* बाट लिइएको छ। २०१७ साल पुस १ गते राजा महेन्द्रले संसद् विघटन गर्दा दिएको सम्बोधनलाई गृष्मबहादुर देवकोटाको *नेपालको राजनैतिक दर्पण* बाट लिइएको छ। नेपाल अधिराज्यको संविधान २०४७ लागू गर्दा श्री ५ वीरेन्द्रबाट बक्सेको सम्बोधनलाई *गोरखापत्र* २०४७ कात्तिक २४ शनिबार वर्ष ९० अङ्क १८२ बाट लिएका छौं भने २०६१ मा माघ १९ गते श्री ५ ज्ञानेन्द्रवीरविक्रम शाहदेवबाट राष्ट्रको नाममा बक्सेको शाही घोषणालाई २०६१ साल माघ २० गतेको *गोरखापत्र*बाट लिएका छौं।

**श्री ५ त्रिभुवनको २००७ सालको शाही घोषणा**

आगे हाम्रो मुलुकका भाइ-भारदार, सन्त-महन्त, रैती दुनियाँ, साहू मजाजन गैह्रके यथोचित,

उप्रान्त सम्वत् १९०३ सालमा त्यस समयमा यो राज्यको गद्दीमा राजभएको हाम्रा स्वर्गीय पूज्य जिज्युबुबाज्यू श्री ५ महाराजाधिराज सुरेन्द्रवीरविक्रम शाहदेवले धेरै गम्भीर र महत्वपूर्ण कारणले आफ्नु र आफ्ना उत्तराधिकारीहरूका तर्फबाट यो मुलुकको शासनभार श्री ३ महाराज जङ्गबहादुर राणालाई सुम्पिबक्सेको हुनाले,

उपरोक्त श्री ३ महाराज जङ्गबहादुर राणाका उत्तराधिकारीहरूले हाम्रा पूर्वजहरूका तर्फबाट मौसुफहरूका प्राइममिनिष्टरहरूको हैसियतमा यो राज्यको शासन चलाइआएकोले,

औ वर्तमान समयमा श्री ३ महाराज मोहनशमशेर जङ्गबहादुर राणाले हाम्रो तर्फबाट औ हाम्रो नाममा यो राज्यको शासन चलाई आएको हो,

औ हाम्रा प्रजाको शासन अबउप्रान्त निजहरूले निर्वाचन गरेको एक बैधानिक सभाले तर्जुमा गरेको गणतन्त्रात्मक विधानको अनुसार होओस् भन्ने अहिले हाम्रो इच्छा र निर्णय भएकोले,

औ सो विधान तयार नभएसम्म अहिले हामीलाई हाम्रो कार्य-सम्पादन गर्नमा मदद र सल्लाह दिनाका निमित्त दुनियाँको विश्वास भएका दुनियाँका प्रतिनिधिहरूसमेत सम्मिलित भएको एक मन्त्रिमण्डलको संगठन होओस् भन्ने हाम्रो इच्छा र निर्णय भएकोले,

तसर्थ हामीबाट यो घोषणाद्वारा हामीलाई हाम्रो कार्यको सम्पादनमा मदद गर्न हाम्रा अति विश्वासपात्र र प्रिय श्री ३ महाराज मोहनशमशेर जंगबहादुर राणा हाम्रो प्राइममिनिष्टर र परराष्ट्र मन्त्री, (२) श्री मिनिष्टर बबरशमशेर जंगबहादुर राणा रक्षामंत्री (३) श्री विश्वेश्वरप्रसाद कोइराला गृहमन्त्री (४) श्री सुवर्णशमशेर अर्थमंत्री (५) श्री चूडाराजशमशेर वनविभागका मंत्री (६) श्री गणेशमान सिंह उद्योग-वाणिज्यमंत्री (७) श्री नृप जंग राणा शिक्षामंत्री (८) श्री भद्रकाली मिश्र यातायातमंत्री (९) यज्ञबहादुर बस्न्यात स्वास्थ्य, स्वायत्त-शासनमंत्री, (१०) श्री भरतमणि शर्मा खाद्य र कृषिमंत्रीसमेत अरू मंत्रीहरू सम्मिलित भएको एक मंत्रिमण्डल गठन र नियुक्त गरिबक्सेका छौं।

माथि उल्लेख गरिएका मानिसहरू हाम्रो इच्छाअनुसार आफ्नो ओहदामा रहनेछन् औ संयुक्तरूपमा हामीप्रति जिम्मदार रहनेछन्। यो राज्यको शासन-सम्बन्धी विषयहरूमा मंत्रिमण्डलका सबै निर्णयहरू हामीलाई जाहेर गर्ने हाम्रो प्राइममिनिष्टरको कर्तव्य हुनेछ औ यो राज्यको शासन-सम्बन्धी विषयहरूका बारेमा हामीले खोजिबक्सेका सबै समाचार पनि उनीले हामीलाई जाहेर गर्ने उनको कर्तव्य हुनेछ।

औ हामी यसद्वारा हाम्रा सबै प्रजालाई हामी र हाम्रा उत्तराधिकारी प्रति सच्चा वफादारी धारण गर्नाका निमित्त आमंत्रण गर्दछौं औ हाम्रा सबै जंगी, निजामती अफिसरहरू र यो राज्यका

अरू वासिन्दाहरूलाई आज्ञाकारी भई हाम्रा मंत्रीहरूलाई निजका कर्तव्यको सम्पादनमा मद्दत र सहायता गर्नालाई आदेश गरिबक्सेका छौं। राजनैतिक अपराधमा परेका सबैलाई निजहरू २००७/१२/२०/२ अघि आफ्ना घर फर्की शान्तिमय कामकाजमा लागे भने निजहरूलाई माफी र विस्मृति दिने, औ त्यस्ता अपराधमा जफत भएका निजहरूका जायदाद तिनीहरूलाई फिर्ता दिने हाम्रा शाही इच्छा छ।

यो हाम्रो आन्तरिक आशा छ कि यो नयाँ व्यवस्थामा सरकार र दुनियाँले मिलिजुली नेपालको उन्नति र समृद्धिका निमित्त प्रयत्न गर्नेछन्। परमेश्वरले हामीलाई र हाम्रा अधिकारीवर्गलाई हाम्रा प्रजाको हितका निमित्त उपरोक्त हाम्रा इच्छाहरू पालन गर्ने शक्ति दिउन्।

नारायणहिटी दरबार, काठमाडौं

## श्री ५ महेन्द्रको २०१७ सालको शाही घोषणा

आगे प्यारा प्रजा गैह्रके यथोचित्,

जनताले छानेका प्रतिनिधिहरूले नै देशप्रति ज्यादा जिम्मेवारी महसूस गरी प्रजातन्त्रको जग मजबूत हुने वातावरण पैदा गर्दछन् र देशमा स्थिरता आई विकास द्रुतगतिले हुन्छ भन्ने विश्वास लिई करीब २ बर्षअघि देशमा आमचुनाव गराएको सबैमा विदितै छ। फलस्वरूप, नेपाली कांग्रेस बहुमतमा आयो र जनताको विश्वास प्राप्त गरेको पार्टीलाई नै संविधान अनुसार शासनभार सुम्पी देशप्रतिको जिम्मेवारीको हिस्सेदार बनाउन पाउंदा अत्यन्तै सन्तोष लाग्नुको साथै केही वर्षदेखि देशमा भएको अस्थिरताले हामीमा पैदा गरेको चिन्ता हराउनु पनि स्वाभाविकै कुरा भएको थियो।

त्यसपछि देशमा घटेको परिस्थितिको अध्ययन गरी हामीबाट समय-समयमा जनप्रतिनिधिहरू र सरकारमा रहेका व्यक्तिहरूमलाई समेत कर्तव्यबाट च्युत नहुने संकेत गरेको कुरा पनि सबैले सम्झेकै हुनुपर्दछ। प्रजातन्त्र पद्धति अनुसार छानिएका प्रतिनिधिहरूद्वारा जनता र सरकारको बीचमा भएको भ्रमात्मक वातावरण राम्रोसंग सुल्झाई राष्ट्रको हित विकास गर्ने पूरा कोशिश हुनेछ भन्ने सबैले आशा एवं विश्वास राखेका थिए, तर ठीक त्यसको उल्टो प्रजातन्त्र पद्धतिको आडमा राष्ट्र र जनतालाई एकातिर पन्छाई व्यक्तिगत र दलगत स्वार्थपूर्ति गर्नका लागि अधिकार प्रयोग गरियो ऐन कानूनको मर्यादा नराखी छिटो, छरितो र योग्य बनाउने नाममा यो मन्त्रिमण्डले देशको प्रशासन यन्त्र निष्क्रिय आधारहीन बनाउने चेष्टामा लाग्यो। अधिकारको दुरूपयोग हुंदा भ्रष्टाचार बढ्नको साथै शिथिलता उत्पन्न भई देशमा शान्ति सुरक्षा कायम राख्न यो मन्त्रिमण्डल बिलकूल असमर्थ भएकोले, र अराष्ट्रिय तत्वहरूले धेरै मात्रामा प्रोत्साहन पाई राष्ट्रिय एकतामा समेत बाधा पुऱ्याउने वातावरण आउन लागेको पनि कसैमा नछिपेको तथा वैज्ञानिक विश्लेषण र वस्तुस्थितिको अध्ययन बिना कदमहरूले समाजमा चाहिने परिवर्तन को सट्टा जनतामा अशान्त र दूषित वातावरण मात्र पैदा गरेकोले, राष्ट्रको हित तथा प्रजातन्त्रकै निमित्त पनि देशमा यस्तो स्थिति धेरै समयसम्म रहनदिनु उचित नभएकोले, देशको एकता, राष्ट्रियता र सार्वभौमिकता बचाउने, देशमा अमन चैन कायम राख्ने र देशलाई कुनै कारणबाट पनि बिग्रंदो स्थितिबाट बचाउने अन्तिम जिम्मेवारी पनि हामीमै भएकोले। उपरोक्त वातावरण हटाई शान्ति सुरक्षा कायम राख्न र देशलाई संक्रमणं स्थितिबाट बचाउन विशेष व्यवस्थाको जरूरत पर्न आएकोले तथा देश र जनताको हितलाई मात्र ध्यानमा राखी संविधानको धारा ५५ को अधिकार प्रयोग गरी यो मन्त्रिमण्डल र संसद्का दुबै सदनहरू समेत हामीबाट आज यो घोषणाद्वारा विघटन गरिबक्सेका छौं। कुनै नयां व्यवस्था गर्न केही समय लाग्ने हुंदा अर्को व्यवस्था नभएसम्म मुलुकको शासनभर हामीबाटै स्वयं ग्रहण गरिबक्सेका छौं।

हाललाई यस घोषणाद्वारा संविधानका देहायका धाराहरू निलम्बन गरिबक्सेका छौं,

भाग २ (दुइ) का सबै धाराहरू

भाग ३ (तीन) का सबै धाराहरू

भाग ४ (चार) को धारा ११ (एघार) बाहेक अरू सबै धाराहरू

भाग ५ (पांच) को धारा ५५ (पचपन्न) बाहेक अरू सबै धाराहरू

भाग ९ (नौ) को परिच्छेब ३ (तीन), तर धारा ७३ (त्रिहत्तर) बाहेक , र

भाग १० (दश) का सबै धाराहरू

यस अवस्थाबाट सरकारी जङ्गी तथा निजामती कुनै कर्मचारीहरूले आफ्नो जिम्मेवारी, काम र कर्तव्यबाट विचलित हुनु वा अलमलिनु पर्दैन र सबैले आफ्-आफ्ना स्थानबाट आफ्ना कर्तव्य पालन गर्नेछन्। साथै, सबै देशवासीहरूको सदिच्छाले नै देशमा सबै कुराको सुव्यवस्था हुनेछ भन्ने हामीलाई पूर्ण विश्वास लागेको छ।

परराष्ट्र विषयमा हामीले दृढतापूर्वक आफ्नो तटस्थता अपनाई सबै मित्रराष्ट्रहरूसंग मित्रताको नीति नै कायम राख्नेछौं र हामी देशमा विश्वभर शान्ति र मित्रताको कामना गर्दछौं।

श्री पशुपतिनाथल देश र जनताको कल्याण गरून् !

जय नेपाल

## श्री ५ बीरेन्द्रको २०४७ सालको शाही सम्बोधन

प्यारा देशवासीहरू,

लोक सम्मतिकै आधारमा मुलुकको शासन चलाउने हाम्रो परम्परा अनुसार राजा र जनताको सहयोगबाट २००७ सालमा नेपालमा प्रजातन्त्रको स्थापना भएको बेला प्रजातन्त्रको विकासमा नेपालमा जे जति राजनैतिक परिवर्तनहरू भए ती सबै जनताको चाहना र सहयोगबाट भएका हुन्।

प्रजातन्त्रमा व्यक्तिको स्थान महत्वपूर्ण हुन्छ। व्यक्ति व्यक्तिकै सामूहिक चाहना र चासोबाट नै प्रजातान्त्रिक भावना र संस्कारको विकास हुन्छ। देश विकासको लामो यात्रमा प्रत्येक व्यक्तिलाई राष्ट्र निर्माणमा सरिक हुन संविधानले व्यक्तिगत स्वतन्त्रता र मानव अधिकारको स्पष्ट व्यवस्था गरेको छ। संविधान प्रदत्त अधिकारको विवेकपूर्ण प्रयोगबाट आवश्यक प्रजातान्त्रिक संस्कार प्राप्त हुनेछ भन्ने मलाई लागेको छ। खुला समाज, उदार राजनीति र लचिलो आर्थिक व्यवस्थाका परिधि भित्र प्रत्येक नेपालीको व्यक्तित्व फस्टाउन सक्छ भन्ने हाम्रो विश्वास छ।

जनताको इच्छा अनुसार नेपालमा पुनः बहुदलीय व्यवस्था स्थापना गरी प्रजातन्त्रलाई सुदृढ गर्न संविधान सुझाव आयोग गठन गरिबक्सेका थियौं। सम्पूर्ण जनतालाई एकताको सूत्रमा बाँधी नेपाली मात्रको आकांक्षा अनुसार संवैधानिक राजतन्त्र तथआ बहुदलीय प्रजातन्त्रको विकास गर्न यो नेपाल अधिराज्यको संविधान आधार हुनेछ भन्ने दृढ विश्वास राख्दै आयोगले तयार गरेको मसौदालाई मन्त्रिपरिषद्को सिफारिसमा हामीमा अन्तर्निहित संवैधानिक तथा राजकीय सत्त र विशेषाधिकारको प्रयोग गरी नेपाल अधिराज्यको संविधान २०४७ जारी गरी तत्काल लागू गरिबक्सेका छौं। साथै नेपालको संविधान २०१९ प्रतिसंहरण गरिबक्सेका छौं।

श्री पशुपतिनाथले हामी सबैको रक्षा गरून्।

जय नेपल।

**श्री ५ ज्ञानेन्द्रको २०६१ को शाही घोषणा**

प्यारा देशवासीहरू,

१ श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहबाट प्रारम्भ गरिबक्सेको एकीकरण अभियानबाट निर्माण भएको नेपाल अधिराज्यमा लोकसम्मतिको आधारमा शासन व्यवस्था चलाउन हाम्रा पुर्वजहरूबाट ऐतिहासिक क्रान्तिकारी पाइलाहरू चालिबक्सेर देश र जनतालाई उज्वल भविष्यप्रति आलोकित गरिबक्सेको सर्वविदितै छ। नेपालको एकीकरण, प्रजातान्त्रीकरण र आधुनिकीकरणको प्रत्येक मोडमा नेपाली जनता र राजा दुवै मिलेर निर्णायक भूमिका खेलेको इतिहास स्वंय साक्षी छ।

२ आज जनचाहनाबमोजिम देश र जनताको लागि शान्ति पुनर्स्थापना गरी बहुदलीय प्रजातन्त्रको रक्षाका लागि फेरि एकपटक ऐतिहासिक निर्णयको घडीमा हामी आइपुगेका छौं। हत्या, हिंसा र विध्वंसले देशलाई विनाशको भिरालोमा पुऱ्याउँदा पनि, देश र जनताको नाममा राजनीति गर्नेहरूले देशर जनताको हितप्रति आँखा चिम्लिन छाडेनन्। सत्ताका लागि हानाथाप, सत्ता पाएपछि राज्य संयन्त्रको दुरुपयोग तथा देश र जनताको मूल्यमा व्यक्तिगत वा समूहगत स्वार्थ पूरा गर्ने प्रतिष्पर्धाले परिस्थिति निरन्तर बिग्रने क्रम चली रह्यो। राजनीतीको नाममा कानुनी राज्यको सर्वमान्य मर्यादा पनि भङ्ग गर्ने प्रयासहरू भए। बहुदलीय प्रजातन्त्रको सार्थक अभ्यासद्वारा हाम्रा प्यारा जनताले सामाजिक, राजनीतिक एवं आर्थिक न्याय पाउन् भन्ने हाम्रो चाहनाले मूर्तरूप लिनसकेन। जनहितमा निर्माण गरिएका विकासका पूर्वाधारहरूसमेत ध्वस्त पार्ने जस्ता देश र जनविरोधी अपराधहरू निरन्तर बढ्दै गए। आतङ्कवादविरूद्ध सम्पूर्ण प्रजातान्त्रिक शक्तिहरू सङ्गठित रूपमा प्रस्तुत हुनुपर्नेमा सत्ताको हानाथापमा लागेर सोझा कार्यकर्ताहरूलाई जनहितका लागि बनेका सुविधाहरू ध्वस्त पार्न उक्साउनुमा नै नेताहरूले राजनीतिको नाम दिन थाले। यसरी निरन्तर बिग्रदै गएको अवस्थामा आतङ्ककारी गतिविधिमा पूर्णविराम लगाएर शान्ति सुरक्षाको पुनर्स्थापनाद्वारा जनचाहना पूरा गर्ने संकल्प लिनुपरेको छ।

प्यारा देशवासीहरू,

३ प्रजातन्त्र र प्रगति एक अर्काका परिपूरक हुन्। तर नेपालको विगत केही वर्षको तीतो अनुभवले यसलाई असंगति साबित गर्ने चेष्टा गऱ्यो। सत्ताको लागि केन्द्रित राजनीतिमा नै अलमल्याएर बहुदलीय प्रजातन्त्रलाई अवमूल्यन गरियो। सरकार टिकाउने र फाल्ने होडमा संसद्मा विकृतिहरू भित्र्याइयो। कुनै पनि प्रतिनिधीसभालाई आफ्नो अवधि पूरा गर्न दिइएन। जनताको आशा भङ्ग गर्ने, भरोसा भत्काउने र प्रजातन्त्रमा नै वितृष्णा फैलाउने क्रम बढ्दै गयो। चुनाव गराउन नसकेपछि कसैप्रति पनि उत्तरदायी हुनु नपर्ने अप्रजातान्त्रिक सरकारको अभ्यास सुरू गर्ने तारतम्य मिलाउन खोजियो। जनप्रतिनिधिहरूको शून्यता सिर्जना गर्ने सबै दलहरू

लिखित रूपमा एकजुट भए तर यो शून्यता हटाउन मिलेर काम गर्न भने सहमत भएनन्। राजनीतिक दलहरूको संलग्नता र सहमतिमा भएको जनप्रतिनिधित्वविनाका शासन व्यवस्थाको चाँजोपाँजो जनचाहना तथा बहुदलीय प्रजातन्त्रको मर्यादा अनुकूल थिएन। त्यसैले शीघ्रातिशीघ्र जनप्रतिनिधित्व प्रणालीलाई क्रियाशील तुल्याउने उद्देश्यले प्रजातन्त्रमा निष्ठा राख्ने सबैलाई हामीबाट आह्वान गरेका थियौं। आमजनता,नागरिक समाजका प्रतिनिधिहरू तथा राजनीतिक दलका नेताहरूलाई पटक पटक भेटेर जनमत बुझ्ने र जनचाहना तथा देशको आवश्यकता सम्झाउने प्रयास पनि गरिएकै हो। नेपाल र नेपाली जनताले भोग्नुपरिरहेको अशान्ति र ध्वंशात्मक गतिविधिको अन्त गरी देशलाई शान्तिपूर्ण अवस्थामा फर्काउन अब ढिलो गर्नु हुँदैन भन्ने नेपाली जनता र नेपालका हितैषीहरूको एकमात्र चाहना भएको तथ्य पनि सम्झाइएकै हो। शान्ति सुरक्षा कायम गरी आम चुनाव गराउन विभिन्न राजनीतिक दलका नेताहरूलाई कार्यकारिणी अधिकारसहित मन्त्रिपरिषद् गठन गर्ने अवसरहरू पनि पटक-पटक दिएकै हो। तर परिस्थितिमा सुधार आउन सकेन। मिलेर सरकार नचलाउने, सत्ता बाहिर जानेवित्तिकै सरकारको विरोधमा उत्रने संक्रामक रोगले राष्ट्रिय राजनीतिलाई सिकिस्त बनायो। प्रजातन्त्र समक्ष आतङ्कवादले तेर्स्याएको एकदलीय निरंकुशताको चुनौतिलाई निस्तेज तुल्याउने गम्भीर प्रयास हुनै सकेन। राष्ट्रिय सुरक्षाको विषयमा हलुका टिप्पणी गर्ने बाटो हटेन। देश र जनताको सुरक्षाको लागि रातदिन क्रियाशील रहने सुरक्षा निकायहरूका कर्तव्यनिष्ठ अधिकारी तथा जवानहरूको देशभक्तिको सत्प्रयासमा बल पुऱ्याउने जिम्मेवारपन राजनीतिक दलहरूमा देखिएन। देश र जनताविरूद्ध चलिरहेको विनाशको दुष्कर्मलाई सदाको लागि अन्त गर्ने बहुदलीय प्रजातन्त्रवादीहरूबीच देशहितको बिन्दुमा निष्ठापूर्ण एकता कायम हुन सकेन। दलहरूले जनचाहना अनुसार राष्ट्रिय प्राथमिकता ठम्याउन पनि सकेनन्।

४ नेपाली जनताले इतिहासमा यस्तो आतङ्क, सास्ती र शोषण कहिल्यै भोग्नु परेको थिएन। अपराधीहरूबाट नै दण्डित हुनुपर्ने, आफ्नो वैध सम्पत्ति अपराधीहरूले कब्जा गर्दा पनि, निर्दोष बालबालिका, महिला र वृद्धहरूको निर्मम हत्या गर्दा पनि जनताको नाममा सत्तामा पुगेकाहरूबाट संरक्षण पाउन नसक्ने, जनताको प्रतिनिधित्व गर्छु भन्ने दलहरू जनताको पक्षमा नउभिने दुरवस्था कुनै पनि प्रजातन्त्रले कहिल्यै पनि भोग्नु परको थिएन। नेपाली जनताको चाहना र राष्ट्र हितलाई बेवास्ता गरी प्रायोजित भीडलाई दुराग्रहलाई राष्ट्रिय एजेण्डा बनाउन सकिँदैन। देश र जनताको भविष्यप्रतिको दायित्वबोधले धेरै पटक घच्घच्ययो। परिस्थिति एउटा यस्तो नाजुक मोडमा आइपुग्यो, जब देश र जनताको हितमा जनभावना बमोजिम निर्णय लिन हामी बाध्य हुनैपऱ्यो।

प्यारा देशबासीहरू,

५ राजा र जनताबीचको घनिष्ठ सम्बन्ध नै नेपालको स्वतन्त्रता, राष्ट्रिय एकता र निर्बाध सार्वभौमसत्ताको मुख्य कवच हो। देश र जनताको हितमा सदा सपर्पित रहने राजसंस्था र

देशभक्तिको संस्कार भएका जनता नै नेपाल अधिराज्यको इतिहासको गौरवमय अतीत हो, यही नै वर्तमान र भविष्य पनि हो। यही गौरवमय परम्पराको निरन्तरतामा लोकसम्मति अनुसार चल्नु नै राजसंस्थाको अपरिवर्तनीय प्रतिबद्धता रहँदै आएको छ। अधिनायकवाद वा निरंकुशता शावंशीय राजतन्त्रात्मक संस्कारकै असङ्गति हुन्। सामाजिक न्यायमा हामी विश्वास गर्दछौं। संवैधानिक राजतन्त्र र बहुदलीय प्रजातन्त्र नै सबै नेपलालीको अटल विश्वास तथा अपरिवर्तनीय प्रतिबद्धता भएको तथ्यसँग हामीले आफूलाई आत्मसात् गरेका छौं। शक्तिको केन्द्रीकरण प्रजातान्त्रिक मूल्य विपरीत हो भन्ने हाम्रो ठहर छ। माथिल्लो तहदेखि तल्लो तहसम्म निर्वाचित जनप्रतिनिधिहरूका निकायहरूलाई शक्ति विकेन्द्रीकरणको सिद्धान्तअनुसार राज्य संचालानको सच्चा हकदार बनाएर मात्रै प्रजातन्त्रको सार्थक अभ्यास गर्ने सकिन्छ भन्ने हामीलाई लाग्दछ। कुनै पनि नेपालीले दुःख कष्ट भोग्नु नपरोस्, सबैले सामाजिक, आर्थिक र राजनीतिक न्याय निर्वाधरूपमा पाउन् भन्ने हाम्रो चाहना छ। शासन संचालनमा आफ्नो चाहनाको पूर्ण मान्यता तथा आफ्नो हितको पूर्ण संरक्षण भएको अनुभूति जनताले सधैं गर्न पाउनै पर्छ भन्ने हाम्रो अडान छ। सबै देशभक्त प्रजातन्त्रवादीहरूको संयुक्त निर्क्योल, समझदारी र दूरदृष्टिबाट नेपाल अधिराज्यलाई परिपक्व प्रजातन्त्र र लोककल्याणकारी समाज निर्माणको फराकिलो राजमार्गमा उन्मुख गराउने हाम्रो चाहना छ। प्रजातान्त्रवादीहरूबीच राष्ट्रिय हितको मूल नीतिमा द्वन्द्व हुनै सक्तैन भन्ने हाम्रो ठहर छ।

६ नेपाल र नेपालीको हितका लागि दिगो शान्तिको पुनर्स्थापना तथा सार्थक प्रजातन्त्रको अभ्यास बाहेक हाम्रो अरू कुनै स्वार्थ छैन। राजसंस्था सस्तो लोकप्रियताबाट होइन, नेपाल राष्ट्र र नेपाली जनताको सर्वोत्तम हित र निरन्तर उन्नतिबाट मात्रै निर्देशित रहन्छ। जनताको प्रभावकारी सुधारहरूको चाहनालाई सबैले सम्मान गर्नै पर्दछ भन्ने हामीलाई लाग्दछ। कसैलाई पनि आफ्नो असहमति व्यक्त गर्ने, निराशा प्रदर्शन गर्न हतियार उठाउने बाध्यता मससुस गर्नु नपरोस्। जनताको शान्ति नखल्वलाइकन प्रभावकारी ढंगमा असहमति प्रदर्शन गर्ने अवसरको सुनिश्चितता होस् भन्ने हाम्रो चाहना छ। प्रजातन्त्रको निष्ठापूर्ण अभ्यास, सार्थक बजारमुखी अर्थतन्त्र, सुशासन, पारदर्शिता र भ्रष्टाचार मुक्त विधिको शासन नै जनताको स्पष्ट चाहना हो। प्रजातन्त्रको माध्यमबाट जनतालाई सुखी बनाउनु, युवापुस्तालाई उजज्वला भविष्प्रति आश्वस्त तुल्याउनु र नेपाललाई विश्व समुदायमा सम्मानपूर्ण स्थान दिलाउनु नै हाम्रो एकमात्र चाहना हो। हाम्रो सबै भाषा, सबै जाति, सबै संस्कृतिको समान उन्नतिबाट नेपाल अधिराज्यको विशिष्ट पहिचान कायम रहन्छ, सुदृढ रहन्छ।

७सार्वभौमसत्ता निहित नेपाली जनताको चाहनाबमोजि देशमा सकेसम्म शान्ति सुरक्षा कायम गरी २०६१ सालभित्र प्रतिनिधिसभाको निर्वाचन प्रारम्भ गर्ने दायित्व निर्वाहको गम्भीर प्रयास हुन सकेन, मतदाताहरू र दलहरूलाई निर्वाचनमा सहभागि हुन तयार पारेर कानुनी, व्यस्थापकीय,

प्राविधिक तयारीमा जुट्नु पर्नेमा चुनावको शाब्दिक रट लगाएर, मौखिक तत्परता र आतुरता देखाउनमा नै समय खेर फालियो। राष्ट्रियता, राष्ट्रिय एकता र सार्वभौमिकता बचाउन, देशमा शान्ति सुरक्षा कायम राख्न, देशलाई कुनै कारणबाट पनि बिग्रँदो स्थितिबाट बचाउने जिम्मेवारी पनि हामीमा भएकोले नेपाल अधिराज्यको संवैधानिक रीतिथिति र हामीबाट प्रयोग भई आएको राजकीय सत्ताको प्रयोग गरिबक्सी नेपाल अधिराज्यको संविधान, २०४७ को उपधारा (३) लाईसमेत विचार गरी देशमा शान्ति सुरक्षाको पुनर्स्थापना तथा प्रजातान्त्रिक व्यवस्थालाई शिघ्र क्रियाशील तुल्याउने जनताको चाहना पूरा गर्न हामीबाट वर्तमान मन्त्रिपरिषद् आजैबाट विघटन गरिबक्सेका छौं। अब गठन हुने मन्त्रिपरिषद् हाम्रै अध्यक्षतामा हुनेछ। आगामी ३ बर्षभित्र देशमा शान्ति सुव्यवस्था मिलाई प्रभावकारी सुधारहरू गरेर बहुदलीय प्रजातन्त्रलाई पुनः सक्रिय तुल्याउन अब गठन हुने मन्त्रिपरिषद् प्राथमिकताका साथ लाग्नेछ।

प्यारा देशवासीहरू,

८ सार्थक बहुदलीय प्रजातन्त्र नै जनताको प्रभावकारी शासन प्रणाली हो । सफल प्रजातन्त्र नै सक्कली जनवाद हो। यस्तो जनहितकारी, परिपक्व एवं सुसंस्कृत र सभ्य व्यवस्थालाई खल्वल्याएर, निर्दोष जनतालाई आतंकित तुल्याएर, जनतालाई त्रसित पारी जबरजस्ती चन्दा संकलन गरेर, असहमत हुनेहरूको निर्मम हत्या गरेर, विद्यार्थीहरूलाई अपहरण तथा गुरूहरूलाई पाशविक व्यवहार गरेर, सिधा जनतालाई झुठो आश्वासन र सपना बाँडेर, जनताको हितमा बनेका विकास योजनाहरू ध्वस्त पारेर चलाइएको देश र जनता विरोधी अपराधहरू अब बन्द हुनै पर्दछ। अब यस्ता देश र जनता विरोधी अपराधहरूलाई कानुनबमोजिम कडा कारबाही गरिनेछ। हाम्रा सुरक्षाकर्मीहरूलाई देश र जनताको हितमा अझै बढी सशक्त भई आतंकवाद समाप्त गरी शान्ति सुरक्षा पुनर्स्थापना गर्न खटाइएको छ। मानव अधिकारको सम्मान र संरक्षणमा राज्यका सबै अंगहरू विशेष रूपमा सतर्क र सजग रहनु पर्दछ। तर राज्य र आतंककारीलाई एउटै तराजुमा तौलिनु न्यायोचित हुँदैन। प्रजातन्त्रमा विश्वास गर्ने सबै शान्तिप्रेमी नेपाली जनताले शान्ति सुरक्षा कायम गर्ने कार्यमा सुरक्षाकर्मीहरूलाई साथ दिएका छन् र दिने नै छन्।

९ बाटो बिराएर देश र जनताविरूद्ध हतियार उठाएका, शान्ति र प्रजातन्त्रविरूद्ध आपराधिक कार्यमा संलग्न रहेकाहरूलाई हतियार बुझाएर शान्तिपूर्वक राष्ट्रिय राजनीतिको मूल प्रवाहमा समाहित हुन हामी आह्वान गर्दछौं। देशभक्तिको मिलनबिन्दुमा आफ्नो विचार मुखरित गर्न,आकांक्षा पूरा गर्न तथा देश र जनताको हितमान योगदान दिन सक्ने अवसरको सुनिश्चितता नै बहुदलीय प्रजातन्त्रको विशेषता हो। यो मौकाको उपयोग गरी राष्ट्रिय राजनीतिको मूल प्रवाहमा आउनेहरूका लागि राज्यका तर्फबाट सबै नागरिकहरूसरह अवसर र अधिकारविना भेदभाव प्राप्त हुने आश्वासन दिन चाहन्छौं। देश र जनताविरूद्ध आतंककारी गतिविधि कायमै राखेमा जनताले सहने छैनन्,कानुनले छाड्ने छैन।

प्यारा देशवासीहरू,

१० आतंकवादविरूद्ध नेपालको संकल्पलाई सराहना गर्दै उदारतापूर्वक साथ दिइरहेका मित्र राष्ट्रहरू, विकास प्रयासलाई अगाडि बढाई राख्न सहयोग गरिरहेका अन्तर्राष्ट्रिय दातृ तथा वित्तीय संस्थाहरूलाई हामी धन्यवाद दिन चाहन्छौं। भौगोलिक रूपमा परिभाषित हुनै नसक्ने आतंकवादको जोखिमलाई आज विश्व प्रजातन्त्रले समेत भोग्न परेको छ। वास्तवमा सानो देश जति सुरक्षित रहन्छ, जति स्थायित्व र सम्पन्नता सुनिश्चित हुन्छ भन्ने अनुभूति विश्व समुदायले गरी नै सकेको छ। यसै अनुकुल नेपाल आफ्नो हितमा र विश्व प्रजातन्त्रको हितमा आतंकवादलाई निस्तेज तुल्याउन कटिबद्ध भएको छ। नेपाल आफनो लागि शान्ति चाहन्छ, छिमेकीहरू र दक्षीण एसियाको लागि शान्ति चाहन्छ, विश्व शान्ति टड्कारो भइसकेको जोखिम हटाउन शान्ति चाहन्छ।

११ यसै क्रममा, बहुदलीय प्रजातन्त्मा हाम्रो प्रतिवद्धता अपरिवर्तनीयर रहेको तथा आर्थिक र संस्थागत सुधारहरू जारी रहने, सार्वजनीक खर्चको उपयोग तथा सार्वजनीक सेवा प्रणालीमा सुधारका प्रयासहरू अझै प्रभावकारी ढंगमा कायमै राखिने, ब्यांकिङ्क अनुशासन पुनर्वहाली गरिने, गरिबी न्यूनीकरणसम्बन्धि रणनीति तथा भ्रष्टाचारविरूद्ध प्रभावकारी कदम चालिने कुरा पनि उल्लेख गर्न चाहन्छौं।दिगो विकास अब नेपालको राष्ट्रिय एजेन्डा भएको छ। अब जनताले सुरक्षा र प्रजातन्त्रको भविष्यलाई जोखिममा पार्न दिइने छैन। नेपालविरूद्ध वा मित्रराष्ट्रविरूद्ध आतंकवादलाई नेपाली माटोमा आश्रय दिइने छैन। मित्रराष्ट्रहरूसंग वास्तविक र व्यावहारिकरूपमा आपसी हितका लागि सकारात्मक सम्बन्धमा जोड दिइनेछ।

१२ निरन्तर झाङ्गिदै गएको भ्रष्टाचारले राजनीति र प्रशासनलाई दूषित बनाएको मात्र होइन, प्रगतितर्फ अग्रसर हुनुपर्ने देशको पाइला पनि अवरूद्ध पारेको छ। भ्रष्टाचार हाम्रो समाजको लागि धमिरा सिद्ध भइसकेको छ। परिणामस्वरूप कानूनना आम जनताको विश्वास धरमराउन थालेको छ। यसैले जनताको चाहना र सुशासनको प्रमुख आवश्यकता पूरा गर्न न्यायको सिद्धान्त उल्लंघन नहुने गरी भ्रष्टाचार नियन्त्रणको लागि प्रभावकारी कदम अविलम्ब चालिनेछ।

१३ प्रजातन्त्र जीवन शैली बनोस्, राजनीति प्रजातान्त्रिक मूल्य र मान्यताबमोजिम चलून्, सबैले सबै क्षेत्रमा प्रजातान्त्रिक विचार पद्धतिलाई इमान्दारितापूर्वक अनुसरण गरून्,देश र जनताको हितले मात्रै सबैलाई सधैं निर्देशित गरोस् भन्ने नै हाम्रो चाहना हो।शान्तिपूर्ण वातावरणमा प्रजातान्त्रिक मूल्यहरूलाई जीवन्त तुल्याएर

एक उन्नतशील एवं विश्व समुदायमा सम्मानित नेपला नै सबै नेपालीहरूको भविष्यको परिकल्पना हो। मानव अधिकारको सम्मान र रक्षाले प्रजातान्त्रिक मूल्यको संरक्षण तथा प्रवर्द्धन

गर्ने मात्र हैन, २१ औं शताब्दी सुहाउँदो जीवन प्रणाली र सभ्यताको पनि विकास हुन्छ भन्ने हाम्रो विश्वास छ।

प्यारा देशवासीहरू,

१४ हामीबाट गरिबक्सेको निर्णयबाट जंगी, निजामती र कुनै पनि राष्ट्रसेवकले आफ्नो जिम्मेवारी, काम र कर्तव्यबाट विचलित हुन वा अल्मलिनु पर्दैन। आज नेपाल र नेपालीको भविष्यको लागि सर्वप्रथम हामी आफैंले कम्मर कसी अघी बढ्नु परेको छ।स्वतन्त्र सञ्चार क्षेत्र प्रजातन्त्रको चेतना वृद्धि गर्ने माध्यम हुन।राष्ट्रिय हितको सम्बर्धनमा यसको विशेष भूमिका रहन्छ।शासन शैलीसँगै जीवनपद्धतिलाई नै प्रजातान्त्रिक मूल्य र आदर्शबाट प्रेरित बनाउन सञ्चार माध्यमले सशक्त योगदान दिनेछन् भन्ने हामीले विश्वास लिएका छौं। यसै कुरालाई मनन गरेर बहुदलीय प्रजातन्त्रमा निष्ठा राख्ने सबैले आ-आफ्नो कर्तव्य पालन गर्ने छन् र सबै देशबासीहरूको साझा प्रयासबाट जनताको चाहना र देशको आवश्यकता पूरा हुनेछ भन्ने हामीबाट पूर्ण विश्वास लिएका छौं।

१५ आज देशले स्पष्ट अठोट गरेको छ। यस अनुकूल निर्णय पनि भएको छ। अशान्ति, असुरक्षा र द्वन्द्वग्रस्त अवस्थालाई बिसाएर देशले प्रजातन्त्र र प्रगतिको पक्षमा अग्रसर हुन पाइला सारेको छ। देश आतंकवादको चपेटामा परेको बेलामा सम्पूर्ण शान्ति तथा प्रजातन्त्रप्रेमी जनता एक हुनै पर्छ। यसैले अब हामी सामूहिक विविकबाट प्रभावित हौं, राष्ट्रिय दृष्टिकोणबाट परिचालित हौं। देश र जनताको शान्ति सुरक्षामा खलल पार्ने प्रजातन्त्रलाई सार्थक बनाउने प्रयासमा छेकेबार हाल्ने दुष्प्रयासलाई देश र जनताले सहने छैनन्। तर उदारताको नाममा हामीले हाम्रो जीवनपद्धतिको उच्चतम पक्ष अनुशासनलाई कहिले पनि बिर्सनु हुँदैन। एक्काइसौं शताब्दखको विचारपद्धति पनि यही नै हो। नेपालप्रति न्याय गर्ने नसक्ने, जनताको सामूहिक विवेकमा विश्वास गर्ने नसक्ने र शान्तिको पक्ष लिन नसक्नेलाई मातृभुमिको भार लाग्दछ भन्ने कुरा हामी फेरी दोहोऱ्याउन चाहन्छौं।

श्री पशुपतिनाथले हामी सबैको कल्याण गरुन्।

जय नेपाल!

**आई.के. महर्जन**ले काठमाडौं विश्वविद्यालयबाट इलेक्ट्रिकल तथा इलेक्ट्रोनिक्स इन्जिनियरिङमा स्नातक र त्रिभुवन विश्वविद्यालयबाट व्यवस्थापन विज्ञानमा स्नातकोत्तर गर्नुभएको छ। हाल उहाँ नेपाली इतिहास र संस्कृति अध्ययनमा रुचि राख्नुहुन्छ।

**चुरामणि मरासिनी** त्रिभुवन विश्वविद्यालयबाट राजनीतिशास्त्र विषयमा स्वर्णपदकसहित स्नातकोत्तर गर्नु भएको छ। वहाँ नेपाली राजनीतिक इतिहासका क्षेत्रमा अनुसन्धानरत हुनुहुन्छ।

**आर्तुरो एस्कोबार** नर्थ क्यारोलिना युनिभर्सिटीको मानवशास्त्र विभागका प्राध्यापक हुनुहुन्छ। इन्स्टिटच्युट अफ ल्याटिन अमेरिकन स्टडिजका निर्देशकसमेत रहनुभएका लेखक एस्कोबारको *इन्काउन्टरिङ डेभलप्मेन्टः द मेकिङ एण्ड अनमेकिङ अफ द थर्ड वर्ल्ड* नामक पुस्तकलगायत विकास र तेस्रो विश्वका सम्बन्धमा उनले दिएका लेक्चर, जर्नलमा प्रकाशित उनका लेख र अन्य पुस्तकहरू निकै चर्चित मानिन्छन्।

**कुन्दन अर्याल**ले आमसञ्चार तथा पत्रकारिता विषयमा स्नातकोत्तर गर्नुभएको छ र पत्रकार तथा मानव अधिकारकर्मीका रूपमा काम गरिरहनुभएको छ। औपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) का महासचिव अर्याल प्राध्यापन पेसामा संलग्न हुनुहुन्छ। उहाँले *नेपाली प्रेसमा कार्टुन* नामक पुस्तक प्रकाशन गर्नुभएको छ।

**जीवन राज शर्मा**ले अर्वन एण्ड रुरल डेभलपमेन्ट विषय लिएर टाटा इन्स्टिटच्युट अफ सोसल साइन्सेज, मुम्बईबाट सन् २००१ मा स्नातक गर्नुभएको छ। हाल उहाँ इडेनवर्ग युनिभर्सिटी, बेलायतबाट सोसल कन्सट्रक्सन अफ पपुलेसन मोविलिटीमा विद्यावारिधि गर्दै हुनुहुन्छ।

**बैरागी काइँला** नामले परिचित तिलविक्रम नेम्वाङ नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानको आजीवन सदस्य हुनुहुन्छ। नेपालका आदिवासी जनजातिहरूका संस्कृति, भाषा र साहित्यका सम्बन्धमा अनुसन्धानरत बैरागी काइँलाका *बैरागी काइँलाका कविताहरू* (२०३१), *तङ्सिङ तक्मा मुन्धुम* (२०५३) लगायतका पुस्तकहरू प्रकाशित भएका छन्।

**सुजित कर्ण**ले निर्मला निकेतन कलेज अफ सोसियल वर्क, मुम्बईबाट सोसल वर्कमा स्नातक गर्नुभएको छ। हाल उहाँ सेन्ट जेभियर्स कलेजमा प्राध्यापन पेसामा संलग्न हुनुहुन्छ।

**स्टेफनी लोटर**ले सामाजिक मानवशाष्त्रमा विद्यावारिधि गर्नुभएको छ। साउथ एसिया इन्स्टिच्युट अफ हेडेलवर्ग युनिभर्सिटीको प्रतिनिधित्व गर्दै दुई वर्षका लागि काठमाडौं आउनुभएको बेलामा पतनोन्मुख सहरी सम्भ्रान्त 'राणा' सम्बन्धी स्थलगत अनुसन्धान गर्नुभएको थियो।

**थियोडर रिकार्डी**

कोलम्बिया विश्वविद्यालयमा आबद्ध रहनुभएका प्रा. डा. थियोडर रिकार्डी इण्डोलोजी र तुलनात्मक भाषाशास्त्रीय अध्ययनका विशेषज्ञ हुनुहुन्छ। यसबाहेक लेखकका अन्य विषयगत विशिष्टीकरणमा कला, धर्म, संस्कृति र हिमालयन साउथ एसियन स्टडिज पर्दछन्।

**सोशल साइन्स बहाः** नेपालमा समाज विज्ञानलाई प्रबर्द्धन गर्ने उद्देश्यले २०५८ सालमा स्थापना भएको हो। यसले चार किसिमका कार्यक्रमहरु सञ्चालन गरिरहेको छ ।

**सोशल साइन्स बहाः पुस्तकालय**

यस पुस्तकालयमा समाजविज्ञानसम्बन्धी शास्त्रीय तथा सैद्धान्तिक, समसामयिक समाजविज्ञान र नेपालका विषयमा समेटिएका पुस्तक, र अप्रकाशित पिएचडी शोधपत्र, जर्नल तथा पिरियोडिकल्स, मोनोग्राफ र प्राज्ञिक कार्यपत्रहरु राखिएका छन् जहाँ नियमित रुपमा अन्य सामग्रीहरु थपिदैछ ।

**चार महिने इमर्सन कोर्ष अन कन्टेम्पोररी सोशल इस्यु**

यो कोर्ष नेपाली समाजका जल्दाबल्दा विषयहरुमा चासो राख्ने विद्वान तथा समाजविज्ञानको ज्ञान नभएका स्नातकहरुका लागि सञ्चालित अभिमुखीकरण कार्यक्रम हो ।

**कार्यशाला, सम्मेलन र लेक्चर**

बहाःले विद्वानहरुका लागि लेक्चरका माध्यमबाट आफ्ना सहकर्मीहरुसँग छलफल गर्ने अवसर प्रदान गर्छ । यसले नेपालका राष्ट्रिय स्तरका जल्दाबल्दा तर उपेक्षित विषयमा नेपाली समाजलाई जागरुक बनाउन छलफल र सम्मेलनको पनि आयोजना गर्छ । महेशचन्द्र रेग्मीले नेपालको समाजविज्ञानको विकासमा पुर्‍याएको योगदानको सम्मानस्वरुप बहाःले हरेक वर्ष महेशचन्द्र रेग्मी लेक्चर सञ्चालन गर्दै आएको छ । यस अन्तर्गत २०६१ भाद्रमा 'दार्जिलिङ्गमा नेपाली जाति र जनजातीय चिनारीका नयाँ अडानहरु' विषयमा डा. कुमार प्रधानले लेक्चर दिनु भएको थियो । २०६१ साल चैत्रमा 'नेपाल तराइ सन्दर्भ र सम्भावना' विषयमा दुई दिने सम्मेलनको आयोजना गरिएको थियो ।